श्रीहरिः

# भानुभक्तको रामायण

[ विविध पाठयुक्त तथा परिशोधित संस्करण ]

सम्पादक—

श्रीसूर्य्य विक्रम ज्ञवाली






प्रकाशक—

नेपाली साहित्य सम्मेलन, दार्जीलिंग

पश्चिम बंगका राज्यपाल डाक्टर हरेन्द्रकुमार मुखोपाध्याय
एम्. ए., पी-एच. डी., डी. लिट. का संरक्षकत्वमा प्रकाशित

द्वितीय संस्करण ] [ मूल्य २) दुई रुपियाँ

भा० भ० रा० क—

# Preface

Kavi Bhanubhakta Acharya's Ramayana in Nepali verse written round about 1840 is regarded not only as the earliest but, according to many, up to the present, the only high-class specimen of Nepali poetry. In addition, it is also valued as a scripture.

It occurred to me that a large-type edition of this book at a price which the people could afford to pay would be very useful for the Gurkhas who have settled for generations in Darjeeling District and the surrounding areas I am very glad that the help in cash, kind and labour that I was fortunate to receive in this behalf from generous-minded people in various walks of life has made it possible to bring out this variorum edition of Kavi Bhanubhakta Acharya's Ramayana at a cheap price.

At my request, Shri S. B. Gewali, B. A, B. T., an old pupil of mine, who at present is the Headmaster of Government High School, Darjeeling, undertook the task of preparing the manuscript of this sacred book noting down the variations in the reading and of correcting the proofs. He has also prepared a glossary which appears towards the end of the book and which should help the reader to understand the exact meaning of the more difficult and rarely used words used by the poet. Shri Gewali has also written a brief up-to-date life of Kavi Bhanubhakta Acharya using for this purpose

all the latest information available. He has performed this task on an honorary basis very ably for which he deserves the thanks of all concerned.

I am grateful to my esteemed friend, Shri Jwalaprasad Kanoria, who has taken keen interest all through in bringing out this edition and rendered valuable help by collecting donations and by arranging for the printing and the selection of the pictures which adorn this book. In addition, he put me into touch with the Gita Press and used his influence to induce it to undertake the work of printing the book.

The Gita Press, Gorakhpur, who undertook the printing work without any profit to themselves and have done it with great care and expedition, deserve our sincere gratitude for their meritorious work.

My sincere thanks are also due to Messrs Karam Chand Thapar & Bros. Ltd., Bengal Paper Mills, Tittaghur Paper Mills and the India Paper Pulp Co., Ltd, who were kind enough to donate 2 tons, 1½ tons, 1½ tons and 1½ tons respectively of paper for use in printing this book.

I am grateful that a number of charitably-minded gentlemen, including His Majesty the Maharajadhiraj of Nepal, made generous monetary contributions towards the publication of this book and its sale at a price much below the cost of production.

It is also a great pleasure to accord sincere thanks to my friend, Shri K. M. Munshi, Governor of Uttar Pradesh who, in the midst of his various preoccupations, agreed, at my request, to contribute the Introduction to the present edition.

| | |
|---|---|
| Raj Bhavan,<br>Darjeeling<br>The 27th October 1951. | (Shri) Harendra Coomar<br>Mukhopadhyaya<br>GOVERNOR OF WEST BENGAL. |



## List of donors to Nepali Ramayana Fund

| Sl. No | Name of the donor | Amount Rs. |
|---|---|---|
| 1. | H M. Maharajadhiraj of Nepal ... | 5,000/- |
| 2. | The public of Dubrajpur and Santhia ... | 2,277/15/6 |
| 3 | Shri G D Birla ... ... | 1,100/- |
| 4. | Shri Rameswar Lal Tantia ... .. | 1,001/- |
| 5. | Shri Sohan Lal Dugar ... ... | 1,001/- |
| 6. | Shri Chotelal Kanoria ... ... | 1,000/- |
| 7. | Shri J. K. Birla ... ... | 1,000/- |
| 8. | Shri Mohun Shamsher Jung Bahadur Rana, Ex-Prime Minister of Nepal ... | 1,000/- |
| 9. | Shri G. D. Binani ... .. | 1,000/- |
| 10. | Shri Amiya Kumar Banerji of Rampurhat | 767/4/- |
| 11. | Shri Baijnath Bhiwaniwalla ... ... | 501/- |
| 12. | Shri Dherajmull Gupta ... ... | 501/- |

13. Shri J. K. Birla ... ... 500/-
14. Shri B. Kanoria ... ... 500/-
15. Shri B. M. Birla ... ... 250/-
16. Shri K. L. Jatia ... ... 250/-
17. Shri Jawala Prasad Bharatia ... 250/-
18. Shri Mahabir Prasad Nathany ... 101/-
19. Shri Ramnarain Kayan & Shri Ram Niwas Chowdhury ... ... 101/-
20. Shri D. Kajaria ... ... 101/-
21. Shri Jiwan, Shri Bijoy Kumar and Sm. Bijoya Kumari Kanoria ... 101/-
22. Shri Sri Prakasa, Governor of Madras ... 100/-
23. Shri N. C. Chatterji ... ... 100/-
24. Shri Baijunath Bajoria ... ... 100/-
25. Shri Sugunchand Bagree ... ... 100/-
26. Shri R. K. Bhuwalka ... ... 100/-
27. Shri M. Ananthasayanam Ayyangar, Deputy Speaker, Lok Sabha ... 25/-
28. Shri S. Nijalingappa, M. P. ... ... 24/4/-
29. Shri O. V. Alagesan, Deputy Minister for Railways and Transport, Government of India ... ... 20/-
30. Rajkumari Amrit Kaur ... ... 10/-
31. Shri Raj Bahadur, Deputy Minister for Commerce, Government of India ... 10/-
32. Shri Satish Chandra Samanta, M. P. ... 10/-
33. Shri Surendra Nath Ghosh, M. P. ... 5/-
34. Balance of Nepali Gita Fund including sale proceeds ... ... 2,677/3/3

Total Rs. 21,584/10/9

# भूमिका

कवि भानुभक्तले नेपाली श्लोकमा सन् १८४० निर लेखेको रामायण आदि ग्रन्थ मात्र मानिदैन किन्तु घेरैका विचारमा यो वर्तमान समय सम्म नेपाली कविताको एक मात्र उच्च कोटिका कविताको उदाहरण छ। यो बाहेक धार्मिक शास्त्रका रूपमा पनी यसको आदर छ।

ठुला अक्षरमा छापियेको तथा साधारण मानीसले तिर्न सक्ने मोल भयेको यो पुस्तकको यौटा सस्करण भये दार्जीलिङ्ग जिल्ला तथा यसका चारै तिरका अञ्चलमा पुस्ता दर पुस्ता देखी बसोबासो गरी बस्ने गोर्खाली-हरुका निम्ती उपयोगी हुँदो हो भन्ने मलाई लाग्यो। जीवनका विविध क्षेत्रमा काम गर्ने दानप्रिय मानीसहरु बाट धन, जिनीस तथा परिश्रमको यो कामका निम्ती जो सहायता पाउने मेरो सौभाग्य भयो तेसले गर्दा कवि भानुभक्त आचार्यका रामायणको यो विविध पाठ तथा टीकाले युक्त सस्तो सस्करणको प्रकाशन सम्भव भयो।

मेरा आग्रहले मेरा एक जना पुराना शिष्य श्रीसूर्य विक्रम ज्ञवाली बी० ए०, बी० टी० ले जो अचेल दार्जीलिङ्ग गवर्मेंट हाइ स्कुलका प्रधानाध्यापक छन् यो पवित्र ग्रन्थको विविध पाठले युक्त लेखौट तयार पारे तथा यसको प्रफको सशोधन पनी उनले गरे। उनले तयार पारेको तथा पुस्तकका अन्त्यमा छापियेको टीका द्वारा कविले प्रयोग गरेका गाह्रारा तथा असाधारण शब्दहरुको वास्तविक अर्थ बुझ्न पाठकहरुलाई सहायता हुन पर्छ। श्रीसूर्य विक्रम ज्ञवालीले आज सम्म पाइयेका सामग्रीका आधारमा कवि भानुभक्त आचार्यको यौटा सामयिक जीवनी पनी लेखेका छन्। उनीले यो कार्य अवैतनिक रूपले बडो योग्यतापूर्वक गरेका छन् जसका निम्ती यो काम सित सम्बन्ध राख्ने सबैका उनी धन्यवादका अधिकारी भयेका छन्।

यो संस्करण प्रकाश गर्न आरम्भ गरे देखी अन्त्य सम्म अभिरुचि लीं चन्दा जम्मा गर्ने, यसका मुद्रणको व्यवस्था गर्ने तथा यो पुस्तकलाई अलंकृत गर्ने चित्रहरु संकलन गर्ने मेरा श्रद्धेय मित्र श्रीज्वालाप्रसाद कानोरियाको म आभारी छु। यो बाहेक उनले गीता प्रेस सित मेरो परिचय गराई दिये तथा त्यो प्रेसलाई आफ्नो प्रभावको उपयोग गरी यो छाप्न स्वीकार गराये।

गोरखपुरको गीता प्रेसले यो पुस्तक नाफा न लियेर छाप्न स्वीकार गरेको हुँदा तथा यसको बडो सावधानतापूर्वक शीघ्र मुद्रण गरेको हुँदा यो उत्तम कार्यका निम्ती गीता प्रेस हामी सबैका कृतज्ञताको अधिकारी भयेको छ।

मेसर्स करमचंद थापर एंड ब्रदर्स लिमिटेड, बेंगाल पेपर मिल्स, टीटागढ पेपर मिल्स तथा इंडिया पेपर पल्प कंपनी लिमिटेडले दयापूर्वक क्रमशः २ टन, १½ टन, १½ टन, १½ टन कागत यो पुस्तक छाप्न दान गरे बापत उनीहरुलाई पनी मेरो हार्दिक धन्यवाद छ।

नेपालका श्री ५ महाराजाधिराज समेत अनेक दानप्रिय सज्जन जसले यो पुस्तक प्रकाश गर्न तथा यसलाई सस्तो दाममा बेच्न सहायता गरे उनीहरुको पनी म कृतज्ञ छु।

आफु अनेक कार्यमा व्यस्त भये ता पनी मेरो आग्रह स्वीकार गरी वर्तमान संस्करणको प्रस्तावना लेखी दिये बापत उत्तर प्रदेशका राज्यपाल मेरा मित्र श्रीकन्हैयालाल माणिकलाल मुंशीलाई आफ्नो हार्दिक धन्यवाद निवेदन गर्दा मलाई बडो खुशी लागेको छ।

राजभवन
दार्जीलिङ्ग,
२७-१०-१९५४

श्रीहरेन्द्रकुमार मुखोपाध्याय
राज्यपाल, पश्चिम बङ्ग



## नेपाली-रामायण-प्रकाशन निधिका दाताहरुको नामावली

| दाताको नाम | दानको जम्मा |
| --- | --- |
| १. श्री ५ महाराजाधिराज, नेपाल | ५०००) |
| २. दुबराजपुर तथा सथियाका जनता | २२७७\|\|\|≡)\|\| |
| ३. श्री जी० डी० बिडला | ११००) |
| ४ श्रीरामेश्वरलाल ताँतिया | १००१) |
| ५. श्रीसोहनलाल दूगर | १००१) |
| ६. श्रीछोटेलाल कानोरिया | १०००) |
| ७. श्री जे० के० बिडला | १०००) |
| ८. श्रीमोहन संशेर जग बहादुर राणा, भूतपूर्व प्राइममिनिस्टर, नेपाल | १०००) |
| ९. श्री जी० डी० बिनानी | १०००) |
| १० रामपुर हाटका श्रीअमिय कुमार बेनर्जी | ७६७\|) |
| ११. श्रीबैजनाथ भिवानीवाला | ५०१) |
| १२ श्रीधिराजमल गुप्त | ५०१) |
| १३. श्री जे० के० बिडला | ५००) |

| | |
|---|---|
| १४. श्री बी०. कानोरिया | ५००) |
| १५. श्री बी० एम्० बिड़ला | २५०) |
| १६. श्री के० एल० जाटिया | २५०) |
| १७ श्रीज्वाला प्रसाद मरतिया | २५०) |
| १८. श्रीमहावीर प्रसाद नथनी | १०१) |
| १९. श्रीरामनारायण कयान तथा श्रीरामनिवास चौधरी | १०१) |
| २०. श्री डी० काजरिया | १०१) |
| २१ श्रीजीवन, श्रीविजयकुमार तथा श्रीमती विजयकुमारी कानोरिया | १०१) |
| २२. श्रीश्रीप्रकाश, राज्यपाल, मद्रास | १००) |
| २३. श्री एन० सी० चटर्जी | १००) |
| २४. श्रीबैजुनाथ बाजोरिया | १००) |
| २५ श्रीसुगनचन्द्र बागरी | १००) |
| २६. श्री आर० के० भुवाल्का | १००) |
| २७. श्री एम० अनाथशयनम् आयगर लोकसभा | २५) |
| २८. श्री एस० निजलिंगप्पा एम० पी० | २४।) |
| २९. श्री ओ० बी० अल्गेसन, उपमन्त्री, | २०) |
| ३०. राजकुमारी अमृत कौर | १०) |
| ३१. श्रीराज बहादुर | १०) |
| ३२. श्रीसतीशचन्द्र सामन्त एम० पी० | १०) |
| ३३. श्रीसुरेन्द्रनाथ घोष एम० पी० | ५) |
| ३४. नेपाली गीताको बाँटी तथा बिक्री बाट प्राप्त | २६७७=)। |
| | जम्मा २१५८४॥=)॥। |



# Introduction

At the request of my friend Dr H. C. Mookerjee I agreed to write a short introduction to Bhanubhakta's Ramayana in the Nepali language the publication of which he has sponsored It is difficult for one who does not know the Nepali language to do full justice to this work. However, I venture to comply with the request as best as I can

The Ramayana, along with the Mahabharata and the Puranas, has played a significant role in the evolution of Indian languages and culture and has exerted tremendous influence on the life of the people To millions of people in India even today the mere name of Rama brings solace and strength The popularity of the story of Rama is not confined to the borders of India, the Ramayana is well known in Greater India as well And the glory of Rama is everlasting for is it not the promise of Lord Brahma to Valmiki

यावत्स्थास्यन्ति गिरय सरितश्च महीतले ।
तावद्रामायणकथा लोकेषु प्रचरिष्यति ॥

'As long as in this firm set land
The streams shall flow, the mountains stand,
So long throughout the world be sure
The great Ramayan shall endure'

It is interesting to observe that Nepal, which retained its independence when in North India MSS of an early date were being lost or destroyed occupies a unique place in the history of the critical editions of the Mahabharata and Ramayana Dr Sukthankar has stated that the earliest MSS of the Adiparva of the Mahabharata that he used in constituting the critical text came from Nepal Rajaguru Hemaraja being the discoverer of the MSS Among 219 Ramayana MSS from all parts of the world so far collected by the Oriental Institute of Baroda for the critical edition of the Ramayana, the

earliest MSS. hails from Nepal which is preserved in the Bir Library, Kathmandu, and is dated V. S. 1076.

Bhanubhakta's Nepali Ramayana is a free and condensed rendering of the Adhyatma Ramayana, containing over a thousand verses of four lines each written in standardized Nepali language. The poet has used classical Sanskrit metres like Indravajra, Upajati, Drutavilambita, Vasantatilaka, Malini, Mandakranta, Sikharini, Sardulavikridita and Sragdhara. Though translated from Sanskrit the work is said to read like an original composition. The translation follows the original with regard to facts and arrangement and retains its supernatural elements in the character of Rama and the episodes in the Ramayana. Long *Stutis* are generally omitted and the incidents are condensed. At places, the poet has added a Nepali touch or added something of his own to enhance the local attraction of the work.

Like Tulasibas, Bhanubhakta has used homely language and has employed Arabic and Persian words then current in the vernacular; the aim of both was to reach the masses; and both were equally successful. On account of its simplicity, lucidity, elegance and sweetness, Bhanubhakta's Ramayana is held in the highest esteem by the people of Nepal. It is equally popular in palaces and huts, is recited in every household during marriage ceremonies and is learnt by heart by thousands.

II

Born in 1814 at Tanahun, less than a hundred miles west of Kathmandu, in a well-to-do Brahmin family, Bhanubhakta received early education in Sanskrit literature and grammar under his grandfather Sri Krishna Acharya. A casual remark by a grass-cutter about the importance of virtue and fame and of immortalizing one's name proved a turning point in Bhanubhakta's life when he was about twenty. He started writing Ramayana in Nepali

verse After finishing the first canto, he could not continue his work and entered Government service He was put in prison after two years' service for failure to account for state funds During six months of prison life he finished four more cantos He was later acquitted and then he completed the Ramayana by writing the remaining two cantos

Besides the Ramayana, Bhanubhakta has composed very popular religious and devotional poems Despite his being a *Bhakta* unlike several devotional poets of northern India Bhanubhakta was a man of the world, full of fun and humour His humorous poems are very popular

Bhanubhakta is rightly regarded as the father of the modern Nepali language and literature and a great national hero The language used by poets before Bhanubhakta was much influenced by Braja Bhasha Bhanubhakta for the first time wrote in the standard language used by the cultured classes of Nepal and his language came to be recognized as the standard Nepali

Different sections of the people of Nepal were welded into a nation and brought under one political rule in the beginning of the nineteenth century The new nation however, was wanting in linguistic and cultural ties strong enough to make it homogeneous By providing a cultural and linguistic source of unity for the various classes of people Bhanubhakta has rendered a unique service to Nepal, by his Ramayana he created a great binding force, Nepali language became standardized to develop into a common language

To the rest of India this work is of considerable interest in assessing the fundamental unity of modern Indian languages and the unity of religious and literary inspiration which have maintained cultural homogeneity, for though Nepal is politically an independent country, in social, religious and cultural

and literary matters, it forms with India a single unit.

III

For the benefit of those who are not conversant with the Nepali language, I am giving the first six *Shlokas* of the Ramayana of Bhanubhakta with a free English translation. This will enable students of language and literature in India to see how close is the relation between the language and literature of Nepal with those of the rest of India.

एक् दिन् नारद सत्यलोक् पुगि गया लोकको गरूँ हित् भनी ।
ब्रह्मा ताहिँ थिया पर्‍या चरणमा खुसी गराया पनी ॥
क्या सोध्छौ तिमि सोध भन्छु म भनी मर्जी भयेथ्यो जसै ।
ब्रह्माको करुणा बुझेर ऋषिले बिन्ती गर्‍या यो तसै ॥

*One day Narada went to Satyaloka with a view to do good to the world. Brahma was there and he fell at his feet so he was pleased. As soon as Brahma permitted him to ask what he desired to ask, he said to him knowing that Brahma was pleased.*

हे ब्रह्मा जति छन् शुभाशुभ सबै सुनी रह्याँछु कछु ।
बाँकी छैन तथापि सुन्न अहिले इच्छा म यो गर्दछु ॥
आउला जब यो कली बखतमा प्राणी दुराचार् भई ।
गर्न्याछन् सब पाप् अनेक् तरहका निष्फिका मतीमा गई ॥

Oh Brahma, I have heard everything, auspicious and inauspicious. There is nothing left for me to hear, yet I have a desire. When the Kali Yuga will come, human beings will be loose in morals and will commit sins of many kinds being impelled to do so by low desires.

साँचो बात गरैन कोहि अरुकै गर्नन् त निन्दा पनी ।
आर्काको धन खानलाइ अभिलाष् गर्नन् असल् हो भनी ॥
कोही जन् त परस्त्रिमा रत हुनन् कोही त हिंसा महाँ ।
देहैलाइ त आत्म जानि रहनन् नास्तिक् पशु झैं तहाँ ॥

Some will not speak the truth, some will speak ill of others. Some will desire to possess the wealth of others thinking that that is good. Some will be infatuated towards the wives of others and some will

have a liking for violence. They will consider body to be the soul like beastly atheists.

कामका चाकर हैं भयेर रहनन् स्त्रीलाइ द्यौता सरी ।
मात्तन् पीतृ र मातृलाई बुझि खुप् शत्रू सरीका गरी ॥
ब्राह्मण् भै कन वेद् वेचि रहनन् कोही पढुन् ता पनी ।
धन् ठूलो छ पनी भन्यार सहज धन् आर्जन् गरौंला भनी ॥

Slaves of passion they will treat wife as a god. Fathers and mothers will be like enemies in their eyes Being Brahmins they will sell the Vedas Even if some study them, they will do so for earning wealth, thinking wealth to be a great object

जाती धर्म रहैन क्षत्रिहरुमा जो छन् ह नीचहरू ।
शूद्रादी त तपस्वि होइ रहनन् ब्राह्मण् सरीका बरू ॥
स्त्री धेर् भ्रष्ट हुनन् पती र ससुराको द्रोह ठूलो गरी ।
यस्ता नष्ट कसोरि मुक्त त हुनन् संसारसागर् तरी ॥

Kshatriyas will not observe the rules of the caste and those that are low born such as Sudras will *perform austerities* like the Brahmins Many women will be ruined by showing hostility to their husbands and fathers-in-law How will such fallen people be able to attain salvation having crossed the ocean of the world?

यो चिन्ता मनमा भयो र अहिले सोधूँ उपायै भनी ।
आयाको छु दयानिधान कसरी तर्नन् सहज् ई भनी ॥
यस्ताकाइ उपाय तर्न सजिलो कुन् हो उ आज्ञा गरी ।
मेरो चित्त बुझाइ बक्सतु इवस् बयाले इ जान्छन् तरी ॥

This is the anxiety in my mind and I have come to ask for a way out. Oh ocean of kindness, how will these cross the ocean of the world easily? By telling me the way by which they can cross the *ocean of the world easily, please satisfy me.*

IV

I trust that the publication of this work will not only help Nepal but the rest of India in appreciating this fundamental homogeneity

Shri Kanialal Maneklal Munshi
Governor, Uttar Pradesh

# प्रस्तावना

मेरा मित्र डाक्टर हरेन्द्रकुमार मुखोपाध्यायका आग्रहले नेपाली भाषामा लेखियेको भानुभक्तका रामायणको यौटा सानो प्रस्तावना लेख्न मैले स्वीकार गरें । यो रामायणको प्रकाशन मेरा मित्र बाट हुँदै छ । नेपाली भाषा न जान्ने मानीस बाट यो ग्रन्थका विषयमा पूर्ण न्याय हुनु सम्भव छैन । तै पनी आग्रहका रक्षाका निम्ती आफुले सक्के सम्म गर्ने म साहस गर्छु ।

रामायण, महाभारत तथा पुराणहरुको भारतीय भाषा तथा संस्कृति-का विकाशमा महत्वपूर्ण भाग छ तथा मानीसका जीवनमा पनी इनीहरुले ठुलो प्रभाव पारेका छन् । आज पनी भारतवर्षका लाखौं मानीस रामनाम द्वारा शान्ति तथा शक्ति प्राप्त गर्छन् । रामको लोकप्रियता केवल भारतमा

मात्र सीमाबद्ध छैन किन्तु बृहत्तर भारतमा पनी यो राम्ररी परिचित छ। रामको गौरव शाश्वत छ किन भने ब्रह्माले वाल्मीकि सित के यसको प्रतिज्ञा गरेको छैन

यावत्स्थास्यन्ति गिरयः सरितश्च महीतले।
तावद्रामायणकथा लोकेषु प्रचरिष्यति॥

'जैले सम्म यो पृथिवीमा पर्वतहरु खड़ा रहनेछन्, नदीहरु बग्नेछन्, तैले सम्म समस्त संसारमा रामायणको कथा जीवित रहने छ।'

उत्तर भारतमा प्राचीन हस्तलिखित पुस्तकहरु हराउँदा वा नष्ट गरिंदा नेपालले आफ्नो स्वतन्त्रता रक्षा गरेको थियो। महाभारत तथा रामायणका शुद्ध पाठका इतिहासमा नेपालको अनुपम स्थान छ। महाभारतको आदिपर्वको सबै भन्दा पुरानो प्रति जस लाई उनले शुद्ध पाठ निर्णय गर्न उपयोग गरेका थिये सो नेपाल बाट प्राप्त भयेको हो भनी डाक्टर सुकथनकरले भनेको छ। यो लेखौटको आविष्कार राजगुरु हेमराज बाट भयेको हो। रामायणको यौटा शुद्ध पाठले युक्त संस्करण तयार गर्न भनेर समस्त संसार बाट बडोदाको ओरियंटल इन्स्टिच्युटमा संग्रह गरियेका रामायणका २१९ हस्तलिखित प्रतिहरु मध्ये सबै भन्दा प्राचीन प्रति नेपाल बाट आयेको छ। यो काठमाडुको वीर लाइब्रेरीमा सुरक्षित छ तथा यसको लेखनतिथि विक्रम संवत् १०७६ हो।

भानुभक्तको नेपाली रामायण अध्यात्मरामायणको स्वतन्त्र तथा छोटकरी अनुवाद हो। यसमा विशुद्ध नेपाली भाषामा लेखियेका चार चरण भयेका एक हजार भन्दा बढ्ता श्लोक छन्। कविले प्राचीन संस्कृत छन्द जस्तै इन्द्रवज्रा, उपजाति, द्रुतविलम्बित, वसन्ततिलका, मालिनी, मन्दाक्रान्ता, शिखरिणी, शार्दूलविक्रीडित तथा स्रग्धराको उपयोग गरेका छन्। संस्कृत बाट अनुवाद गरियेको भये ता पनी यो ग्रन्थ पाठ गर्दा मौलिक ग्रन्थ पढे जस्तो अनुभव हुन्छ भन्ने मानीसको भनाई छ। मूल रामायणको घटना तथा विषय-न्यासको यो अनुवादमा अनुसरण

गरियेको छ तथा रामका चरित्रमा तथा रामायणका अरु घटनाका वर्णनमा आदिभौतिक तत्वको पनी रक्षा गरियेको छ। यसमा लामा स्तुतिहरु प्राय: छोडियेका छन् औ कथाहरु छोट्याइयेका छन्। ठाउँ-ठाउँमा नेपाली ढाँचाको समावेश गरी वा केही कुरा आफुले थपी कविले यसलाई स्थानीय मानीसलाई अधिक रुचिकर तुल्याउने चेष्टा गरेका छन्।

तुलसीदास झैं भानुभक्तले पनी सरल भाषा प्रयोग गरेका छन् औ तिन ताका भाषामा प्रचलित अरबी तथा फारसी शब्द पनी व्यवहार गरेका छन्। दुवैको उद्देश्य जनता नेर पुग्ने थियो ओ दुवै समान रूपले सफल भयेका छन्। यसको सरलता, प्रसाद, लालित्य ओ मधुरताले गर्दा नेपालका मानीस भानुभक्तको रामायणलाई अत्यन्त आदरका दृष्टिले हेर्छन्। यो दरबार तथा छाप्रो दुवै ठाउँ उत्तीकै लोकप्रिय छ, विवाहोत्सवमा घर-घर यसको पाठ गरिन्छ औ हजारौं मानीसले यसलाई कण्ठ पारेका छन्।

( २ )

काठमाडुका पश्चिममा १०० मील भन्दा थोरै पर अवस्थित तनहुँमा सन् १८१४ मा भानुभक्तको यौटा खाईहाल्दो ब्राह्मण परिवारमा जन्म भयेको थियो। आफ्ना बाजे श्रीकृष्ण आचार्य बाट भानुभक्तले संस्कृत साहित्य तथा व्याकरणको प्रारम्भिक शिक्षा पाये। घाँसीको धर्म, यश तथा नाम अमर गराउने कुरा सम्बन्धी यौटा अचिन्तित उक्ति भानुभक्तको २० वर्ष जती उमेरमा उनका जीवनमा परिवर्तन ल्याउने विषय भयो। नेपाली श्लोकमा रामायण लेख्न उनले आरम्भ गरे। प्रथम काण्ड समाप्त गरे पछी उनीले यो काम गरी रहन सकेनन् औ उनीले सरकारी नोकरी गरे। सरकारी धनको हिसाब बुझाउन न सक्दा दुई वर्ष पछी उनी थुना परे। छ महिनाको आफ्नो दुःखलाग्दा जीवनमा उनीले अरु चार काण्ड लेखी सिद्ध्याये। बन्धनमुक्त भये पछी उनले बाकी दुई काण्ड लेख्दा रामायण समाप्त गरे।

रामायण बाहेक भानुभक्तले धार्मिक तथा उपासनाप्रधान अत्यन्त लोकप्रिय कविताको पनी रचना गरेका छन्। भक्त भये ता पनी उत्तर भारतका अनेक भक्त कविहरुका विपरीत भानुभक्त व्याउ ठट्टा गर्ने हँसिया

प्रकृतिका यो संसारका मानीस थिये। उनका हँसिला कविता बडा लोकप्रिय छन्।

आधुनिक नेपाली भाषा तथा साहित्यका जनक तथा यौटा महान् जातीय वीर भानुभक्त हुन् भन्ने विचार उचित छ। भानुभक्त भन्दा अघी कविहरुले उपयोग गरेको भाषामा ब्रजभाषाको निकै प्रभाव परेको थियो। नेपालको शिष्ट सम्प्रदायले उपयोग गर्ने आदर्श भाषा भानुभक्तले पहिलो चोटी लेखे औ उनको भाषा आदर्श नेपाली हो भनी मान्य भयो।

उनइसौं शताद्विका आरम्भमा नेपालका विविध वर्गको जातिका रूपमा एकीकरण भयो औ यो जाति यौटा राजनीतिक शासनका अधीन भयो। यो नवीन जाति सित यसलाई एक तुल्याउन समर्थ भयेको भाषा तथा संस्कृतिका परस्पर बाँध्ने साधनको अभाव थियो। विविध वर्गका मानीसलाई मिलाउने एकताको मूल भाषा तथा संस्कृति प्रदान गरेर भानुभक्तले नेपालको अनुपम सेवा गरे, उनले रामायण द्वारा परस्पर मिलाउने यौटा ठुलो शक्ति सृष्टि गरे; सर्वसाधारणको भाषाका रूपमा विकसित हुने प्रामाणिक रूप नेपाली भाषाको भयो।

भारतवर्षको बाँकी भागलाई आधुनिक भारतीय भाषाहरुको मौलिक एकता बुझ्न तथा धार्मिक औ साहित्यिक प्रबोध जुन द्वारा सांस्कृतिक एकताको रक्षा भयेको छ बुझ्न यो ग्रन्थ निकै मनोहर छ; किन भने नेपाल राजनीतिक दृष्टिले स्वतन्त्र देश भये ता पनी सामाजिक, धार्मिक, सांस्कृतिक तथा साहित्यिक विषयमा नेपाल भारतवर्ष सित मिलेर एक भयेको छ।

( २ )

नेपाली भाषा सित संसर्ग न भयेका मानीसहरुका लाभका निम्ती भानुभक्तको रामायणका प्रथम छ श्लोक तल मैले स्वतन्त्र अङ्ग्रेजी अनुवाद सहित सारेको छुं। नेपालको भाषा तथा साहित्य सित बाँकी भारतका भाषा तथा साहित्यको कती नजीकको सम्बन्ध रहेछ सो बुझ्न यसले भारतीय भाषा तथा साहित्यका विद्यार्थीलाई सहायता गर्ने छ।

एक दिन् नारद सत्यलोक् पुगि गया लोक्को गरूँ हित् भनी।
ब्रह्मा ताहिँ थिया पऱ्या चरणमा खुसी गराया पनी॥
क्या सोध्छौ तिमि सोध भन्छु म भनी मर्जी भयेथ्यो जसै।
ब्रह्माको करुणा बुझेर ऋषिले बिन्ती गऱ्या यो तसै॥ १॥
हे ब्रह्मा जति हुन् शुभाशुभ सबै सूनी रह्याँछू कछू।
बांकी छैन तथापि सुख अहिले इच्छा म यो गर्दछू॥
आउला जब यो कली बखतमा प्राणी दुराचार् भई।
गर्न्याछन् सब पाप् अनेक् तरहका निच्का मतीमा गई॥ २॥
साँचो बात गरैन कोहि अरुकै गर्नन् त निन्दा पनी।
आर्काको धन खानलाई अभिलाष् गर्नन् असल् हो भनी॥
कोही जन् त परस्त्रिमा रत हुनन् कोही त हिंसा महाँ॥
देहैलाइ त आत्म जानि रहनन् नास्तिक् पशू झैं तहाँ॥ ३॥
कामूका चाकर झैं भयेर रहनन् स्वीलाइ चौता सरी।
मारन् पीतृ र मातृलाइ बुझि खुप् शत्रू सरीका गरी॥
ब्राह्मण् भै कन वेद बेचि रहनन् कोही पढुन् ता पनी।
धन् ठूलो छ पनी भन्या सहज धन् आर्जन् गरौंला भनी॥ ४॥
जाती धर्म रहैन क्षत्रिहरमा जो छन् ई नीचाहरू।
शूद्रादि त तपस्वि होइ रहनन् ब्राह्मण् सरीका बरू॥
स्त्री घेर् भ्रष्ट हुनन् पती र ससुराको द्रोह ठूलो गरी।
यस्ता नष्ट कसोरि मुक्त त हुनन् संसारसागर् तरी॥ ५॥
यो चिन्ता मनमा भयो र अहिले सोधूँ उपायै भनी।
आयाको छु दयानिधान कसरी तर्नन् सहज् ई भनी॥
यस्तालाइ उपाय तर्न सजिलो कुन् हो उ आज्ञा गरी।
मेरो चित्त बुझाइ बक्सनु हवस् क्याले इ जान्छन् तरी॥ ६॥

( ४ )

यो ग्रन्थको प्रकाशन द्वारा यो मौलिक एकता बुझ्न नेपाललाई मात्र होइन किन्तु भारतको बांकी भागलाई पनी सहायता गर्ने छ भन्ने मेरो विश्वास छ।

कन्हैयालाल माणिकलाल मुंशी, राज्यपाल, उत्तर प्रदेश

# भानुभक्तको संक्षिप्त जीवनचरित्र

अङ्ग्रेज तथा नेपालीहरुको युद्ध हुनु भन्दा केही महिना अघी सन् १८१४ अर्थात् आषाढ २९ गते सम्वत् १८७१ का दिन भानुभक्तको जन्म भयेको हो। पश्चिम नेपालमा सप्तगण्डकी प्रदेशमा अवस्थित तनहुँको रमघा ग्राममा इनको जन्म यौटा सम्पन्न तथा सम्भ्रान्त ब्राह्मण कुलमा भयेको थियो। त्यो अवस्थामा श्रीकृष्ण आचार्य नामक एक जना ब्राह्मणले निकै ख्याति तथा मर्यादा प्राप्त गरेका थिये। इनका ६ भाई छोरा थिये। ती मध्ये जेठा धनञ्जयका एक मात्र पुत्र भानुभक्त हुन्। ज्येष्ठ पुत्र निरको नाती भानुभक्त आफ्ना बाजे श्रीकृष्ण आचार्यका विशेष रूपले प्रियपात्र भयेको बुझिन्छ।

सरकारी जागीर त्याहाँ भानुभक्तका पिता खरदार भयेका थिये। यो कारणले तथा जेठो नाती भयेको हुनाले पनी होला भानुभक्त आफ्ना बाजे श्रीकृष्ण आचार्यका लालन-पालनमा हुर्के। इनको आरम्भिक शिक्षा पनी इनका बाजे श्रीकृष्ण आचार्य द्वारा नै भयेको थियो। संस्कृत साहित्य तथा व्याकरण सगसगै इनले ज्योतिष पनी पढेका थिये। पुराण भन्न सक्ने तथा चिना चपेटा बनाउन जान्ने हुनु नै तिन ताकका ब्राह्मणकुमारहरुको शिक्षाको साधारण उद्देश्य थियो। भानुभक्तलाई पढेको कुरो छिटै आउँथ्यो तथा १२ वर्षका उमेरमा नै जन्मपत्रको तत्व इनी बुझ्ने भै सकेका थिये। यो कारणले इनी मेधावी बालक थिये भन्ने अनुमान हुन्छ।

इनी २२ वर्षको हुँदा इनका जीवनमा यौटा यस्तो प्रभाव पर्‍यो जसले गर्दा भानुभक्तका हृदयमा कविताको प्रेम उत्पन्न भयो। एक दिन वनमा इनी रुखका छहारीमा बसेका वेलामा योटा घाँसी सित इनको भेट भयेछ। कुरा कहानी गर्दा त्यो घाँसीले आफ्नो अल्प कमाई बाट खाईखाई जगेरा गरेको पैसाले आफ्ना गाउँमा कुवा खनायेको कुरा गरेछ। यसो गर्दा धर्म पनी हुने तथा पछी सम्म फलानाले खनायेको इनार भनी आफ्नो

नाउँ पनी चल्ने भनेर पनी उसले भनेछ। घासीको यो कुरा सुनेर भानुभक्तका मनमा ठुलो प्रभाव परेछ । म सँग सबै थोक पुगी सरी आयेको भये ता पनी मैले न धर्म गर्न सकेको छु न आफ्नो नाउँ नै चलाउन सकेको छु भनी उनी उद्वेगले पूर्ण भयेछन् । यही भावनाको परिणामस्वरूप उनले तत्काल दुई वटा कविता लेखे । ती इने हुन् ।

भर् जन्म घाँस तिर मन् दिइ धन् कमायो ।
नाम् क्यै रहोस् पछि भनेर कुवा खनायो ॥
घाँसी दरिद्रि घरको तर बुद्धि कस्तो ।
मो भानुभक्त धनि भै कन आज यस्तो ॥ १ ॥
मेरा इनार न त सत्तल पाटि क्यै छन् ।
जे धन् र चीजहरु छन् घर भित्र नै छन् ॥
तेस् घाँसिले कसरि आज दियेछ अर्ति ।
धिक्कार हो मकन बस्नु न राखि कीर्ति ॥ २ ॥

अब भानुभक्तले काव्य-रचना गरी लोक-सेवा गर्ने निश्चय गरे । नेपाली भाषामा रामायण लेख्ने उनको विचार भयो । सन् १८४१ तिर बालकाण्ड लेखी पनी सकियो । पहिलो झोंकमा यती काम भये पछी रामायण लेख्ने काम केही कालका निम्ती थन्कियेर बसेको बुझिन्छ ।

सन् १८४९ मा भानुभक्त पहिलो पटक नेपालको राजधानी काठमाडु वा कान्तिपुर आये । यौटा छिमेकी सँग जगाका विषयमा झगरा परेको हुनाले तेसैका सम्बन्धमा मुद्दा गर्न उनले काठमाडु आउन परेको थियो । यो समयमा बालाज्युको वर्णन तथा कान्तिपुरको वर्णन भयेका भानुभक्तले लेखेका देशभक्तिपूर्ण कविता अध्यावधि अत्यन्त प्रसिद्ध छन् । काठमाडुमा निसाफ हुँदा भानुभक्तले झगरा जीते । यसका सँगसँगै दरबारमा पनी उनको प्रवेश भयो तथा उनले मुख्त्यार जगबहादुरका भाई कृष्णबहादुरका ढोकाको आश्रय लिये । फलस्वरूप सन् १८५० मा जागीर पाई उनी मदेस तिर आये । दुई वर्ष जागीर खाई कागतपत्र बुझाउन न सक्दा उनलाई कुमारीचोकले थुन्यो । झ्यालखानमा बस्ता उनको प्रथम प्रेम उनका हृदयमा फेरी प्रस्फुटित भयो र उनी झ्यालखानमा नै रामायण

लेख्न थाले । उनी ५ महिना थुना परेका थिये तथा यसै अवधिमा उनले अयोध्याकाण्ड, अरण्यकाण्ड, किष्किन्धाकाण्ड तथा सुन्दरकाण्ड रामायणको रचना गरे । फेरी अर्को वर्ष युद्धकाण्ड तथा उत्तरकाण्ड काठमाडुमा नै लेखी रामायण समाप्त गरियो । यसरी नेपाली साहित्यको यो अद्वितीय ग्रन्थ ११ वर्षमा समाप्त भयो ।

रामायण समाप्त भयेका केही पछी भानुभक्तले प्रश्नोत्तरी तथा भक्तमाला नामक आफ्ना प्रसिद्ध कविताहरु बनाये । भक्तमालाका प्रथम १५ श्लोकको मात्र पाल्पामा गरियेको संस्कृत अनुवाद पाइयेको छ । पछिल्ला ७ श्लोकको संस्कृत अनुवाद न गरियेका कुरा बाट ती पछी रचना गरियेका कुराको अनुमान हुन्छ । यसको कारण मैले यो सम्बन्धमा सुनेको यौटा कुरा हुन सक्छ । आफ्नो नाना पर्ने कुनै यौटी महिला विधवा भयेका समयमा भानुभक्तले भक्तमालाका पछिल्ला ७ श्लोक लेखी भक्तमाला समेत उनलाई पाठ गर्न दियेका हुन् भन्ने कुरा बाल्यावस्थामा मैले सुनेको हुँ ।

सन् १८४९ देखी पछो भानुभक्त बराबर काठमाडु आउन तथा वहाँ निकै समय सम्म बस्न लागेका थिये । उनी पहाडिया बाट सदरिया भयेका थिये । काठमाडुमा अचेल जहाँ वीर अस्पताल छ तेही ठाउँमा उनको आफ्नो घर वा डेरा थियो भन्ने कुरा पनी सुनियेको छ ।

एक चोटी सन् १८६२ मा काठमाडु बाट तनहुँ जाँदा बाटामा तारापति उपाध्याय नामक आफ्ना मित्रका घरमा भानुभक्त बास बसे छन् । राती त्यो घरमा सासुबुहारीको बाझाबाझ परेछ । त्यो सुनी उनी उठे छन् र सोही रात भरीमा ३३ श्लोक भयेको वधूशिक्षा नामक कविता भानुभक्तले लेखे छन् तथा सो कविता उनीहरुलाई पढ्न दिये छन् ।

अध्यात्मरामायणका सातै काण्ड लेखियेका भये ता पनी अझ सम्म रामगीता लेखियेको थियेन । सन् १८६८ मा तनहुँमा आफ्ना घरमा मृत्यु हुनु भन्दा अघी रोग शय्यामा सुतेर उनले तेसको पनी रचना गरे । स्तुती सुनी उनी कविता भन्थे औ उनका एकमात्र पुत्र रमानाथ सो लेख्थे । भानुभक्तको निश्चित मृत्युतिथि अझ चाल पाइयेको छैन तर सम्वत् १९२५

मा ( सन् १८६८ ) उनको मृत्यु भयेको हो भन्ने मोतीराम भट्टका कथनको पुष्टि उनको जन्मकुण्डली प्रकाशमा ल्याई निश्चित जन्मतिथि निर्णय गर्ने भानुभक्तका मित्र स्वर्गवासी सुब्बा धर्मदत्तका पुत्र स्वर्गवासी सुब्बा रङ्गनाथका भनाई बाट पनी भयेको छ।

उनका रामायण तथा अरु कविताहरुका अध्ययन बाट हँसीठठ्ठा, रसीला, ख्याल ठठ्ठा गर्ने बानी भयेका, हक्की, उच्च विचार भयेका, भानुभक्तको चित्र हामी देख्छौं। उनका देशभक्तिले हाम्रा हृदयमा ठुलो प्रभाव पार्छ। उनको परोपकार-बुद्धि, सबैको कल्याण होस्, सबै सप्रुन् तथा सबैको भलो होस् भन्ने विचार भयेको देख्दा उनी शान्त प्रकृतिका, दयालु, तथा सबैलाई माया गर्ने बानी भयेका मानीस रहेछन् भन्ने हामीलाई अनुभव हुन्छ। भगवद्भक्तिमा विश्वास भयेका, मातृभाषाका प्रमी तथा देशभक्त भानुभक्तले आफ्ना सेवा द्वारा हाम्रो जातीय विकासका निम्ती जो महान् कार्य गरे तिनले गर्दा नेपाली जातिका निर्माता वीरहरु मध्ये उनले प्रमुख स्थान प्राप्त गरेका छन्।

तल मोतीराम भट्टका मत अनुसार भानुभक्तका विविध कविताहरु को रचना भयेको समय लेखिन्छ।

सन् ग्रन्थहरु वा स्फुट कविता
१८३६—प्रथम दुई कविता
१८४१—बालकाण्ड
१८४९—बालाजी तथा कान्तिपुरी सम्बन्धी कविता
१८५२—अयोध्याकाण्ड, अरण्यकाण्ड, किष्किन्धाकाण्ड तथा अरण्यकाण्ड
१८५३—युद्धकाण्ड तथा उत्तरकाण्ड प्रश्नोत्तर तथा भक्तमाला
१८६२—वधूशिक्षा
१८६९—रामगीता

फर्नडेल,
दार्जीलिङ्ग
२७ १० १८५९

सूर्य विक्रम ज्ञवाली



# Life of Bhanubhakta

Bhanubhakta was born on 29th Asadha Samvat 1871, that is, in the year 1814, a few months before the outbreak of the Anglo-Nepal war He came from the well to-do and respectable family of a Brahmin who lived in the western Nepal, the region of the seven Gandakis, in the village of Ramgha in Tanhun There was a Brahmin named Sri Krishna Acharya who had earned fame and respect in that area He had six sons Bhanubhakta was the eldest son of Sri Krishna's eldest son The grand-son appears to have become the pet of his grand-father

Bhanubhakta's father was a Civil Officer in Government employ For this reason and also for the fact that he was his pet grand-child Bhanubhakta was brought up by his grand-father, Sri Krishna Acharya who also imparted early education to him He learnt astrology along with Sanskrit Literature and Grammar. *The object of education of Brahmin* youths in those days was to acquire ability to expound the Puranas and to draw up horoscopes Bhanubhakta had a retentive memory and he could understand the intricacies of a horoscope at the age of twelve It appears he was a child with sharp intelligence

When he was about twenty two years old some thing happened which so influenced his life that there was born a love of poetry in his heart One day while he was sitting under a tree in a forest he met a grass cutter In course of conversation this grass-cutter related to him how he had caused a well to be dug in his village out of savings from his meagre earnings He also added that that would bring merit to him as well as make his name remembered for a long time to come This touched the heart of Bhanubhakta for up to that time he

मा ( सन् १८६८ ) उनको मृत्यु भयेको हो भन्ने मोतीराम भट्टका कथनको पुष्टि उनको जन्म-कुण्डली प्रकाशमा ल्याई निश्चित जन्मतिथि निर्णय गर्ने भानुभक्तका मित्र स्वर्गवासी सुब्बा धर्मदत्तका पुत्र स्वर्गवासी सुब्बा रङ्गनाथका भनाई बाट पनी भयेको छ ।

उनका रामायण तथा अरु कविताहरुका अध्ययन बाट हँसीला, रसीला, ख्याल ठट्टा गर्ने बानी भयेका, हकी, उच्च विचार भयेका, भानुभक्तको चित्र हामी देख्छौं । उनका देशभक्तिले हाम्रा हृदयमा ठुलो प्रभाव पार्छ । उनको परोपकार-बुद्धि, सबैको कल्याण होस्, सबै सप्रुन् तथा सबैको भलो होस् भन्ने विचार भयेको देख्दा उनी शान्त प्रकृतिका, दयालु, तथा सबैलाई माया गर्ने बानी भयेका मानीस रहेउन् भन्ने हामीलाई अनुभव हुन्छ । भगवद्भक्तिमा विश्वास भयेका, मातृभाषाका प्रेमी तथा देशभक्त भानुभक्तले आफ्ना सेवा द्वारा हाम्रो जातीय विकासका निम्ती जो महान् कार्य गरे तिनले गर्दा नेपाली जातिका निर्माता वीरहरु मध्ये उनले प्रमुख स्थान प्राप्त गरेका छन् ।

तल मोतीराम भट्टका मत अनुसार भानुभक्तका विविध कविताहरको रचना भयेको समय लेखिन्छ ।

| सन् | ग्रन्थहरु वा स्फुट कविता |
|---|---|
| १८३६ | प्रथम दुई कविता |
| १८४१ | बालकाण्ड |
| १८४९ | बालाजी तथा कान्तिपुरी सम्बन्धी कविता |
| १८५२ | अयोध्याकाण्ड, अरण्यकाण्ड, किष्किन्धाकाण्ड तथा अरण्यकाण्ड |
| १८५३ | युद्धकाण्ड तथा उत्तरकाण्ड प्रश्नोत्तर तथा भक्तमाला |
| १८६२ | वधूशिक्षा |
| १८६९ | रामगीता |

फर्नडेल,
दार्जीलिङ्ग
२७-१०-१८५९

सूर्य विक्रम ज्ञवाली



# Life of Bhanubhakta

Bhanubhakta was born on 29th Asadha Samvat 1871, that is, in the year 1814, a few months before the outbreak of the Anglo-Nepal war. He came from the well-to-do and respectable family of a Brahmin who lived in the western Nepal, the region of the seven Gandakis, in the village of Ramgha in Tanhun. There was a Brahmin named Sri Krishna Acharya who had earned fame and respect in that area. He had six sons. Bhanubhakta was the eldest son of Sri Krishna's eldest son. The grand-son appears to have become the pet of his grand-father.

Bhanubhakta's father was a Civil Officer in Government employ. For this reason and also for the fact that he was his pet grand-child Bhanubhakta was brought up by his grand-father, Sri Krishna Acharya who also imparted early education to him. He learnt astrology along with Sanskrit Literature and Grammar. The object of education of Brahmin youths in those days was to acquire ability to expound the Puranas and to draw up horoscopes. Bhanubhakta had a retentive memory and he could understand the intricacies of a horoscope at the age of twelve. It appears he was a child with sharp intelligence

When he was about twenty two years old something happened which so influenced his life that there was born a love of poetry in his heart. One day while he was sitting under a tree in a forest he met a grass-cutter. In course of conversation this grass-cutter related to him how he had caused a well to be dug in his village out of savings from his meagre earnings. He also added that that would bring merit to him as well as make his name remembered for a long time to come. This touched the heart of Bhanubhakta for up to that time he

in Tanhun in 1868. He used to dictate the verses lying on his bed and his only son, Ramanath, used to take them down The actual date of his death is not definitely known, but the view of Motiram Bhatta, his biographer, that he died in Samvat 1925 (1868 A. D.) receives support from the statement of the late Subba Ranganath, son of Bhanubhakta's friend Dharmadutta, who brought into light the poet's horoscope and the date of his birth.

The picture which we get of Bhanubhakta after a perusal of his Ramayana and other poems is that of a joyful and magnanimous man, full of humour and a keen sense of justice. His patriotism leaves a very deep impression on our minds. He wished well of all and desired that all should progress and be happy. This shows that he was a kind-hearted man of a peaceful nature who loved every one. The services which Bhanubhakta who was God-fearing, patriotic and a lover of his mothertongue, rendered to the cause of the development of the Nepali nation, have given him an important place among the makers of the Nepali nation.

The years of the composition of the various works of Bhanubhakta according to Motiram Bhatta are noted below—

- 1836 First two poems
- 1841 Balakanda
- 1849 Poems relating to Balaji and Kathmandu
- 1852 Ayodhyakanda, Aranyakanda, Kiskindhakanda and Sundarakanda
- 1853 Yuddhakanda and Uttarakanda, Prashnottari, Bhaktamala
- 1862 Vadhu-Shiksha
- 1868 Ramagita

"Ferndale" Darjeeling.
The 5th. December 1954.

S. B. Gewali

## यो रामायण सम्पादन गर्दा उपयोग गरियेका विविध रामायणहरु

विभिन्न प्रकाशकहरुले छापेका रामायणका विभिन्न संस्करण ता मैले धेरै अघी देखी नै जम्मा गर्न थालेको थियें। मैले संग्रह गरेका रामायणका विभिन्न संस्करणहरुको संक्षिप्त वर्णन यहाँ गर्नु उचित छ किन भने यो रामायणमा जहाँ जुन पाठान्तरको उल्लेख छ सो तल भनियेका रामायणहरुको हो।

( १ ) भानुभक्तकृत भाषा रामायण—भारतजीवन प्रेस, काशी—प्रथम सम्पूर्ण संस्करण—यो पुस्तकको टाइटिल छैन तर मोतीराम भट्टले लेखेका भूमिकामा संवत् १९४४ पौष शुक्ल १५ शुक्रबार मिती दियेको छ।

( २ ) रामायण बालकाण्ड—भारतजीवन प्रेस, काशी—सन् १८८८

इनै कुम्भकर्णका सन्तान कुमाउँ तिर बाट नेपाल पसेका बेला देखी नेपाली भाषाको प्रारम्भ पनी हुन्छ औ ई कुम्भकर्ण ग्रीयर्सन साहेबले जुन भाषा समूहलाई राजस्थानी भाषा भन्नु भयेको छ सोही मद्धेको यौटा भाषा बोल्थे । राजस्थानी भाषाहरु गुजराती भाषा झैं शौरसेनीका अपभ्रंश बाट भयेका हुन् । अतएव नेपाली भाषाको उत्पत्तिको मूळ पनी शौरसेनी कै अपभ्रंश हो भन्ने कुरा स्पष्ट भयो ।

आफ्नो धर्मरक्षाका लागी नेपाल जानेहरु मद्धे राजपुतानाका छेत्रीहरु मात्र थियेनन् । भारतवर्षका अरु अरु प्रान्तहरु बाट पनी मानीसहरु जान थालेका थिये । कन्नौज निर बाट गयेका बाहुनका सन्तान अझ पनी नेपालमा छँदे छन् । अर्ग्याळहरुका पूर्वपुरुष कन्नौज बाट नेपालका पहाडमा गयेको कुरा तथा उनै एक जनाका सन्तान अर्जा, सिग्दी, पोडी आदि गाउँमा बसेका हुनाले अर्ज्याळ, सिग्याल, पोड्याल भिन्न भिन्न थर भयेको कुरा अर्ग्याळहरुका वंशावलिमा लेखियेको छ भन्ने मैले सुनेको छु* । पाल्पाका सेनवंशीय ठकुरी राजाहरु कुम्भकर्ण के सन्तान हुन् वा अरु कुनै भारतीय क्षत्रिय वंशका सन्तान् हुन् यो कुरामा सन्देह भये ता पनी अङ्ग्रेजी चोधौं शताब्दिमा पाल्पामा छेत्री राजा भयेको कुरा ता निस्सन्देह छ । यसै सेन वंशका राजाहरुका अधीनमा सोह्रौं शताब्दिका प्रारम्भमा तनहुँ, मकवानपुर आदि प्रसिद्ध राज्यहरु थिये भन्ने कुरा पनी नेपालका इतिहास बाट स्पष्ट थाहा पाइन्छ । तनहुँ, मकवानपुर, पाल्पा आदि राज्यहरुको अधिकार माथी पहाडमा मात्र थियेन, किन्तु तळ मधेसमा पनी इनीहरुका राज्य थिये । ई देशका राजाहरुको वैवाहिक सम्बन्ध भारतवर्षका राजाहरु सग पनी थियो । एघारौं शताब्दिका प्रारम्भ देखी बाह्रौं शताब्दिका आधाआधी सम्म वर्तमान नेपाल राज्यको केही भाग औ मिथिला देश दक्षिणका राजा न्यायदेव तथा उनका सन्तानका शासनका अधीन थिये । यो रीतिले राज्यको सम्बन्ध राजपुतानाका मानीस बाहेक भारतका अरु प्रान्तका मानीस सँग पनी थियो, अतएव बिहारका भाषाहरुको पनी विशेष रूपले नेपाळ राज्यमा प्रवेश भयेको सिद्ध भयो औ मागधी प्राकृतका अपभ्रंशको पनी यो भाषा माथी प्रभाव पर्नु स्वाभाविक हो ।

* यो कुरा स्वर्गवासी विद्वान् मुख्या बालेन्द्र केशरी अर्ग्याळ महाशय बाट मैले सुनेको हुँ ।

नेपाल खाल्डामा प्रचलित भाषा औ तनहुँ, मकवानपुर आदि राज्यहरुमा बोलिने भाषा यो वेला झडै उसतै उसतै हुन पर्छ कारण मागधी अपभ्रंश बाट भयेके भाषा ई ठाउँमा मानीसहरु बोल्दा हुन् । उता पाल्पा पट्टी कुम्भकर्णका सन्तानहरु शोरसेनीको अपभ्रंश बोल्ने हुनाले उनीहरुको भाषा अलि बेग्ले हुनु पनी स्वाभाविक छ । ई भाषाहरुको तिन ताक कस्तो रूप थियो सो भन्नु गाहारो छ किन भने यो विषयमा अझ सम्म विशेष खोजी भयेको छेन । नेपालमा भाटहरुले गाउने राजाहरुको प्रशस्ति औ खौंडो जगाउने गीतको भाषा झंडे झडे यौटै जस्तो छ ओ यो पाल्पा तिर बोलिने तिन ताकको नेपाली ने हो कि भन्ने अनुमान हुन्छ ।

पश्चिम निर जाने भारतीय छेत्रीहरुको पहिले मगर वहाँ पछी गुरुङ्गहरु सँग भेट भयो औ इनीहरुका राजा भै उनीहरु बसे । पूर्व तिरका तनहुँ, मकवानपुर राज्यहरुका अधीन किराती वर्तमान राई तथा लिम्बुहरु थिये । नेपाल खाल्डामा नेवारहरु थिये । ई नवीन जातिहरु सँग भेट हुँदा औ इनीहरु सँग बसो बासो हुँदा पनी भाषाले कालान्तरमा आफ्नो केही रूप फेर्नु औ उनीहरुका भाषाका शब्दहरु ग्रहण गर्नु केही अचम्मको कुरो होइन । मगर, गुरुङ्ग, राई, लिम्बु आदि सबै कुराहरु रात्ररी अध्ययन गरे पछी मात्र ई भाषाहरुको नेपाली भाषा माथी के प्रभाव परेको रहेछ सो थाहा पाइने छ । नेवारी भाषा बाट नेपाली भाषामा आयेका केही शब्द उदाहरणार्थ यहाँ दिइन्छन् ।

| *नेवारी* | *नेपाली* |
|---|---|
| थ्यासल | थ्यासल ( थ्यासल ) |
| छिंडी | छिंडी |
| झिंड्टी | झिंड्टी |
| झया | झयाल |
| ताके | तापके |
| छ्याक | छ्याकटो |
| पस | पसल |
| पानठाई | पातठाई ( रायोको साग ) |

यो सम्बन्धमा खोजी न भयेको हुनाले हाल विशेष केही जानियेको छैन ।

पन्द्रहौं र सोरहौं शताब्दि तिर पृथ्वी नारायण शाहका पुर्खाहरुले बिस्तार बिस्तार नुआकोट, कास्की, लमजुङ्ग आदि राज्यहरु जाती आफ्नो राज्य निकै ठुलो पारी सकेका थिये। शाके १४८१ सन् १५५९ मा द्रव्य शाहले गोर्खा जीते। वहाँ पछी शाके १६६० सन् १७६८ मा पृथ्वी नारायण शाहले नेपाल खाल्डाका देशहरु जीते। गोर्खा राज्य बाट आई नेपाल जीतेका हुनाले नेवारहरुले इनाहरुलाई गोर्खाली तथा इनीहरुका भाषालाई गोर्खाली भाषा भने। सोह्। गोर्खाली शब्द अझ सम्म पनी प्रचलित छँदै छ। अब ता गोर्खाली भाषा राष्ट्र भाषा भयेको हुनाले यसलाई नेपाली भाषा औ नेपाल राज्यका अनेक सानातिना जातिहरु मिसिई बनेको राष्ट्रलाई नेपाली जाति भन्नु उचित छ।

पृथ्वी नारायण शाहको मुलुक यो वेला सम्म निकै ठुलो भै सकेको थियो। राज्यका लेखापढी, अड्डा अदालतका कागतपत्र, सवाल, सनद, उर्दी आदि पृथ्वी नारायण शाह औ उनका पुर्खाहरु नेपाली भाषामा लेख्थे।

यस उसले अरु जातिका रैतीहरुले सम्पूर्ण राज्यको काम चल्ने भाषालाई "खास कुरो" भने। गुरुङ्ग कुरा, मगर कुरा इत्यादि साधारण कुरा वा भाषा भये तर नेपाली कुरा वा भाषा राजाले राजकाज, अड्डा अदालतका कागत पत्र, सवाल सनद उर्दी आदिमा व्यवहार गरिने हुनाले "खास कुरा" अर्थात विशेष वा सदर भाषा भनियो। कालान्तरमा यो "खास" "खस" का रूपमा परिवर्तन भयो औ मानीस "खस कुरो" भन्न थाले। यो "खास" बाट बिग्रेको "खस" सँग प्राचीन "खश" जातिको केही सम्बन्ध छैन भने जसतो मेरा मनमा लाग्छ।

द्रव्य शाह महाराजका पालाका पनी लाल मोहर आदि पाइन्छन् औ पाइयेका पनी छन् भन्ने मैले सुनेको छु। तर स्वयं देख्न ता देखेको छैन। अतएव तिनका भाषाका विषयमा केही न भनी तव यौटा सम्वत् १८६१ सन् १८०४ अर्को सम्वत् १८६८ सन् १८११ का दुई वटा श्री ५ महाराजाधिराज गीर्वाण युद्ध विक्रम शाहले श्री विष्णु पण्डितलाई लेखेका लाल मोहर* प्रशास्त बाहेक जसताको तसतै सार्छु।

अहाँ दुराउ छ ताहाको कुशल मगउ सर्वदा चाहिय—आगे

* इलाल मोहरका नक्कल स्याङ सँग छन्।

इहाँको समाचार भलो छ उप्रान्त पश्चिम गयाका भारादारले श्रीनगर अमल् गऱ्याको षबर तपाइँ याहा छदै बुझनू भये थ्यो. कार्तिकको दिन १२ जादा दून अमल गरी—साथ लाया छन् र हर्ष बढाई गऱ्यूँ ढेढ दुइ सय मानीस पर्दा ठहर्ने न सक्ि गढवाल्या राजा साहेब पराक्रम साही गिल्व पर्वत देषी पल् तिर भयेस खेडा भन्यन्‍ना ठाउमा गइ बस्या छन्. यो षुसीको षबर ताहाँ प्रसगले साहेबहरुलाइ पनी सुनाउनु. ताहा भयाको षबर र बातचीत र देसावरको षबर आफ्ना शरीरको कुशल छेम लेष्न बहुतै ढिल गर्नु हुन्छ. तेस्तो गाफीली गऱ्या हाम्रो काम पनी बिरियला तपाई लाई अजस पनी आउला. सो बुझी बहुते होसियारी सँग ताहाँ भया पऱ्याको कामको इकीगत र देशावरको षबर चाडो चाडो लेख्न्या गर्नु हुनस कलकत्ता तिरपनी दाज्युलाइ डाकमा चिठी पठाई षै षबर बुझी लेष्तै रहनु होला. किमधिक निखेषु इति सवत् १८६१ शाल पौष वदि ७ रोज ६ मुकाम कान्तिपुर शुभम्—

आशीर्बादले इहा कुशल छ तहाको कुशल मगल सर्वदा चाहिय. आगे इहाको समाचार भलो छ. पोष सुदि १ का मितीको चिठी माघ वदि ४ का दिन आइ पुग्यो अर्थ विदित भयो उप्रान्त गोरषपुर बाट कलट्टर गिराट साहे तहा गयाको र उस्का साथ लागी पाल्पाली हरू पनी बनारस पुगी तहाका बडा साहेब सित र उन्का इष्ट मित्र सित भेट मुलाकात गरी कलट्टरैका साथ फिऱ्याको बिस्तार लेष्नु भयेछ बढिया गर्नु भयेछ. तिनहरुको लाग्या सम फिरगी सित हाम्रो बिरोध पारी लडाउन्या काम गर्दै छन् गर्न्यै छन् तिनका गरी केही हुनैन। तिन्का पछी फिरगी पनी लागेन. ते पनी पायाको षबर लेखन्या हो भनी लेष्नु भयाको योग्यै हो तहाको बडो साहेब ले षातिर्तसलह गऱ्याको त तहाका लेष्नाले मालुम भयो. कलकत्ता सिपारस लेष्याको जवाब क्या आयो सो बुझी लेष्नू होला। बाकी बारा पर्सा रोतहटका सिवानामा एस पाला लाग्याको तकरार रफा गर्न अमीन आया भन्या षबर कलकत्ता बाट श्री माहिला गुरूज्यूले लेष्तु हुँदा एता बाट श्रीगुरूज्यू पाउ लागनु भयाको छ। उहा जो परी आनला सो लेषौला. अगरेजको कस्ता तरहले रफा गर्न्या बुझछ सो तहाका आफ्ना दोस्त अगरेज हिन्दुस्तानी बाट बुझी पायाको षबर दक्षिण पश्चिमको समेत लेष्नु

होला । मित्रचरणेषु किमधिकमिति सम्वत् १८६८ शाल माघ वदि ५ रोज छ मुकाम नवाकोट शुभम् ।

ई माथी सारियेका दुई वटा लाल मोहरका भाषामा र अचेल बोलिने या लेखिने नेपाली भाषामा के भेद छ सो एक दुई कुरा मात्र यहाँ विचार गरिन्छ । तिन ताक "चाहिन्छ" भन्ने ठाँउमा "चाहिय" भन्ने चलन रहेछ । यो "चाहिय" हिन्दीको "चाहिये" हो । "पाउ लागनु भयो" अचेलको "पान्नु भयो" हो । पाउ लाग्नु रूप पछी पछी हराउँदै गयेको बुझिन्छ औ तेसका सट्टमा माझका पनी अक्षर लोप गरी "पान्नु भयो" भन्ने रूप भयो । भानुभक्तले केवल एक दुइ ठाउ उत्तरकाण्डमा सो रूप प्रयोग गरेका छन् । तेसको योटा उदाहरण तल दिइन्छ । सम्भवत भानुभक्तका पालामा यो रूप हराउन लागी सकेको थियो ।

एक दिन् नारदजी डुली सकल लोक् आया नजिकमा जसै ।
देख्यो रावणले र पाउ परि झट् विन्ती गर्न्यो यो तसै ॥
हे सर्वज्ञ मुने ! लडाकि बलिया विर छन् कहाँ सो कही ।
पाऊ लाग्नु हवस् गर्न्यो विनति यो युध लडन इच्छा भई ॥

तर ई शब्द वा विशेष उक्तिका विषयमा छलफल गर्न मैले ई लाल मोहरहरु सारेको होइन । ई लाल मोहरमा फारसी भाषाका शब्दहरुका प्रयोगका विषयमा विचार गर्नै मेरो उद्देश्य हो । इनमा फारसी भाषाका शब्द प्रयोग गरिन ता गरियेका छन् तर अचेलको जसता तिनको प्रचुरता तिन ताक न भये जसतो बुझिन्छ । झन् पहिले गोर्खामा छँदा वा पृथ्वी नारायण शाहका पाला सम्म पनी फारसीको उसतो प्रयोग भये जसतो लाग्दैन । गोर्खाले नेपाल खाल्डो जीते पछी फारसी शब्दको प्रयोग धेरै हुन लागेको हो । ई विदेशी शब्दहरुको प्रयोग हुनु भन्दा पहिले अचेल जसरी फारसीका सम्मानसूचक शब्द प्रयोग गरिन्छन् उसै गरी संस्कृतका सम्मानसूचक शब्द तिन ताक प्रयोग गरीदा रहेछन् भन्ने बुझिन्छ । "इहाँको समाचार भलो छ" यो वाक्य अचेल लेखेको भये "इहाँको खबर बढिया छ" भनी लेखिने थियो । "अर्थ विदित भयो" का सट्टामा "अर्थ जाहिर भयो" हुने थियो । भनाको सारांश के भने अङ्ग्रेज औ नेपालको युद्ध ( सन् १८१४-१६ ) हुनु भन्दा पहिले नेपाली भाषामा फारसी

शब्दको प्रयोग उसतो भयेको थियेन। संस्कृत शब्द बाट नै धेरै काम चलेको थियो। इन ताक लेखियेका पुस्तकहरका भाषाको विचार गर्दा पनी यही कुराको पुष्टि हुन्छ। परमानन्दका छोरा वसन्तले सन् १८२७ तिर लेखेका सानो कृष्ण चरित्र तथा रघुनाथका सुन्दरकाण्डमा भानुभक्तका रामायणमा भन्दा धेरै थोरै फारसी शब्द प्रयोग भयेका छन्।

फारसी शब्दको चलन कसरी चल्यो तथा यो चलन कसरी बढ्दै गयो ई कुराको पनी अलीकता विचार गर्नु योग्य छ। हिन्दूस्तानमा मुसलमान राजा हुँदा खेरी यहाँको राजकाजको भाषा फारसी भयो। राजभाषा फारसी हुँदा भारतवर्षका प्राय सबै भाषाहरुमा फारसीका शब्द पसे। बङ्गला भाषामा फारसीका २५०० शब्द प्रचलित छन् भन्ने बङ्गला भाषाका इतिहास लेखक श्रीसुनीतिकुमार चट्टोपाध्यायको मत छ। पहाड मात्र साना साना राज्यका राजा हुन् ज्याल् सम्म फारसी शब्द न भये पनी हाम्रा राजाहरलाई पुगेको थियो तर नेपाल जिती ठुलो साम्राज्य स्थापित गरे पछी ता आफ्ना राजकाजका शब्दहरु विदेशीहरुले पनी बुझुन् भन्ने अभिप्रायले फारसी शब्दको विशेष व्यवहार गर्न पऱ्यो।

यतीन् ज्याल् सम्म ता पहाडको राज्य थियो। लिखित ऐन सवालका विशेष आवश्यकता पनी थियेन, एक हिसाबले काम चल्थ्यो। तर राज्य बढे पछी देश विदेशका रैतीहरु सँगको काम पर्ने भयो र लिखित ऐन सवालको आवश्यकता पऱ्यो र ऐन सवाल बनाउन पऱ्यो। ऐनमा फारसी शब्द धेरै उपयोग गरिये र वर्तमान समयमा ता नेपालका सरकारी कागत पत्रहरुमा ता धेरै जसो फारसी कै शब्द मात्र प्रयोग गरिन्छन्। प्रमाण स्वरूप हालै "गोर्खापत्र" मा छापियेको थोटा इस्तिहार यहाँ सारिन्छ।

आगे नेपाल सरहद भर मुलुकका जङ्गी निजामती अड्डा गौंडा गोश्वारा भै भारादार रेति दुनिञा गैह्के यथोचित उप्रान्त बाह्र तामाङ्ग, जातलाई लामा भोटे भन्ने चलन चलेकोमा अरु अरु अनेक किसिमका जातथरवाहरु पनी लामा भोटे भनी बोलाइने र लेखिने हुनाल कुन भोटे के जात थरको हो केही छुट्टिने भएन हामी बाह्र तामाङ्गलाई आफ्नू तामङ्ग जात भन्ने मनिने लेख्ने लेखाइने गरी बक्से हुँदो हो भनी सो तामङ्ग

जातका सर्दार बहादुर जङ्गबीर तामाङ्ग ओ० बी० ई०, डी० एस०, एम० एम० ( एल् ? ) सी० अगुवा भै जाहेर गरेको कुरा मुनासिबै देखिएको हुँदा सो कुरा मन्जुर गरी यो इस्तिहार जारी गरी बक्सेको छ, अब उप्रान्त हाम्रा नेपाल सरहद गोरखा राज भरका तामाङ्ग जातले आफ्नू जात लेख्दा लेखाउँदा तामाङ्ग भनी लेख्ने लेखाउने गर्नु जङ्गी निजामती सरकारी अड्डाखाना पल्टनका कागजमा र दुनिआदारका व्यवहारमा पनी बाह तामाङ्ग जात भोटेको जात लेख्दा र सो जातका भोटेलाई बोलाउँदा लामा भोटे न भनी तामाङ्ग भनी लेख्ने बोलाउने गर्नु।

ग्रन्थका रूपमा ऐन लेखियेको स्वर्गवासी श्री ३ महाराज जङ्गबहादुर राणाका पालामा सम्वत् १९१० सन् १८५३ देखी भये ता पनी यसको थालनी अझ पहिलै देखी भयेको थियो। यो प्रारम्भ ऐन बनाउँ भनेरै न भयेको भये ता पनी नयाँ औ ठुलो राज्यका शासकहरुले बेला बेलामा जारी गरेका थरी थरीका सनद सवाल बाट नै ऐनको श्रीगणेश भयेको मान्न पर्छ।

नेपालका प्राचीन कवि वा लेखकहरुका ग्रन्थहरुको खोजी न भयेको हुनाले प्राचीन नेपाली साहित्यको हाम्रो ज्ञान उत्तमो छैन। गोर्खामा पृथ्वी नारायण शाहका पुर्खाहरु राजा छँदा लेखियेका तथा तनहुँ, मकवानपुर, पाल्पा आदि राज्यहरुमा लेखियेका केही संस्कृत ग्रन्थहरु नेपाल दरबार लाइब्रेरीमा छन् तर तिन ताक लेखियेका नेपाली भाषाका ग्रन्थहरुका विषयमा ता कसैलाई केही थाहा छैन। लेखियेका ग्रन्थहरु धेरै न भये ता पनी थरी थरीका गीत, सवाई इत्यादिको प्रचार ता अवश्य हुंदो हो। खोजी गरे तेस्ता धेरै रत्न अझ पनी पाइने छन्। माथी उल्लेख गरियेका वसन्त कवि, रघुनाथ औ वं शाली पन्तका कविताहरु भन्दा पुराना ग्रन्थ हामीले देखेका छैनौं। ई कविहरुका कविताका भाषाका विषयमा केही विचार गर्नु भन्दा पहिले नेपाली भाषामा पुस्तक छाप्ने चलन कहिले देखी चल्यो तेस विषयमा अलीकता विचार गर्नु उचित छ। नेपाली भाषाको अङ्ग्रेजी औ नेपालीमा लेखियेको यौटा व्याकरण कलकत्ताको फोर्ट विलियम कालेजका अरबी औ पारसीका प्रोफेसर श्री जे० ए० एटनले सन् १८२० मा छापायेथे। नेपाली भाषाको प्रथम छापिने पुस्तक यही हो भन्ने मेरो अनुमान छ। अरु अनेक भारतीय भाषाहरुमा ग्रन्थ प्रकाशनका कामको

प्रारम्भ पनी यही फोर्ट विलियम कालेज बाट भयेको हो। वर्तमान हिन्दी गद्यका प्रारम्भकर्ता लल्लुजी लालको श्रीमद्भागवतका दशम स्कन्धको उल्था प्रेमसागर पनी यही कालेज द्वारा सन् १८०४ मा प्रारम्भ गरी सन् १८१० मा समाप्त गरीयेथ्यो। हिन्दी भाषाको छापिने सब भन्दा पहिलो ग्रन्थ पनी सम्भवतः तेही हो। बङ्गलामा ग्रन्थ छाप्ने काम यो वेला भन्दा केही अघी देखी प्रारम्भ भयेको हो। सन् १७७८ मा हेलहेड साहेबको बङ्गला व्याकरण प्रकाश भयेथ्यो औ बङ्गलामा छापिने पहिलो ग्रन्थ यही हो। नेपालमा भने धेरै पछी सम्म प्रेसको प्रवेश न भयेको बुझिन्छ। नेपालमा स्थापित भयेको पहिलो प्रेस पाशुपत प्रेस हो। यो स्थापित भयेको सम्वत् १९५० सन् १८९३ मा हो। यो प्रेस नेपालमा स्थापित हुनु भन्दा पहिले काशीमा नेपाली पुस्तकहरु छपाउने चलन चली सकेको थियो। सम्वत् १९४५ सन् १८८८ तिर एक जना ब्राह्मण पण्डित डमरु वल्लभ पोखरेलले काशीमा गोरखा यन्त्रालय नामक प्रेस स्थापित गरी नेपाली भाषामा पुस्तकहरु छपाउने काम प्रारम्भ गरी सकेका थिये। यही प्रेस बाट सम्वत् १९४५ सन् १८८८ मा रघुनाथको सुन्दरकाण्ड रामायण छापियेको थियो। तिनै ताक काशीको भारतजीवन प्रेस पनी स्वर्गवासी मोतीराम भट्टका निरीक्षणमा नेपाली पुस्तकहरु छपाउने काम गर्थ्यो। पण्डित डमरु वल्लभको व्यापार बिग्रे पछी पण्डित विश्वराज हरिहर शर्माहरुले नेपालीमा पुस्तकहरु छपाउने काम प्रारम्भ गरेको हो। विद्याको प्रचार हामीहरुमा विशेष न भयेको हुनाले पुस्तक छाप्ने काम झन्डे एकै समय देखी प्रारम्भ भयेको भये ता पनी नेपाली भाषामा ग्रन्थ लेख्ने औ छाप्ने कामको गति ठोटरीका हिंडाई जस्तो ढिलो छ तर हिन्दी बङ्गला आदि भाषाहरु बोल्नेहरुमा विद्या प्रचार भयेको हुनाले उनीहरुमा पुस्तक लेख्ने औ छाप्ने कामको चाल खरायोको जस्तो छिटो छ।

भानुभक्त भन्दा पहिलेका वा समकालीन वसन्त, रघुनाथ, वीरशाली पन्तका कविताहरुका विषयमा केही विचार गर्नु उचित छ। वीरशाली पन्त वैष्णव थिये और मथुरा वृन्दावनमा बस्थे औ वहाँ उनको पुगेका वैष्णव महापुरुष भन्ने ख्याति थियो तथा यहाँका मानीस उनलाई "बड़े

छ । उनको वाक्य रचना पनी संस्कृत काव्यका ढाँचाको हुनाले नेपालीमा कसतो कसतो लाग्छ । माथी सारेका श्लोकहरुमा सीताको उक्ति कर्मवाच्यमा दिइयेको छ, अचेल हामीहरु भये यस्ता ठाउँमा कर्तृवाच्य ने प्रयोग गर्ने थियौं । रघुनाथका सुन्दरकाण्डमा यस्ता अनेक नवीन औ अप्रचलित प्रयोगहरु छन् । उनले सम्पूर्ण रामायण लेखेका भये सो रामायण तथा इनका समकालीन अरु लेखक वा कविहरूका लेखाईको अभाव हुनाले ई विचित्र प्रयोगहरुका विषयमा आफ्नो सम्मति जाहेर न गरी तिनको उल्लेख मात्र गरियो ।

माथी भनियेका कविहरु भन्दा पछी भानुभक्तको रामायण लेखियेको हो । भानुभक्तको जन्म सम्वत् १८६७ सन् १८१४ हो तथा मृत्यु-सम्वत् १९२५ सन् १८६८ हो । भानुभक्त तनहुँका निवासी भये ता पनी नेपाल सदरमा आवत जावत भयेका परिवारमा जन्मेका थिये । इनका बाजे श्रीकृष्ण संस्कृतका विद्वान् पण्डित थिये ओ बाबु धनञ्जय सर्कारिया जागीरे खरीदार थिये । अतएव भानुभक्तका रामायणको भाषा सदरिया नेपाली भाषा छ औ उनका रामायणको लोकप्रियताको यौटा प्रधान कारण यो पनी हो ।

आफ्नो रामायणमा भानुभक्तले लेखेको भाषा नै वर्तमान नेपाली भाषाको थालनी हो । नेपाली भाषाको वर्तमान युग भानुभक्तका रामायण बाट प्रारम्भ हुन्छ । रामायण पद्यमा लेखियेको भये ता पनी गद्य जत्ती कै सरल, रघुनाथका कविता झैं अन्वय गरी अर्थ लाउन न पर्ने तथा क्रियाको प्रयोग पनी साधारण बोलचालीका भाषामा जसतो हुन्छ उसतै हुनाले भानुभक्तका रामायणको भाषा आदर्श नेपाली भाषा हो । भानुभक्त भन्दा पछीका लेखक वा कवि भानुभक्तले देखायेका मार्गमा अझ सम्म हिंडेका छन् । यसैले संस्कृत शब्द धेरै प्रयोग गर्छ ओ राजकीय कागत पत्रमा फारसी शब्दको प्रचुरता ■ तर भाषाको शैली तथा रूप भने यौटै छ । यो रूप औ शैलीका साहित्य क्षेत्रमा जन्मदाता भानुभक्त नै हुन् । यसै दृष्टिले उनका जीवन चरित्रका रचयिता तथा उनका जीवन चरित्रका विद्वान् लेखक मातृभाषा प्रेमी स्वर्गवासी मोतीराम भट्टले भानुभक्त जन्मेको वर्षको उल्लेख गर्दा "हाम्रा गोर्खा भाषाको उन्नतिको उदय पनी यसै वर्ष भयो भनी जान्नु । गोर्खा भाषामा हुन त धेरै नामका कवि भानुभक्त

तेसको विवरण मोतीराम भट्टले लेखेका भानुभक्तका जीवन चरित्र बाट यहाँ सङ्कलन गर्छु । भानुभक्तले रामायण बालकाण्डको मात्र तर्जुमा विक्रमी संवत् १८९८ सन् १८४१ मा गरी सिध्याये । रामायण बालकाण्ड बनाये पछी ८ वर्ष उनले फेरी रामायण लेखेनछन् । भानुभक्त संवत् १९०९ सन् १८५२ मा जागीर बाट खोसिई २ वर्ष काम गरेको कागत पत्र बुझाउन न सक्दा ५ महिना सम्म कुमारी चोकमा थुनिये । यही थुनियेका बेलामा मनमा बड़ा दिकदार भै अयोध्याकाण्ड, अरण्यकाण्ड, किष्किन्धाकाण्ड र सुन्दरकाण्ड भाषा श्लोक भानुभक्तले तयार गरे । सवत् १९१० सन् १८५३ मा नेपाल ( काठमाण्डु ) आयेका बेलामा बाँकी रहेका युद्धकाण्ड औ उत्तरकाण्डको पनी इनले तर्जुमा गरे । सवत् १९२५ सन् १८६८ मा भानुभक्त जरोले थलिये औ यो जरोलाई भानुभक्तले काल ज्वर ठहराई आफ्ना बिछौनामा सुती सुती आफ्ना छोरा रमानाथ शर्मा लेख्न लाई रामगीताको भाषा बनाये । यो रीतिले रामायण सम्पूर्ण सिध्याउन २७ वर्ष लाग्यो । तिन ताकका चलन बमोजिम मानीस भानुभक्तको रामायण छापिनु भन्दा पहिले यसलाई सारीसारी कन पढ्दा हुन् औ धेरै जसोलाई ता यो कण्ठ पनी हुँदो हो । तर मैले भने यो रामायणको पुरानु हस्तलिखित प्रति अझ देख्न पायेको छैन । भानुभक्तले स्वयं आफ्ना हातले तथा उनका छोराले पनी रामायणका केही प्रति लेखी आफ्ना मित्रहरुलाई दिये भन्ने कुरा मैले सुनेको छु । ई प्रति खोज्ने प्रत्येक नेपालीको प्रधान कर्तव्य हो । भानुभक्त स्वर्ग भयेका १९ वर्ष पछी संवत् १९४४ सन् १८८७ मा काशीको भारत जीवन प्रेस द्वारा मोतीराम भट्टका सहायताले सम्पूर्ण सात काण्ड रामायण छापियो । यो सात काण्ड रामायण छापिनु भन्दा पहिले "बालकाण्ड मात्र छापी प्रचार गर्यौं । तर यसै अवसरमा अनेक विघ्न बाधा पर्दा अरु काण्ड छपाउनाको उत्साह दब्यो र अरु महाशयहरुले साझामा २००० पुस्तक समग्र सात काण्ड छपाई प्रकाश गरे" भनी त्यो साझामा छापियेका रामायणका संस्करण पछी संवत् १९४४ सन् १८८७ मा आफुले छपायेका रामायणका संस्करणका भूमिकामा मोतीराम भट्टले लेखेको छ । सम्पूर्ण रामायण सर्वप्रथम छपाउने श्रेय मोतीराम भट्टको न भये

ता पनी बालकाण्ड रामायण सब भन्दा पहिले छपाउने श्रेय मोतीराम भट्ट कै रहेछ भन्ने यता बाट स्पष्ट थाहा हुन्छ । मोतीराम भट्टको जती प्रशंसा गरे पनी थोरै छ । भानुभक्तको रामायण खोजी ल्याई छापी प्रचार गराउने अधिकांश श्रेय उनैको छ । भानुभक्तको यौटा सानो जीवन चरित्र संग्रह गरी उनले संवत् १९४८ सन् १८९१ मा प्रकाश गराये । यत्ती मात्र होइन भानुभक्तका अरु अरु कविताहरु पनी खोजी ल्याई वेला वेलामा प्रकाश गराये । मोतीराम भट्ट उत्साही मातृभाषा प्रेमी थिये । उपर्युक्त नेपालको प्रथम प्रेस पाशुपत प्रेस पनी मोतीराम भट्ट औ अरु दुई जना सज्जनहरुका उद्योगले स्थापित भयेको हो । मोतीराम भट्ट अन्ली दीर्घायु भयेका भये इन बाट नेपाली भाषाको निसन्देह ठूलो सेवा हुने थियो तर बिचारा उमेर न पुगी मरी हाले । मोतीराम भट्टको जीवन हामी प्रत्येक नेपालीका लागी अनुकरणीय आदर्श छ । भानुभक्तको रामायण छापिन थाले पछी यसको खुप प्रचार भयो । काशीका विभिन्न नेपाली पुस्तक विक्रेताहरु प्रत्येक यसलाई वर्षेनी १००० । २००० प्रति छाप्छन् । यो नेपालमा पनी छापियेको छ । ठाउँ ठाउँमा हिन्दुस्थानी व्यापारीहरुले पनी यो पुस्तक बिक्ने रहेछ भनी वेला वेलामा छपाये । अतएव यसका आज सम्म एक लाख भन्दा बढ्ता प्रति छापिई सकिये होलान भन्ने अनुमान गर्नु अत्युक्ति हुने छैन भन्ने मेरो विश्वास छ । अर्को शब्दमा भनु भने देखी नेपाली भाषामा कुनै यौटा पुस्तकको भानुभक्तका रामायणको जती प्रचार भयेको छैन भन्ने कुरा स्पष्ट छ ।

भाषाका इतिहास सँग सम्बन्ध राख्ने यौटा अर्को कुराको विचार पनी यहाँ गर्नु उचित छ । सो कुरा के हो भने भाषाको रूपभेद हो । स्थान भेदले बोलिने भाषामा अन्तर हुनु स्वाभाविक छ । इङ्गलेण्टका पृथक् पृथक् स्थानमा उही अङ्ग्रेजी भाषाको उच्चारण वेग्ला वेग्लै छ। अमेरिकामा उही भाषा वेग्लै रीतिले उच्चारण गरिन्छ । उच्चारण मात्रमा यो पार्थक्य हुँदैन किन्तु वाक्यरचना, शब्दयोजना तथा विशेष वाक्यका प्रयोगमा पनी एकै देश एकै भाषामा स्थान भेदले गर्दा विभिन्नता देखिन्छ । हिन्दी भाषाको रूप जिल्ला जिल्लामा वेग्लै भयेको देखिन्छ । यसै गरी बङ्गला भाषाका अनेक भेद छन् । यही नियम बमोजिम नेपाली भाषाले

पनी ठाउँ ठाउँमा अली विचित्रता प्राप्त गर्नु स्वाभाविक नै छ। नेपाली भाषा राष्ट्रभाषा भये पछी अनेक बोली बोल्ने मानीसले यसलाई बोल्न थाले र इन बोलाईको भेद बढ्दै गयो। कसैका जिभ्राले केही भन्न न सक्ने औ कोही अर्को थोक बोल्न न सक्ने हुनाले उही योटै शब्द स्थान स्थानमा बेग्लै रूपले उच्चारण गरिन्छ। ऊकारान्त शब्द कसैले ऊकारान्त कसैले ओकारान्त प्रयोग गर्छन् जसतै मानू, मानो, आफ्नू, आफ्नो, कानू, कानो, गानू, गानो इत्यादि। अकार वा आकारान्त शब्दका उच्चारणमा पनी घेरैलाई कठिनता पर्ने हुनाले उनीहरु यसता शब्दलाई बिगारी उच्चारण गर्छन् जसतै आजका सट्टामा आजु, अबका सट्टामा आबो वा आब, घरका सट्टामा घार इत्यादि। डकारलाई नकार वा रकार, षकारलाई खकार, टकारलाई तकार उच्चारण गर्ने घेरै छन् जसतै हिड्, हिन्, घोडा, घोरा, षरी, खरी, काट, कात इत्यादि। यसता उच्चारणका भेद अनेक छन्।

उच्चारणका भेद सँग सँगै शिक्षाको अभाव, अज्ञान औ लाघव गर्नका लागी पनी भाषाका वाक्यरचनामा भेद हुन्छ। न पढेको सोहबत न पायेको मानीसले लिङ्ग वचन कारकको केही भेद गर्दैन। क्रियाका विविध रूपको प्रयोग पनी जान्दैन। हिन्दी भाषा बोल्ने गाउँमा बस्ने मानीस हिन्दीका शब्दका लिङ्गको विचार गर्दै गर्दैनन् भने पनी हुन्छ तर शहरमा बस्ने शिक्षित मानीसले बोल्दा प्रत्येक शब्द शुद्ध शुद्ध प्रयोग गर्छ औ कर्ता अनुसार क्रियाको लिङ्ग, वचन औ कारक भयेको उसले बोलेका बाट थाहा पाइन्छ। नेपाली भाषा बोल्नेहरु मद्धे पनी जो अशिक्षित छन् उनले बोलेको नेपाली भाषामा व्याकरणका नियम विशेष पालन गर्दैनन् तर सदरमा बस्ने शिक्षित नेपाली परिवारका साना साना केटा केटी पनी शुद्ध शुद्ध लिंग, वचन, कारक भेद छुट्टिने गरी बोल्छन्। सम्मान प्रदर्शन गर्ने ठाउँमा सम्मानसूचक सर्वनाम प्रयोग गर्नु तथा उही बमोजिम क्रियामा रूप परिवर्तन गर्नु सो अशिक्षित मानीस बाट हुँदैन, शिक्षित मानीसले नै गर्न सक्छ। सबै भाषाको यही नियम छ।

यसता भेद बाहेक नेपाल राज्य भीत्र डोटी औ दूपला जुमला नामी दुई इलाकामा नेपाली भाषा जसतै हाम्रो वर्तमान नेपाली सँग न मिल्ने भाषा पनी बोलिन्छन्। संभवतः वर्तमान नेपाली भाषाका विकाश शृङ्खलाका

ती भाषाहरु कुनै कड़ी होलान् । यो मन्दा बाहेक पाल्पाको भाषा पनी वेग्लै छ भनी कोही कोही मन्छन् तर वास्तवमा पाल्पाली कोही स्वतन्त्र भाषा छैन ।

नेपाली भाषामा भेद हुने यौटा अर्को कारण पनी भयेको छ । नेपालीहरु लाखौंका संख्यामा आफ्नो मुलुक छोड़ी हिन्दूस्थानका विविध प्रान्तमा आई बसेका छन् । आसाम, दार्जीलिंग, देहरादून, सिमला, पजाब, वर्मामा नेपालीहरु बसेका छन् । ई ठाउँमा आई बसोबासो गरी बस्ने नेपालीहरुको प्रायः मातृभूमि सँग सम्बन्ध रहदैन । आसाम औ वर्माका नेपालीहरु बाहेक अरु ठाउँका नेपालीहरु प्रायः फर्की आफ्नो स्वदेश जाने नाउँ पनी लिंदैनन् । यसता प्रकारले विदेश लागेर बस्नेहरुले आफ्नो भाषाको शुद्ध रूप कालान्तरमा बिर्सनु केही आश्चर्य छैन । यसरी बिर्सने अनेक कारण हुन सक्छन् । एक ता विदेशीहरुका प्रधानताले गर्दा उनीहरुका धेरै शब्द ग्रहण गर्न पर्छ । दोसरो उनीहरु शक्तिशाली उन्नत वा धेरै हुनाले उनीहरुको देखासिखी गर्ने प्रवृत्ति मै आफ्ना शब्द वा आफ्ना भाषाको बोलाईको विशेष रीति छोड्दै उनीहरुको रीति मानीसले ग्रहण गर्छन् । हिन्दूस्थानका विविध ठाउँमा बस्ने नेपालीहरुको बोलाई विचार गर्दा माथी भनेका कुरा स्पष्ट हुने छन् । पजाब वा सिमला तिरका नेपाली हाम्रो गर्नुलाई "करनु" भन्छन् औ यसता विचित्र रूपमा "ग" का ठाउँमा "क" को प्रयोग गर्छन् । हुन ता यो पहिले "क" नै थियो तर नेपाल मै "ग" भयेको हो औ अब "क" भन्यो भने सो नेपाली हुँदैन । तर एक मुठी नेपाली गई पंजाब, सिमला आदि ठाउँमा बसे, वहाँ "करनू" नै सुने, रहदा बस्दा उनीहरु पनी "गर्नु" लाई "कर्नु" भन्न थाले । दार्जीलिङ्गमा ता झन यसतो परिवर्तन भयेको छ । सो विचार गर्नु मन्दा पहिले योटा कुरो भन्नु आवश्यक छ । दार्जीलिङ्गमा आउने नेपालीहरुमा पश्चिमका कोई पनी छैनन् भने पनी हुन्छ । सदरका पनी यहाँ केही धर नेवार बाहेक विशेष अरु छैनन् । यहाँका प्रायः सबै निवासी पूर्व नेपालका छन् । ती आफ्नै मुलुकमा ता शिक्षाका अभावले शुद्ध भाषा बोल्दैनथे भने यहाँ विदेशिई आये पछी झन कसरी शुद्ध बोल्दा हुन् । अतएव यो जिल्लामा बोलिने भाषाले विचित्र रूप धारण गरेको छ ।

त्यो भाषामा लिङ्ग, वचन, कारकको भेद गर्दैन। आदरार्थी सर्वनाम र क्रियाको प्रयोग बिरलै सुनिन्छ। कर्ताका लिङ्ग, वचन, कारक अनुसार क्रियाका रूपमा भेद हुन्छ भन्ने कुरा यहाँ बिर्सिई सकियेको छ। आमा आयो, बाबु आयो, उनीहरु आयो, त्यो आयो, तं आयो, म आयो भने पुगी गयो। तं सर्वनामको प्रयोग सर्वसाधारणमा छ, तिमीको प्रयोग आदर गर्ने ठाउँमा छ। अझै बढ्ता आदर गर्नु पर्‍यो भने आफु छ। तर क्रिया ता माथी भने झै एकै नास छ। शुद्ध बोल्न जान्ने पनी यहाँ आयेर दुई चार वर्षमा यहींको ग्रामीण बोली टिपी हाल्छन् औ उनीहरु पनी यसतै बोल्न थाल्छन्। यसको कारण मनुष्य प्रकृतिले सजिलो खोज्ने हुनाले होला। तपाई यहाँ आउनु होस् भन्ने शर्को क्रिन गरी रहने तिमी आउ भने भै गो। फेरी आफुलाई कसैले तपाईं भने पो आफुले अर्कालाई तपाईं भन्नु। म जुन स्कूलमा पढाउँछु तहाँ केही वर्ष अघी नेपालका दुई जना प्रतिष्ठित राणाजीका छोराहरु पढ्न भनेर आये। दुई चार दिन सम्म ता म सँग कुरा गर्दा तिनीहरु मलाई तपाईं भन्थे औ उही बमोजिम क्रिया प्रयोग गर्थे तर पछी पछी अरु सरह तिनले मलाई तिमी भन्न थाले। ती बालकहरु यहाँ दुई चार वर्ष नेपाल न गै बसेका भये तिनले आफ्नो शिष्ट भाषा धेरै बिर्सने थिये औ स्थानीय ग्रामीण भाषा धेरै टिप्ने थिये भन्ने मेरो विश्वास छ। दार्जीलिङ्गमा भाषापरिवर्तन हुने यौटा अर्को कारण छ। पहिले यहाँ बङ्गाली, मारवाडी आदि जातिहरुले प्रथम स्थान ग्रहण गरेका थिये औ हाम्रा नेपालीहरुको उनका अधीनमा चाकरी गर्ने वा उनको रीन खाने दोसरो स्थान भयो। यसको कारण अर्को पनी हुन सक्छ। यहाँ स्कूलहरुमा प्रारम्भमा हिन्दीका माध्यम द्वारा शिक्षा दिने चलन थियो र तेस उसले पनी धेरै विदेशी शब्दहरुको भाषामा चलन चल्न सक्‍छ। यसको प्रभाव नेपालीहरुका भाषामा पनी निकै पर्‍यो। आफ्ना अनेक शब्द नेपालीहरुले बिर्सी आफ्ना मालीकहरुका शब्द ग्रहण गरे। बंगाली बाबुका घर नेरको बारी बगान भयो औ उनको घर कोठी भयो। ऊ चा खाने हुनाले नेपालीहरु पनी चिया छोडी चा खान थाले। उसले बैगन खान्थ्यो यस कारण नेपालीहरले पनी भंटा छोडी बैगन खान थाले। मारवाडी कोठी बेच्थ्यो

र नेपालीहरूले पनी कीला न किनी काँटी किन्न थाले । बगाली बाबु औ मारवाडी दुवै खिडकी बाट हेर्थे औ दरवाजा बाट निस्कन्थे र नेपालीहरूले पनी झयाल ढोका निर्सी खिडकी दरवाजा भन्न थाले । चिया कमानमा साहेबले टोकरी भन्छ र वहाँ काम गर्ने स्त्री पुरुषहरु अचेल, डाला, थुन्चे आदिमा चिया न टिपी टोकरीमा टिप्छन् औ चियाका पात उनीहरु टिप्तनन् किन्तु पत्ती पो टिप्छन् । कमानका बगाली बाबुका प्रभुत्वले उनीहरुले अब बोट भन्ने शब्द निर्सी सके, अब ता उनीहरु चियाका गाछ भन्छन् । मेरो अर्थ स्पष्ट गराउन यनी उदाहरण यथेष्ट छन् । यसतो स्थिति भयेको हुनाले नेपाली भाषाको साधु वा आदर्श रूप के हो ओ त्यो कहाँ छ भन्ने प्रश्न उठ्नु स्वाभाविक हो । जसतो बङ्गला भाषा ढाका, चटगाँव प्रभृति स्थानमा बेग्ला बेग्लै बोलिने भये ता पनी कलकत्ता ओ उसका वरपरका ठाउँको भाषा नै साधु भाषा वा आदर्श भाषा मानिछ औ यही भाषामा पुस्तकहरु लेखिन्छन् उसतै दार्जीलिङ्ग, पजाव आदि ठाउँमा औ नैपाल राज्य भीत्र पनी अनेक ठाउँमा तथा अनेक जातिले नेपाली शुद्ध न बोले वा बेग्ला बेग्ल बोल्ने भये ता पनी नेपालीको ।दर्श साधु रूप खोनन परे राजधानी काठमाण्डु मै जान पर्छ । जसतो कुलीन अङ्गरेजले बोलेको भाषा नै साधु अङ्गरेजी भनी कहलाउँछ सदरका शिक्षित कुलीन मानीसले बोलेको भाषा नै साधु नेपाली भ सक्छ ओ यही भाषामा नेपालीका पुस्तकहरु लेखिनु उचित छ ओ ले पनी छन् । भानुभक्तले लेखेको भाषा पनी यही हो । आज सम्म नेपाली पुस्तकहरु यही भाषामा लेखियेका छन् । केवल दुई चार आदि ग्रन्थ भाषा न जान्ने पादरीहरुले दार्जीलिङ्गका ग्रामाण ो छन् भन्दैमा त्यो भाषा साधु वा आदर्श नेपाली भाषा कहलाउन

नेपालीहरुमा वर्तमान समयमा शिक्षा प्रचार निकै कारणले शिक्षित नेपालीहरुको भाषा पनी खारींदै शुद्ध हुँदै त्यो समय शीघ्र आउने छ जुन बेला दार्जीलिङ्गको भाषा ओ विशेष अन्तर रहने छैन । शिक्षाका प्रचारले नै सब प्रकारको

र नेपालीहरुले पनी कीला न किनी कॉटी किन्न थाले। बगाली बाबु औ मारवाडी दुवै खिडकी वाट हेर्थे औ दरवाजा वाट निस्कन्थे र नेपालीहरुले पनी झयाल ढोका निर्सी खिडकी दरवाजा भन्न थाले। चिया कमानमा साहेवले टोकरी भन्छ र वहाँ काम गर्ने स्त्री पुरुषहरु अचेल, डाला, थुन्चे आदिमा चिया न टिपी टोकरीमा टिप्छन् औ चियाका पात उनीहरु टिप्तेनन् किन्तु पत्ती पो टिप्छन्। कमानका बगाली बाबुका प्रभुत्वले उनीहरुले अब बोट भन्ने शब्द बिर्सी सके, अब ता उनीहरु चियाका गाछ भन्छन्। मेरो अर्थ स्पष्ट गराउन यती उदाहरण यथेष्ट छन्। यसतो स्थिति भयेको हुनाले नेपाली भाषाको साधु वा आदर्श रूप के हो ओ त्यो कहाँ छ भन्ने प्रश्न उठ्नु स्वाभाविक हो। जसतो बङ्गला भाषा ढाका, चटगाँव प्रभृति स्थानमा बेग्ला बेग्ले वोलिने भये ता पनी कलकत्ता ओ उसका वरपरका ठाउँको भाषा ने साधु भाषा वा आदर्श भाषा मानिछ औ यही भाषामा पुस्तकहरु लेखिन्छन् उसतै दार्जीलिङ्ग, पञ्जाब आदि ठाउँमा औ नेपाल राज्य भीत्र पनी अनेक ठाउँमा तथा अनेक जातिले नेपाली भाषा शुद्ध शुद्ध न बोले वा बेग्ला बेग्ले बोल्ने भये ता पनी नेपालीको आदर्श वा साधु रूप खोजन परे राजधानी काठमाण्डु मै जान पर्छ। जसतो शिक्षित कुलीन अङ्गरेजले बोलेको भाषा नै साधु अङ्गरेजी भनी कहलाउँछ उसतै सदरका शिक्षित कुलीन मानीसले बोलेको भाषा नै साधु नेपाली कहालाउन सक्छ ओ यही भाषामा नेपालीका पुस्तकहरु लेखिनु उचित छ ओ लेखिंदै पनी छन्। भानुभक्तले लेखेको भाषा पनी यही हो। आज सम्म लेखियेका नेपाली पुस्तकहरु यही भाषामा लेखियेका छन्। केवल दुई चार बाइबिल आदि ग्रन्थ भाषा न जान्ने पादरीहरुले दार्जीलिङ्गका ग्रामीण बोलीमा लेखेका छन् भन्देमा त्यो भाषा साधु वा आदर्श नेपाली भाषा कहलाउन सक्नैन।

नेपालीहरुमा वर्तमान समयमा शिक्षा प्रचार निकै हुँदैछ। यो कारणले शिक्षित नेपालीहरुको भाषा पनी खारींदै शुद्ध हुँदै आउँदै छ। त्यो समय शीघ्र आउने छ जुन बेला दार्जीलिङ्गको भाषा ओ सदरिया भाषामा विशेष अन्तर रहने छैन। शिक्षाका प्रचारले नै सबै प्रकारको उन्नति हुन्छ।

॥ श्रीगणेशाय नमः ॥

# भानुभक्तको रामायण

## श्रीबालकाण्ड

एक् दिन् नारद सत्यलोक् पुगि गया लोक्को गरूँ हित् भनी ।
ब्रह्मा ताहिँ थिया पऱ्या चरणमा खुसी गराया पनी ॥
क्या सोध्छौ तिमि सोध भन्छु म भनी मर्जी भयेथ्यो जसै ।
ब्रह्माको करुणा बुझेर ऋषिले बिन्ती गऱ्या यो तसै ॥ १ ॥

हे ब्रह्मा ! जति हुन् शुभाशुभ सबै सूनी रह्याँछु कछु ।
बाँकी छैन तथापि सुन्न अहिले इच्छा म यो गर्दछु ॥
आऊला जब यो कली बखतमा प्राणी दुराचार् भई ।
गर्न्या छन् सब पाप् अनेक् तरहका निच्का मतीमा गई ॥ २ ॥

साँचो बात गरैन कोहि अरु कै गर्नन् त निन्दा पनी ।
आर्काको धन खानलाइ अभिलाष् गर्नन् असल् हो भनी ॥
कोही जन् त परस्त्रिमा रत हुनन् कोही त हिंसा महाँ ।
देहैलाइ त आत्म जानि रहनन् नास्तिक् पशू झैं तहाँ ॥ ३ ॥

काम्का चाकर झैं भयेर रहनन् स्त्रीलाइ चौता सरी ।
मान्नन् पीतृ र मातृलाइ बुझि खुप् शत्रू सरीका गरी ॥
ब्राह्मण् भै कन वेद बेचि रहनन् कोही पढुन् ता पनी ।
धन् ठूलो छ पनी भन्या सहज धन् आर्जन् गरौंला भनी ॥ ४ ॥

जाती धर्म रहैन क्षत्रिहरुमा जो छन् इ नीचाहरू ।
शूद्रादी त तपस्वि होइ रहनन् ब्राह्मण् सरीका बरू ॥
स्त्री धेर् भ्रष्ट हुनन् पती र ससुराको द्रोह ठूलो गरी ।
यस्ता नष्ट कसोरि मुक्त त हुनन् संसारसागर् तरी ॥ ५ ॥

यो चिन्ता मनमा भयो र अहिले सोधूँ उपायै भनी ।
आयाको छु दयानिधान ! कसरी तर्नन् सहज् ई पनी ॥
यस्तालाइ उपाय तर्न सजिलो कुन् हो उ आज्ञा गरी ।
मेरो चित्त बुझाइ वक्सनु हवस् क्याले इ जान्छन् तरी ॥ ६ ॥

नारद्ले दुनियाँ उपर् गरि दया बिन्ती गर्‍या यो जसै ।
ब्रह्माजी पनि खुप् प्रसन्न हुनु भो मर्जी भयो यो तसै ॥
हे नारद् ! सब पाप हर्न कन ता रामायणैले सरी ।
आर्को मुख्य उपाय छैन सबको हित् यै छ अम्रित् सरी ॥ ७ ॥

---

१ नेपाल र भारतजीवन—न्याई ।

शम्भू देखि सुनेर तत्त्व सब यो गान् पार्वती गर्दछिन् ।
राम्को नाम अपार जानि बहुतै आनन्दमा पर्दछिन् ॥
जस्ले गान् कन गर्दछन् त ति सहज् संसार पार् तर्दछन् ।
कालैको पनि ताप् हुँदैन भय सब् तिन्का सहज् टर्दछन् ॥ ८ ॥

यो सब् शास्त्र विषे बड़ो छ रघुनाथ्को रुप् जनाई दिन्या ।
जो छन् सब् इ पुराण्हरू इ सबमा यै मुख्य जानी लिन्या ॥
गर्छन् कीर्तन सुन्दछन् पनि भन्या यो पाउँछन् फल् भनी ।
तिन्को पुण्य बखान गर्न त सबै सक्तीन मैले पनी ॥ ९ ॥

सून्याथ्याँ शिव देखि यस्कि महिमा एक् श्लोक् पढुन् ता पनी ।
भक्तीले यदि यो पढ्यो पनि भन्या पाप् छुट्तछन् सब् भनी ॥
जो एक् चित्त गरेर पाठ खुसि भै गर्छन् सदा यै भन्या ।
जीवन्मुक्त तिनै त हुन् नर भई ईश्वर् सरीका बन्या ॥ १० ॥

पूजा पुस्तकको गऱ्या पनि त फल् एक् अश्वमेध्का सरी ।
पाउँछन् सुनियो कहीं पनि भन्या पाप् छुट्तछन् तेस् घरी ॥
जो ता पुस्तकका नजिक् गइ नमस्कारै फगत् गर्दछन् ।
तेस्ता जन् सब देवता पुजि हुन्या फल् भोगमा पर्दछन् ॥ ११ ॥

---

१ नेपाल र भारतजीवन—अस्को। अध्यात्मरामायण—तस्याध्ययनमात्रेण जना यास्यन्ति सद्गतिम् ।

२ होमनाथ—स्यै ।

चारै वेद पढेर शास्त्रहरुको व्याख्यान गर्दा पनी ।
पाँईदैन उ फल् त पाउँछ सहज् पुस्तक् दिनाले पनी ॥
भक्तीले कहि भक्तका घर गई एकादशीमा कह्या ।
चौबिस् पल्ट पुरश्चरण् गरि हुन्या गायत्रिका फल् भया ॥ १ २ ॥

जस्ले राम्नवमी उपासि खुसिले जाग्रन् समेतै गरी ।
यो रामायण पाठ् गरोस् कि त सुनोस् तन् मन् यसैमा धरी ॥
तेस्ले तीर्थ पिछे तुलापुरषदान् सूर्य्यै ग्रहण्मा गऱ्यो ।
यस्मा संशय छैन जान्नु सबले आनन्दमा त्यो पऱ्यो ॥ १ ३ ॥

रामायण् कन गाउन्या पुरुषको आज्ञा त इन्द्रै पनी ।
मान्छन् श्रीरघुनाथका प्रिय इ हुन् मान्न्या इनै हुन् भनी ॥
रोज् रोज् यस् कन पाठ् गरेर जनले सत्कर्म गर्छन् जती ।
कोटी गुण् फल बढ्ति मिल्छ सबको घट्तैन तिन्का रती ॥ १ ४ ॥

यस्मा राम् हृदयै छ पाप् हरि लिन्या कै ब्रह्मघाती पनी ।
शुद्धात्मा बनि जान्छ तिन् दिन पढ्या गर्छन् कृपा राम् धनी ॥
रोज् रोज् तीन पटक् अगाडि हनुमान् राखेर पाठ् गर्छ जो[१] ।
जस् तो भोग् कन गर्न खोज्दछ उ भोग् सम्पूर्ण पाउँछ सो ॥ १ ५ ॥

---

१ भारतजीवन (व )—रोज रोज् यक मनले अगाडि हनुमान् धारेर पाठ् गर्छ जो । अध्यात्मरामायण—थ रामहृन्य यस्तु हनुमत्प्रतिमान्तिके । त्रि पठेत्प्रत्यह मौनी स सर्वेप्सितभाग्भवेत् ॥

जो यो पाठ् तुलसी पिपल् वरि परी गर्छन् प्रदक्षिण् गरी ।
तिन्का पाप् सब जन्मका जति त छन् छुट्छन् ति तेसै घरी ॥
तेस्मा रामगिता छ ज्ञन् अति ठुलो जस्को महात्म्यै पनी ।
सब् जान्या शिव मात्र छन् अरु त को जान्या छ यस्तो भनी ॥ १६ ॥

आधा पार्वति जान्दछिन् म त सबै चौथाइ पो जान्दछु ।
गीता पाठ गरेर नाश न हुन्या पाप् छैन यो मान्दछु ॥
राम्ले वेद मथन् गरी कन झिक्या गीता र अम्रित् सरी ।
लक्ष्मण्लाइ दिया यही पढि लिया जाइन्छ संसार् तरी ॥ १७ ॥

माछ्रै निश्चय कार्तवीर्य भनि खुप् ठूलो इरादा गरी ।
पढ्थ्या श्री शिव थ्यैं गया परशुराम् दिन् दिन् चरण्मा परी ॥
पढ्थिन् पार्वति राम्गिता तहि सुनी पाठ् गर्न लागी गया ।
राम्गीता तहिं देखि पाठ् गरि लिया नारायणै ती भया ॥ १८ ॥

मैन्हा दिन् यहि राम्गिता पढि लिया सब् ब्रह्महत्याहरू ।
छुट्छन् ता अरु छुट्तछन् सकल पाप् भन्न्या बखान् क्या गरू॥
शालग्राम् तुलसी पिपल् कि त बडा सन्यासि थ्यैं जो गई ।
राम्गीता कन पाठ् गऱ्यो पनि भन्या ठूलो महात्मा भई ॥ १९ ॥

---

१ गयो (?) स०    २ भयो (?) स०

जुन् फल् छन् मुखले भनी न सकिन्या सो फल् ति भोग् गर्दछन् ।
कोही श्राद्ध विषे पढुन् त तिनका पितॄ सबै तर्दछन् ॥
पैल्हे खूप नियम् गरी दशमिमा एकादशीमा पनी ।
आसन् बाँधि अगस्ति वृक्ष मनि पाठ् गर्छ्न म गीता भनी ॥ २० ॥

राम्‌गीता उपवास् गरी कन बहुत् आदर् गरी पढ्छ जो ।
तेस्‌लाई त न भन्नु मानिस भनी रामै सरीको छ त्यो ॥
दान् ध्यान् तीर्थ कदापि केहि न गरी यै रामगीता पढी ।
बस्छन् जो ति अनन्तका पदविमा जान्छन् सहज् पार् तरी ॥ २१ ॥

धेरै बात गरेर हुन्छ अब क्या रामायणै हो जबर् ।
पाप् हर्नो कन छैन केहि बुझियो येसै सरीको अवर् ॥
जो छन् तन्त्र पुराण् श्रुति स्मृति इ ता सोह्रै कलामा पनी ।
पुग्दैनन् त बखान् कहाँ तक गरूँ यो फेरि ठूलो भनी ॥ २२ ॥

जो रामायणको महात्म्य विधिले नारद्‌जिलाई कह्या ।
जुन् सूनी कन चित्तले बुझि लिंदा नारद् पनी खुस् भया ॥
पाठ् गर्छन् कि त सुन्दछन् यति भन्या यो येति सुन्दा पनी ।
जान्छन् सब् उहि विष्णुका पुरि महाँ खुप् पूज्य सब्‌का बनी ॥ २३ ॥

---

१ होमनाथ—श्राद्ध।

२ भारतजीवन (क)—पाठ् गर्छन् कि त सुन्दछन् यती भन्या सुन्ने पनी पनो। यो पाठमा छन्द भङ्गको दोष देखिने भये तापनि प्राचीन कविहरू ले यस्तो दोष गरेको देखिदैको हुनाले यो प्रमाण पनी यहाँ दिइएको हो। स०

कैलाश्मा भगवान् सदाशिव थिया ध्यान्मा बहुत् मन् दिई ।
वाम् कारख्मा बहुतै पियारि हितकी श्री पार्वतीजी लिई ॥
एक् दिन् पार्वतिले तहीं शिवजि थ्यैं सोधिन् चरण्मा परी ।
आफू ता सब जान्दथिन् तर दया सम्पूर्ण लोक्मा गरी ॥ २४ ॥

हे नाथ् ! बिन्ति म गर्दछु हजुरमा राम् हुन् जगत्का पती ।
राम् देखी अरु कोहि छैन जनका संसार तर्न्या गती ॥
जस्मा भक्ति गर्‍यो भन्या अति गभिर् संसारसागर् महाँ ।
नौका झैं तरि जान्छ झट्पट गरी तेस् नर्कि देहै तहाँ ॥ २५ ॥

यस्ता राम् कन लोकमा जनहरू एक् ईश्वरै मान्दछन् ।
कोही तत्त्व न पाइ मूर्खहरु ता मानिस् सरी जान्दछन् ॥
क्या भन्छन् ति कि राम ईश्वर भया शोक् क्यान तिन्ले गर्‍या ।
सीता रावणले जसै हरि दियो ठूलै विपत्मा पर्‍या ॥ २६ ॥

ईश्वर्लाइ त शोक् हुँदैन र भनू हूँदैन अज्ञान् पनी ।
इन्मा यो सब देखियो त कसरी जान्नू इ ईश्वर् भनी ॥
लोक् यस्तो पनि भन्छ कोहि भगवान् ! यस्मा विचार् खुप् गरी ।
जस्तो हो सब यो बताउनु हवस् सन्देह मेरो हरी ॥ २७ ॥

---

१ नेपाल—कठिन् ।
२ भारतजीवन (क) र बर्दई—नर्को । यो पाठमा छन्द भंगको दोष हुन्छ । सं० नेपाल—नेस्को त मट्टी तर्ना ।
३ नेपाल—यस्मा
४ होमनाथ—मन्दछन् ।
५ ऐन—वैद्दी ।

यस्तो प्रश्न सुन्या र पार्वतिजिको खुसी पनी खुप् भया ।
राम् यस्ता प्रभु हुन् भनेर शिवले सब् तत्त्व ताहीं कह्या ॥
सून्यौ पार्वति ! राम् अनादि परमेश्वर् हुन् ति आकाश् सरी ।
सब् ढाकी कन बस्तछन् अधि विराट् सम्पूर्ण सृष्टी गरी ॥ २८

जस्तै चुम्बकका नजिक् परि गया नाच्छन् इ लोहा पनी ।
तस्तै जस् कन पाइ नाच्तछ जगत् नाना प्रकार्को बनी ॥
यस्तो तत्त्व न जानि मानिस सरी राम्लाइ जो गर्दछन् ।
संसार्का इ अनन्त ताप्हरु तिनैलाई सदा पर्दछन् ॥ २९

बादल्ले अरु ढाक्छ ढाक्छ अरु क्या श्रीसूर्य्यलाई पनी ।
लोक् ता भन्छ उठ्यो र बादल ठुलो सब् सूर्य्य ढाक्यो भनी ॥
तस्तै तत्त्व न जानि बोल्छ जन जो सो भन्छ मानिस् पनी ।
योगी ज्ञानि त चिन्दछन् इ रघुनाथ् त्रैलोक्यका नाथ् भनी ॥ ३०

जसलाई रिङ्टा छ भन्छ उ फगत् घुम्छन् उ पर्वत् भनी ।
घुम्दैनन् इ त घुम्छ तेहि रिङ्टा जान्दैन कोही पनी ॥
अज्ञान् रुप् रिङ्टा हुन्या जनहरू भन्छन् ति मानिस् पनी ।
राम् ता हुन् परमेश्वरै सकल यस् चौधै भुवन्का धनी ॥ ३१

---

१ नेपाल—बात ।
२ ऐजन—प्रकार्ले ।
३ ऐजन—पापहरु ।
४ होमनाथ—थर्हि
५ नेपाल—जानि, जचि (?) सं० ।
६ बंबई—भनी ।

सूर्यैंमा पनि अन्धकार् छ कहिं क्या तसतै छ राम्मा पनी ।
शोक् अज्ञान् रति छैन जान्नु सबले आत्मा इनै हुन् भनी ॥
आर्को गोप्य रहस्य भन्छु सुन यो संवाद् सितारामको ।
भूभार् हर्न त को थियो जब हन्या छिन्छान् भयो कामको ॥ ३२ ॥

भूमीको सब भार् हरेर रघुनाथ् राज् गर्न लाग्या जसै ।
देख्या श्री हनुमानलाइ र दया आयो प्रभूका तसै ॥
सीतालाइ हुकुम् तहीं दिनु भयो सीते ! हनूमान् बडा ।
हाम्रा भक्त भयाइ तत्त्व लिनका खातिर् यहाँ छन् खडा ॥ ३३ ॥

इन्लाई तिमि तत्त्व देउ भनि यो हुकुम् भयेथ्यो जसै ।
सीताले हनुमानलाइ दिनु भो जुन् तत्त्व हो सो तसै ॥
आर्को तत्त्व त केहि छैन हनुमान् कुन् आज आर्को कहूँ ।
राम् हुन् ब्रह्म इनैकि शक्ति बलिई माया भन्याकी म हूँ ॥ ३४ ॥

राम्को सन्निधि पाइ[२] गर्छु सबको सृष्टी र पालन् पनी ।
आरोप् राम विषे गरिन्छ सब यो गर्न्या इनै हुन् भनी ॥
यस् निर्मल् रघुवंशमा प्रभुजिले जो जन्म याहीं लिया ।
विश्वामित्र निमित्त[३] यज्ञहरुमा राखी दया मन् दिया ॥ ३५ ॥

---

१ हीमनाथ—त काम् ।
२ नेपाळ—राम्की शक्ति उपाय । अध्यात्म रामायण—तस्य सन्निधिमात्रेण सृजामीद मतन्द्रिता ।
३ ऐजन—विश्वामित्र ऋषीकि । अध्यात्म-रामायण—विश्वामित्रसहायत्व मखमरक्षग तत ।

जो पाप् गौतमपत्निका हरि दिया जो भाँचि दीया धनू ।
जो मैलाइ बिहा गऱ्या सब कुरा यस्ता कहाँ तक् भनू ॥
जो ता गर्व हऱ्या ति विर् परशुराम्को जो अयोध्या बस्या ।
बाह्रै वर्ष बिहा गऱ्या पछि बसी जो ता वनैमा पस्या ॥ ३६ ॥

यस्ता काम् जति काम् भया ति सब काम् गर्न्यो म हूँ ता पनी[2] ।
भन्छन् लोक त रामलाइ सबका कर्ता इनै हुन् भनी ॥
अन्तर्यामि अनादि साक्षि त ति हुन् कर्ता कहाँ ती थिया ।
मेरा गूण लिंदा त लोकहरुले कर्ता भनी पो दिया ॥ ३७ ॥

येती ताहिं सिताजि बाट उपदेश् पाई सक्याथ्या जसै ।
आफैं राम् प्रभुले पनी दिनु भयो फेर् तत्त्वको ज्ञान् तसै ॥
यस्तो हुन्छ परात्म आत्म यहि हो यो हो अनात्मा भनी ।
आत्मा और परात्मलाइ बुझदा[3] पाइन्छें मुक्ती पनी ॥ ३८ ॥

आत्माको र परात्मको छ कति फेर् त्यो एक जानी लिनू ।
जुन् जुन् चीज अनात्म हुन् उ त झुटा जानेर छाडी दिनू ॥
आत्माको र परात्मको गरि विचार् एक तत्त्व जान्यो जसै ।
अज्ञान् सब् छुटि जान्छ ती पुरुषको मै तुल्य हुन्छन् तसै[6] ॥ ३९ ॥

---

१ नेपाल—कहूँ । २ होमनाथ—यसमा ई नति काम् भया ति सब काम् गऱ्या म हूँ ता पनी । नेपाल, भारतजीवन (क)—यस्ता छन् जति काम् सबै मन म ता पार् गन सकूहू पनी । अध्यात्मरामायण—एवमादीनि कर्माणि मयैवाचरितान्यपि । आरोपयन्ति रामेऽस्मिन्निर्विकारेऽखिलात्मनि ॥ ३ नेपाल, होमनाथ—बुझिन्दा । ४ होमनाथ—पाउन्छ—यो पाठ उसतो जाती प्रतीत हुँदैन । स० ५ भारतजीवन, होमनाथ, बम्बई—ती । एक् (?) स० ।

६ नेपाल—अज्ञान् सब् छुटि जान्छ यक् पल महाँ मै तुल्य हुन्छन् तसै । भारतजीवन (क)—अज्ञान् सब् छुटि जाछ यक् पल महाँ त्यस् नरको जानू तसै । अध्यात्मरामायण—ऐक्यज्ञान यदोत्पन्नं महावाक्येन चात्मनः । तदाऽविद्या स्वकार्यैश्च नश्यत्येव न संशयः ॥

यो मेरो हृदयै त हो प्रिय छ यो खुप् गुप्त राख्नू पनी ।
तत्त्वज्ञान् भनि यै कहिन्छ बुझि ल्यौ सून्यौ हनूमान् ! भनी ॥
तत्त्वज्ञान् हनुमानलाइ रघुनाथ्ले यै दिनू भो तहाँ ।
सोही ज्ञान् तिमि थ्यैं कही कन सक्याँ सम्पूर्ण मैले यहाँ ॥ ४० ॥

सून्यौ पार्वति ! रामको हृदय यो जो जो त पाठ् गर्दछन् ।
जो छन् जन्म सहस्रका सकल पाप् तिन्का सबै टर्दछन् ॥
जातीभ्रष्ट अधम् हवस् त पनि लौ यस्लाइ खुप् पाठ् गरी ।
राम्को ध्यान् पनि गर्छ पो पनि भन्या त्यो जान्छ संसार् तरी[3]॥ ४१ ॥

सूनिन् पार्वतिले अपार महिमा यो रामजीको जसै ।
फेर् विस्तार् गरि सुन्नलाइ मन भो ती पार्वतीको तसै ॥
बिन्ती फेर् शिव थ्यैं गरिन् पनि तहाँ हे नाथ् ! सबै रामको ।
लीला सुन्न मलाइ मन् हुन गयो येही बुझ्याँ कामको ॥ ४२ ॥

सूनोस् रामलिला भनेर म उपर् माया बहुतै धरी ।
सब् लीलाहरु फेर् बताउनु हवस् जो छन् ति विस्तार् गरी ॥
यो प्रेम् पार्वतिको सुन्या र शिवले खुप् प्रेम राखिन् भनी ।
जो जो हुन् सब राम्चरित्र शिवले ताहाँ बताया पनी ॥ ४३ ॥

---

१ भारतजीवन—बुझ्न यो ।
२ भारतजीवन (क), नेपाल—जातुको भ्रष्ट ।
३ ऐजन (क)—राम्को ध्यान् पनि गर्छ पो पनि भन्या पार् जान्छ ससार् तरी ।
नेपाल—राम्को ध्यान् पनि गर्छ पो पनि भन्या पार् जान्छ ससार् तरी ।
होमनाथ—राम्को ध्यान पनी गर्‍यो यदि भन्या त्यो जान्छ ससार् तरी ।
बंबई—राम्को ध्यान् पनि गर्छ यो पनि भन्या त्यो जान्छ ससार् तरी ।

ई भूमी कन रावणादि विरले भारी बनाई दिया ।
भारी भै ति रूँदै गइन् उहिँ जहाँ ब्रह्मा बस्याका थिया ॥
पापी घेर् भइ भार् भयो म कन ता यो भार छुटोस् भनी ।
आयाँ आज दयानिधान् ! चरणमा यो विन्ति पारिन् पनी ॥ ४४ ॥

यस्तो विन्ति सुनी दया पनि उठ्यो ती भूमि माथी तहाँ ।
दौडी क्षीर समुद्रका तिर गया विष्णू रहन्थ्या जहाँ ॥
इन्द्रादीहरु साथमा लिइ स्तुती ताहाँ गर्‍याथ्या जसै ।
सर्वात्मा भगवान् प्रसन्न हुनु भै दर्शन् दिनू भो तसै ॥ ४५ ॥

देख्या सुन्दर रुप् जसै प्रभुजिको ब्रह्मा चरण्मा पर्‍या ।
भक्तीले स्तुति खुप् गरेर खुसि भै हात् जोरि विन्ती गर्‍या ॥
हे नाथ् ! रावण दुष्ट भै सकल लोक्लाई विपत्ती दियो ।
इन्द्रादीहरुको त तेज् सहजमा खैंचेर तेस्ले लियो ॥ ४६ ॥

यस्लाई अब मारि बक्सनु हवस् मानिस् सरीका बनी ।
मानिस् देखि मर्‍यास् भनी त वरदान् दीई रह्याँछ्[१] पनी ॥
ब्रह्माको यति विन्ति सुनि भगवान्को यो हुकुम् भो पनी ।
रावण्लाइ म मार्छँला सहजमा मानिस् सरीको बनी ॥ ४७ ॥

---

१. मारेरन, नेपाल—मो।

माया मेरि सिता भयेर रहनिन् छोरी जनक्की भई ।
छोरो भै कन जन्मुला म दशरथ्जीका घरैमा गई ॥
सीतालाइ लियेर पूर्ण गरुँला बिन्ती म तिम्रो भनी ।
अन्तर्धान् भगवान् तहीं हुनु भयो त्रैलोक्यका नाथ् हरी ॥ ४८ ॥

अन्तर्धान् भगवान् जसै हुनु भयो इन्द्रादिलाई पनी ।
ब्रह्माले खुसि भै अह्राउनु भयो भूलोक जाऊ भनी ॥
मानिस् भै भगवान् जती त रहनन् तेस् पृथ्वितल्मा गई ।
वानर् भै कन सब् तिमी पनि रह्या साहाय जसता भई ॥ ४९ ॥

ब्रह्माजी पनि सत्यलोक् गई गया येती अह्राई वरी ।
इन्द्रादी पनि वानरै भइ रह्या सब् पृथ्विलोक्मा झरी ॥
यै बिच्मा दशरथ् बडा विर थिया राजा अयोध्या महाँ ।
तिन्को वृद्ध उमेर् भयो त पनि एक् छोरा भयेनन् तहाँ ॥ ५० ॥

तापले पूर्ण भई गुरू सित गया सोध्या उपायँ पनी ।
हे सर्वज्ञ मुने ! कसो गरि हुनन् छोरा मलाई भनी ॥
*यस् काम्ले फल मिल्छ यो भनि सबै जान्न्या वशिष्ट थिया ।*
यसतो बिन्ति सुनी वशिष्ठ गुरुले युक्ती बताई दिया ॥ ५१ ॥

---

१ बंबई—गुनी—यो पाठ राम्रो छैन । सं०

२ होमनाथ—फनी-यो पाठ अनुप्रास मिल्ने भये ता पनी अरु सबै पुस्तकमा "हरी" हुनाले सोही लेखियो । सं०

३ नेपाल—पुगि ।

४ भारतजीवन, नेपाल—उपाई

हुन्छन् पुत्र अवश्य जल्दि महाराज् ! एक् यज्ञ ऐल्हे गऱ्या ।
शान्ताका पति ऋष्यश्रृङ्ग ऋषि छन् ती डाक्नु ऐल्हे पऱ्या ॥
ती हामी बसि यज्ञ एक् हजुरका खातिर् गरौंला जसै ।
चार् छोरा अति विर् हुनन् हजुरका सब् ताप छुट्नन् तसै ॥ ५२ ॥

यस्तो अर्ति वशिष्ठको जब सुन्या राजा बहुत् खुस् भया ।
शान्ताका पतिलाइ डाकि कन खुप् याग् गर्न लागी गया ॥
ऋष्यै[1]श्रृङ्ग वशिष्ठ दुइ ऋषिले होम् गर्न लाग्या जसै ।
पायस्को थलिया लिई कन तहाँ आया ति अग्नी तसै ॥ ५३ ॥

यस् पायस् कन आज लेउ भगवान् ! छोरा हुन्या छन् भनी ।
राजालाइ दिया र पायस तहाँ लूक्या[2] ति अग्नी पनी ॥
राजा खूसि भई दुवै ति ऋषिका कोमल् चरण्मा परी ।
कौशल्या र ति केकयी कन दिया पायस् दुवै भाग् गरी ॥ ५४ ॥

खान् बाँकि थियो तसै वखतमा आइन् सुमित्रा पनी ।
कौशल्या र ति केकयी सित भनिन् ख्वै भाग मेरो भनी ॥
दूवैले दुइ भाग देखि झिकि भाग् तिन्को पुऱ्याई दिया ।
तिन् रानी मिलि तेहि पायस तहाँ सम्पूर्ण खाई लिया ॥ ५५ ॥

---

१ नेपाल—शान्ताका पति पै वशिष्ठ दुइ भै। २ नेपाल—छँप्या।

तीनै रानि ति गर्भिणी पनि भया तेज् देवताका सरी ।
देखीयो सब रानिका सकल लोक् खुसी भया तेस् घरी ॥
कौशल्या जननी गराइ भगवान् श्रीराम पैदा भया ।
देखिन् श्रीप्रभुको चतुर्भुज स्वरुप् सब् माइका ताप् गया ॥ ५६ ॥

हात् जोरी बहुतै स्तुती पनि गरिन् ईश्वर् इनै हुन् भनी ।
जान्याँ नाथ ! हजूरलाइ सबका आत्मा स्वरूपी भनी ॥
यो ब्रह्माण्ड पनी सहज् उदरमा लीन्या त आफैं थियौ ।
मेरा आज उदर् विषे बसि यहाँ यो जन्म ऐल्हे लियौ ॥ ५७ ॥

देख्याँ भक्त उपर् दया हजुरको हे नाथ् ! शरण्मा पर्‍याँ ।
यै मूर्ती प्रभुको सदा मन महाँ झल्कोस् पुकारा गर्‍याँ ॥
यस्तो दिव्य शरिर् लुकाइ कन बेस् बालक्स्वरुप्का बनी ।
दर्शन् देउ मलाइ हेर्छु भगवान् ! फेर् बाललीला पनी ॥ ५८ ॥

तेही बालकमूर्तिलाइ म यहाँ आलिङ्गनादी गरी ।
सब् पाप् नष्ट गराउँला र करुणा होला र जाँला तरी ॥
यो बिन्ती महतारिको सुनि हुकुम् यो भो प्रभूको तहाँ ।
मातर् ! जुन् छ हजूरको हित कुरो होवस् सबै थोक् यहाँ ॥ ५९ ॥

---

१ नेपाल—छिपाइ ।

दूवै स्त्री पुरुषै भई अघि ठुलो मेरो तपस्या गर्‍यौ ।
तीमीलाइ म पुत्र पाउँ भनि खुप् इच्छा यसैमा धर्‍यौ ॥
हूँला पुत्र भनेर वर् पनि दियाँ सोही कुराले यहाँ ।
तिम्रो पुत्र भयेर जन्मन गयाँ व्यर्थैं म गर्थ्यो कहाँ ॥ ६० ॥

कौशल्या सित बात् पनी यति गरी बालक् सरीका बनी ।
चेष्टा बालक कै लिया प्रभुजिले खुप् रून लाग्या पनी ॥
थाहा भो दशरथ्जिलाइ र गया दर्शन् गर्‍याथ्या जसै ।
देख्तैमा परिपूर्ण मन् हुन गयो आनन्द पाया तसै ॥ ६१ ॥

तत्क्षणमा तहि जातकर्म पनि भो सब् काम् गुरूले गर्‍या ।
कैकेयी तिर ता भरत् हुन गया आनन्दमा सब् पर्‍या ॥
जमल्याहा दुइ पुत्र पाउँदि भइन् ताहाँ सुमित्रा पनी ।
जेठा लक्ष्मण ता भया ति दुइमा शत्रुघ्न कान्छा बनी ॥ ६२ ॥

तिन् रानी तिर चार पुत्र सुकुमार् जन्मी सक्याथ्या जसै ।
भूमी रत्न सुवर्ण वस्त्रहरूका भारी भया[१] दान् तसै ॥
कौशल्यासुतको वशिष्ठ गुरुले नाम् राम भन्नू भनी ।
राख्या केकयिपुत्रको भरत नाम् जमल्याहको नाम् पनी ॥ ६३ ॥

---

१ हामनाथ—वस्त्रहरूको भारी भयो ।

जेठाको शुभ नाम लक्ष्मण गरी जुन् चाहिं कान्छा थिया ।
तिन्को नाम् पनि काम माफिक असल् शत्रुघ्न राखी दिया ॥
लक्ष्मण् राम् सित खेल्दछन् भरत थ्यैं शत्रुघ्न खेल्दा भया ।
पायस् कै अनुसारले हुन गयो प्रीती त बढ्दै गया ॥ ६४ ॥

बालक्काल् बिति गै गयो प्रभुजिको सब् बाललीला गरी ।
चारै को व्रतबन्ध भो पढि सक्या सब् शास्त्र खुप् क्षोद् गरी ॥
खेल्या क्यै दिनमा सिकार वनमा साँचा सिकारी बनी ।
राज्काज् गर्नु जती थियो सकल स्यो राज्काज् चलाया पनी ॥ ६५ ॥

राम् हुन् परात्मा ति कहाँ विकारी ।
यस् लोकमा छन् नररूपधारी ॥
काम् गर्न लाग्या ति नरै सरीका ।
लीला अपार् छन् भगवान् हरीका ॥ ६६ ॥

राम् नारायण हुन् भनेर मनले जान्या र भेट्छू भनी ।
विश्वामित्र ऋषी बहुत् खुसि हुँदै आया अयोध्या पनी ॥
देख्या श्री दशरथ्जिले र बहुतै आदर् ऋषीको गरी ।
सोध्या काम् किन आज आउनु भयो भन्दै बहुत् प्रेम् धरी ॥ ६७ ॥

---

१ होमनाथ—सब् शास्त्रको बोध् गरी । २ नेपाल—यो ।
बबई—सब् शास्त्र पारै गरी ।

आदरपूर्वकका सुन्या प्रिय वचन् यसता ऋषीले जसै ।
आफ्नू दर्द जउन् थियो मन महाँ सोही बताया तसै ॥
हे राजन् ! सब पर्व पर्वहरुमा ईश्वर् विषे मन् धरी ।
गर्छू होमहरु कर्म तेस् बखतमा आयेर होम् नाश् गरी ॥ ६८ ॥

मारिच्ले र सुबाहुले बहुत दिक् गर्छन् र पाप् हुन् भनी ।
दूवैलाई मराउना कन उठ्यो रिस् आज मेरो पनी ॥
सोही बिन्ति गरूँ भनेर अहिले आयाँ हजुर्मा यहाँ ।
जेठा पुत्र मलाइ बक्सनु हवस् लै जान्छु ऐल्हे तहाँ ॥ ६९ ॥

लक्ष्मण् साथ् गरि रामलाइ अधिराज् ! ऐल्हे हजुर्ले दिया ।
मारिच्लाइ सुबाहुलाइ सहजै मार्न्या इनैले थिया ॥
यस्मा अर्ति वशिष्ठको लिनु हवस् दीना न दीना महाँ ।
भन्छन् दीनु त बक्सनू पनि हवस् यै काम आयाँ यहाँ ॥ ७० ॥

विश्वामित्रजिको सुन्या वचन यो राजा सकस्मा पऱ्या ।
दीऊँ की त न दीऊँ येहि मनमा चिन्ता बहूतै गऱ्या ॥
सोध्या ताहिँ वशिष्ठ ध्यैं पनि गुरो ! यस्तो पऱ्यो क्या गरू ।
कल्याण् हुन्छ कसो गरेर अहिले अर्ती मिलोस् एक चरू ॥ ७१ ॥

---

१ नेपाल—सुन्या र २ वचन् । अध्यात्मरामायण—विश्वामित्रोऽपि त प्रेम प्रत्युवाच महामतिः ।

राम्लाई म न देखि बाँच्छु कसरी एक् यै कठिन् भो अनी ।
इन्लाई न दिया सराप् पनि दिनन् की लाग्छ यस्तो पनी ॥
यस्मा श्रेय यसो छ यो गर भनी पाऊँछु आज्ञा जसो ।
सोही काम म गर्दछु हित हुन्या कुन् पाठ् छ गर्नु कसो ॥ ७२ ॥

यो बिन्ती दशरथ्जिको जब सुन्या ताहीं गुरूले पनी ।
राम्को गुह्य कुरो सबै भनि दिया यस्ता इ राम् हुन् भनी ॥
हे राजन् ! तिमि ता इ राम[1] अहिले हुन् पुत्र मेरा भनी ।
भन्छौ पुत्र तँ[2] हुन् तथापि इनि[3] हुन् चौधै भुवन्का धनी ॥ ७३ ॥

भूभार् हर्न निमित्त आज भगवान् यस् पृथ्वितल्मा झऱ्या ।
कौशल्या तिर जन्मनू पनि थियो सो सत्य ऐल्हे गऱ्या ॥
कौशल्या दशरथ् दुवै तिमि अघी कश्यप् अदीती थियौ ।
ईश्वर्लाइ म पुत्र पाउँ भनि तप् गर्दै समाधी लियौ ॥ ७४ ॥

खूसी भै वरदान् दिया प्रभुजिले छोरो म हूँला भनी ।
सोही सत्य गराउना कन यहाँ जन्म्या परात्मा पनी ॥
शेष् हुन् लक्ष्मण शङ्ख हुन् भरतजी शत्रुघ्न चक्रावतार् ।
हुन् को जान्दछ तत्त्व यो बुझ तिमी लीला प्रभूकी अपार्[4] ॥ ७५ ॥

---

१ होमनाथ—तिमि रामलाइ ।
२ ऐजन—ति ।
३ ऐजन—इ त ।
४ होमनाथ, बंबई—प्रभूको ।

मुल् शक्ती प्रभुकी अनन्त गुणकी सो दिव्य मूर्ती[1] बनी ।
छोरी भै ति वस्याकि छन् जनककी सीता छ नाऊँ पनी ॥
सीताराम् दुइको विवाहविधिले संयोग् गराऊँ भनी ।
विश्वामित्रजिका भयो र मनमा आई रह्याछन् पनी ॥ ७

दीन्यै योग्य म मान्दछू भनि गुरूले अर्ति दीया जसै ।
खूसी भै दशरथ्जिले पनि दिया लक्ष्मण् सहित् राम् तसै ॥
राम् लक्ष्मण् कन पाउँदा ऋषि पनी अत्यन्त खूसी भया ।
आशिर्वाद् दशरथ्जिलाइ दिइ राम् लक्ष्मण् लिई ती गया ॥ ७

केही दुर् गइ रामलाइ ऋषिले विद्या सिकाई दिया ।
जुन् विद्या पढि भोक् थकाइ कहिले लाग्दैन यस्ता थिया ॥
गङ्गाका तिरमा बडो वन थियो पुग्या जसै ती तहाँ ।
विश्वामित्रजिले कह्या प्रभुजि ध्यैं राम् ! ताडका छे यहाँ ॥ ७

त्यो हो राक्षसि कामरूपि छ बहुत् लोक्लाइ बाधा पनी ।
गर्छे यस् कन मारि बक्सनु हवस् यो पापिनी हो भनी ॥
विश्वामित्रजिका वचन् कन सुनी श्रीरामजीले पनी ।
टङ्कार् खुप् धनुकोगर्‍या सुनियहाँ त्यो जल्दि आवस् भनी ॥ ७

१ नेपाल—मूलशक्ती प्रभुको अनन्त गुनको सो दिव्य मूर्ती बनी ।



रामचन्द्र विश्वामित्रको यज्ञरक्षा गर्दै हुनुहुन्छ

त्यो टङ्कार् सुनि ताडका पनि तहाँ दौडेर आई जसै ।
हान्या बाण् प्रभुले गड्यो हृदयमा त्यो बाण् मरी त्यो तसै ॥
यक्षी थी अघिकी सराप् परि तहाँ तेसती भयाकी थिई ।
रामले मारि दिदा त स्राप् पनि टर्‍यो फेर् यक्षिको रुप् लिई ॥ ८० ॥

श्री रामचन्द्रजिका वरीपरि घुमी प्रेमले नमस्कार् गरी ।
स्वर्गैमा गइ रामका वचनले बेस् एक् विमान्मा चढी ॥
विश्वामित्र ऋषी बहुत् खुसि भया यो कार्य देख्या जसै ।
जो सब् शास्त्ररहस्य हो सब दिया ती रामलाइ तसै ॥ ८१ ॥

कामाश्रम् रमणीय थल् तहिं थियो एक् रात् तहाँ वास् गरी ।
फेर् सिद्धाश्रममा गया रघुपती सब्लाइ मङ्गल् गरी ॥
तेस् सिद्धाश्रममा अनेक् ऋषि थिया पूजा सबैले गर्‍या ।
मारिच् फेक्र सुबाहु मार्न कन राम् ताहाँ अगाडी सर्‍या ॥ ८२ ॥

विश्वामित्रजिलाइ भन्नु पनि भो मारिच् सुबाहू कहाँ ।
बस्छन् यज्ञ ठुलो गरी लिनु भया ती आउँथ्या की यहाँ ॥
भेटै आज भयेन मार्नु कसरी यो मर्जि सून्या जसै ।
विश्वामित्र ऋषी अरू ऋषि लिई होम् गर्न लाग्या तसै ॥ ८३ ॥

दिन् मध्याह्न भयो तसै बखतमा आया ति राक्षस् पनी ।
मर्‍याँ काल् कन चाल् न पाइ अघि झै होम् नाश् गरौंला भनी ॥
काहीं[1] हाड खसाउँछन् कहिं[2] रगत् यस्तै प्रकार्ले गरी ।
आया ती जब यज्ञमा प्रभुजिले हान्या अगाडी सरी ॥ ८४ ॥

---

१ भारतजीवन, नेपाल—कोही । २ नेपाल—रगत कै ।

मारिच्लाइ त वाणले जलधिका तिर्मा पुऱ्याई दिया।
अग्नीबाण धरी सुबाहु कन ता भस्मै गराई दिया[1]॥
तिन्का फौज् पनि ताहिं लक्ष्मणजिले मारी सक्याथ्या जसै।
खूसी भै कन पुष्पवृष्टि गरियो[2] सब् देवताले तसै॥ ८५॥

विश्वामित्र बहुत् प्रसन्न हुनु भै राम्लाइ काख्मा लिया।
भोजन् गर्न निमित्त राम् कन तहाँ मीठा फलादी दिया॥
तिन् दिन् ताहिं मुकाम गऱ्या प्रभुजिले वार्ता कथाको गरी।
चौथा दिन् ऋषिले गऱ्या विनति एक् राम्का अगाडी सरी॥ ८६॥

हे राम्! जाउँ जनक्जिका पुरि महाँ राजा जनक् छन् बडा।
गर्नन्[3] आदर भक्तिले हजुरका साम्ने हुन्या छन् खडा॥
ताहाँ एक् शिवको धनुष् पनि छ वेस् देखीयला त्यो पनी।
यो विन्ती ऋषिको सुनेर रघुनाथ् खूसी भया बेस् भनी॥ ८७॥

विश्वामित्र र भाइ लक्ष्मण लिई श्रीराम् हिंड्याथ्या जसै।
आश्रम् गौतमको पऱ्यो नजरमा गङ्गाकिनार्मा[4] तसै॥
आश्रम्का नजिकै असल् फल सहित् फुल्को[5] वगैंचा थियो।
जन्तू नाम् त थियेन कोहि त पनी संभार् विनै त्यो जियो॥ ८८॥

---

१ होमनाथ—लिया।
२ नेपाल, होमनाथ—गरिया।
३ होमनाथ—तीन्ले।
४ नेपाल—किनार्को।
५ वर्ड—फुल।

मालुम् रामकन क्या कहीं कमि थियो जो ता जगत्का धनी।
सोध्या तै पनि यो असल् छ किन यो रित्तै वधैंचा भनी ॥
विश्वामित्र थिया सबै गुणनिपुण् विस्तार् सुनाया पनी।
गौतम्को अघि वस्ति हो अब भन्या छैनन् यहाँ कै पनी[1] ॥ ८९ ॥

भार्या गौतमकी समान गुणकी भक्तै अहल्या थिइन्।
ब्रह्माकी ति त पुत्रि हुन् गुणि हुँदा सब् खुस् गराई लिइन् ॥
गौतम् कार्य निमित्त दुर् जब गया रुप् गौतमैको सरी।
धारी गौतमपत्निका नजिकमा[2] इन्द्रै अगाडी सरी ॥ ९० ॥

आई भोग विलास् गरेर खुसि भै फर्की गयाथ्या जसै।
देख्या गौतमलाइ गौतमजिले आश्चर्य मान्या[3] तसै ॥
आफ्नू रूप दुरुस्त देखि कन खुप् गौतम् रिसाया पनी।
सोध्या होस् तँ कउन् बता नतर ता हेर् भस्म गर्छु भनी ॥ ९१ ॥

ब्राह्मण् इन्द्र म हूँ भनेर डरले बिन्ती गर्याथ्या जसै।
गौतम्ले पनि रीसमा परि दिया यस्तो सराप् पो[4] तसै ॥
योनीमा अति लुब्ध आज भइछस् यस्तो बडो भै पनी।
तेरा येहि शरीरमा अब हुनन् हज्जार योनी भनी ॥ ९२ ॥

---

१ होमनाथ—भनी।
२ नेपाल—निकटमा।
३ ऐजन—देख्या।
४ ऐजन—भो।

दीया येति सराप् र इन्द्र पनि फेर् आफ्ना स्थलैमा गया।
पत्नीलाइ सराप् दियेर ऋषिले पत्थर बनाई दिया॥
जन्तू कुछ् न हुनन् यहाँ अब उपर् पत्थर् भई तैँ रह्यास्।
जैले ता रघुनाथ चरण् धरि दिनन् तैले तँ मुक्तै भयास्॥ ९३।

यस्तो सत्य सराप् पन्यो र पतिको ताहीँ अहल्या पनी।
पृथ्वीमा गिरि गै गइन् अचल एक् पत्थर् स्वरुप्की बनी॥
पादस्पर्श ति खोज्दथिन् हजुरको पाप् मुक्त होला भनी।
तिन्लाई करुणा गरी हजुरले कुल्ची दिन्या हो भनी॥ ९४।

यस्तो बिन्ति सुन्या जसै ति ऋषिका श्रीराम् तुरुन्तै गया।
देख्या पत्थर एक् ठुलो र रघुनाथ्ले कुल्चि दींदा भया॥
सुन्दर् मूर्ति भई खडा भइ गइन् ताहाँ अहल्या पनी।
श्रीरामचन्द्रजिले प्रणाम् पनि गन्या ई ब्राह्मणी हुन् भनी॥ ९५॥

देखिन् श्री रघुनाथलाइ र तहाँ खूसी अहल्या भइन्।
पूजा स्तूति गरेर राम् सित बिदा मागी पती थ्यैं गइन्॥
ताहाँ देखि चल्या र जल्दि रघुनाथ् गङ्गाजिका तिर् झन्या।
तर्नाको प्रभुले जसै मन गन्या माझी चरण्मा पन्या॥ ९६॥

---

१ सोमनाथ—हुन्।
२ नेपाल—मन—"स्तुति" [illegible] भइस्याले गरेको प्रसिद्ध स्तुतिको शेष हुन्छ "मन" ले हुँदैन। स०
३ नेपाल—भारतजीवन—गया
४ भारतजीवन—मल्ला, नेपाल—नाविक्।

स्वामित्! ई दुइ पाउको अति असल् धूलो जसै ता पऱ्यो ।
पत्थर् हो त पनी मनुष्य सरिको सुन्दर् स्वरूपै धऱ्यो ॥
तस्[1]तै पाठ यहाँ भयो पनि भन्या डुङ्गा स्वरुप् धर्दछन् ।
डुङ्गाले[2] पनि रुप् धन्या यदि भन्या हाम्रा जहान् मर्दछन् ॥ ९७ ॥

तस्मात् पाउ पखालि वारि[3] तिरमा हाम्रा सिरोपर धऱ्यौं ।
येती बात गऱ्यौं भने त तिमि ता गङ्गाजिका पार् तऱ्यौं ॥
यस्तो बिन्ति सुनी तहाँ प्रभुजिले पाऊ अगाडी दिया ।
माझीले[4] जलले पखालि उहि जल् आपना सिरोपर् लिया ॥ ९८ ॥

यस्ता रित् सित नाउमा चढि सहज् गङ्गाजिका पार् गया ।
श्यामसुन्दर् रघुनाथ् बहुत् खुसि हुँदै दाखिल् जनकपुर् भया॥
विश्वामित्र ऋषी बहुत् खुसि हुँदै दूई कुमार् साथ् गरी ।
आया यस् पुरिमा भनी जब सुन्या दौड्या जनक् तेस् घरी ॥ ९९ ॥

पूज्या[5] प्रश्न गऱ्या सबै कुशलको पाऊ महाँ सिर् धरी ।
देख्या सुन्दर राजकुमार् जनकले पूज्या ति ईश्वर् सरी ॥
पक्का गर्न निमित्त फेर् जनकले सोध्या ऋषी थ्यै पनी ।
जान्या जान्न त चित्तले त भगवान् विष्णू इनै हुन् भनी ॥१००॥

---

१ नेपाल—तस्तै पाउ, ( पाठ ? ) यहाँ पऱ्यो पनि गन्या नाऊ स्वरूप धर्दछन् ।
२ पेजन—नाऊले ।
३ पेजन—ताहिं ।
४ भारतजीवन—मल्हाले, नेपाल—नाविक्ले ।
५ होमनाथ—पूगी ।

ब्रह्मन् ! पुत्र इ हुन् कउन् पुरुषका विस्तार् हवस् बेस् गरी ।
क्लेश्को लेश न राखि यस् वखतमा मेरो लग्या मन् हरी ॥
विश्वामित्रजिले सुन्या विनति यो राजा जनक्को जसै ।
यस्ता हुन् इ भनेर सब् ति ऋषिले विस्तार् बताया तसै ॥१०१॥

हे राजन् ! दशरथ्जिका इ सुत हुन् नाम् राम लक्ष्मण् भनी ।
भन्छन् मानिसले गरी न सकिन्या गर्छन् पराक्रम् पनी ॥
मारिच्लाइ सुबाहुलाइ अरु ता को जित्न सक्न्या थिया[1] ।
राम्ले मारिचलाइ फेंकि सहजै सूबाहु मारी दिया[2] ॥१०२॥

पत्थर् भै कति वर्ष सम्म रहँदी गौतम्कि नारी थिइन् ।
पाऊले तहिं कुल्चँदा उठि गइन् जस्ता कि तस्ती भइन् ॥
याहाँ[3] एक् शिवको धनू छ भनि यो सूनेर आया यहाँ ।
देख्नाको मतलब् छ आज त यहाँ राखी रह्याछौ कहाँ ॥१०३॥

चाँडो आज नजर् गराउ भनि यो विस्तार् गऱ्याथ्या जसै ।
मन्त्रीलाइ हुकुम् दिया जनकले लौ ल्याउ भन्न्या तसै ॥
यै बिच्मा ऋषि थ्यैं भन्या जनकले राम्ले उचालुन् धनू ।
सीता छोरि म दिन्छु राम् कन गरुन् बीहा बहुत् क्या भनू ॥१०४॥

---

१ नेपाल—कोइ कसी न गरेर ।
२ भरतजीवन, बम्बई—थियो ।
३ बम्बई—दियो ।
४ भारतजीवन, होमनाथ, बम्बई—यहाँ ।

साँचा वाणि सुन्या र सोहि रितका बातचित गऱ्याथ्या जसै ।
पाँच् हज्जार् विरले उचालि बलले ल्याया धनूषै तसै ॥
ताहाँ श्री रघुनाथ् उठेर नजिकै सोहीं[1] धनू थ्यैं गया ।
वाम् हातमा सहजै उचालि धनु त्यो राम्ले त लींदा भया ॥१०५॥

ताँदो जल्दि चढाइ खैंचनु भयो ताहाँ धनुष् कै जसै ।
दूई टूक भई गिऱ्यो उ धनु[2] ता खूसी भया सब् तसै ॥
हर्षै हर्ष भयो तसै बखतमा सारा जनक्पुर् भरी ।
आदर् खुप् प्रभुको गऱ्या जनकले[3] आलिङ्गनादी गरी ॥१०६॥

सीताजी पनि रामका सिर उपर् माला कनक्को धरी ।
छम् छम् पाउ गरी फिरिन् घर महाँ मङ्गल् भयो तेस् घरी ॥
मालिक् हुन् दशरथ् खबर् दिनु पऱ्यो ती छन् अयोध्या महाँ ।
जाउन् पत्र लियेर मानिसहरू चाँडो ति आउन् यहाँ ॥१०७॥

यसतो बिन्ति जनक्जिले पनि गऱ्या लेखेर विस्तार् दिया ।
विस्तार्पत्र लियेर दुतहरु पनी जल्दी अयोध्या गया ॥
यो विस्तार सुन्या जसै ति नृपले आनन्दमा ती पऱ्या ।
सब्ले जानु पऱ्यो जनक्पुर महाँ भन्न्या हुकुम् यो गऱ्या ॥१०८॥

---

१ नेपाल—उही ।

२ भारतजीवन—दूई टूक भयो गिऱ्यो उ धनु ता । होमनाथ—दूई टूक भई गिऱ्यो धनुष ता ।

३ नेपाल्—आदर् खुप् नृपले गऱ्या प्रभुजिका ।

जम्मा लस्कर भै गयो क्षण महाँ जल्दी जनक्पुर् पुग्यो ।
क्या वर्णन् भिडको गरूँ तस बखत् खाली अयोध्या भयो ॥
यस्ता रित् सित सब् गया जति थिया सेना जनक्पुर् महाँ ।
दाखिल् भो दशरथ्जिका हुकुमले हर्षै बढ्यो खुप् तहाँ ॥१०९॥

ताहाँ श्री दशरथ्जिको जनकले आदर् बहुतै गऱ्या ।
लक्ष्मण्ले सँग राम् पनी तहिं पिताजीका चरण्मा पऱ्या ॥
बस्नालाइ हवेलि सुन्दर जनक्जीले खटाया जहाँ[1] ।
खूसी भै दशरथ् पनी गइ बस्या तेसै हवेली महाँ ॥११०॥

सुन्दर् लग्न खटन् गऱ्या जनकले मङ्गल् सहर्मा चल्या ।
नाच् कीर्तन् सितका प्रकाश् कन हुन्या रात्मा चिराक् खुप् बल्या॥
जो मण्डप् छ विवाहको तस उपर् झुम्का हिराका झुल्या ।
मूँगा मोति जुहार्[2] जनक्पुर महाँ घर् घर् सबैका झुल्या ॥१११॥

यस्तै रित् गरि सब् विवाहविधिले चारै जना भाइको ।
हर्षले परिपूर्ण मन् हुन गयो सीताजिका माइको ॥
राम् लक्ष्मण् दुइलाइ ता जनकले आफ्ना ति छोरी दिया ।
भाईका त भरत्जिलाइ र ति विर् शत्रुघ्नलाई दिया ॥११२॥

---

१ होमनाथ—रहाँ।  २ नेपाल—त और्।

सीता पत्नि भइन् रमापतिकि ता लक्ष्मण्जिकी उर्मिला ।
पत्नी हुन् श्रुतकीर्ति ता भरतकी शत्रुघ्नकी माण्डवी ॥
जस्तै आफु थिया अनन्त गुणका चौधै भुवन्का धनी ।
आभ्यन्तर्मनले विचार गरदा तस्तै ति पत्नी पनी ॥११३॥

विश्वामित्र वशिष्ठ दुइ ऋषि थ्यैं यस्ती सिता हुन् भनी ।
उत्पत्ती अघिको सबै जनकले विस्तार् बताया पनी ॥
जान्थ्यौं भूमि पवित्र गर्न भनि एक् क्वै यज्ञ गर्दा महाँ ।
जोत्तामा त सिताजि निस्कन गइन् आश्चर्य मान्याँ तहाँ ॥११४॥

पाल्याँ छोरि भनेर नाम् पनि असल् सीताजि राखी दियाँ ।
गर्थिन् बालकमा अनेक् तरहका लीला म खूसी थियाँ ॥
राम् नाम्ले दशरथ्जिका सुत भई खेल्छन् अयोध्या महाँ ।
तिम्री पुत्रि सिता उनै प्रभुजिकी माया ति आइन् यहाँ ॥११५॥

---

१ उर्मिला र माण्डवीमा अनुप्रास मिलेको छैन । भरतकी रानीको नाऊँ माण्डवी हो औ शत्रुघ्नकी रानीको नाऊँ श्रुतकीर्ति हो । बाल्मीकीय रामायण—तमेवमुक्त्वा जनको भरतं चाभ्यभाषत । गृहाण पाणिं माण्डव्याः पाणिना रघुनन्दन । शत्रुघ्नं चापि धर्मात्मा अब्रवीन्मिथिलेश्वर । श्रुतकीर्तेर्महाबाहो पाणिं गृह्णीष्व पाणिना । अतएव अध्यात्म रामायणको "तथैव श्रुतकीर्तिं च माण्डवीं भ्रातृकन्यके । भरताय ददावेकां शत्रुघ्नायापरां ददौ ।" भन्ने श्लोकको अर्थ बाल्मीकीय रामायणका श्लोक बमोजिम लाउनु पर्छ अर्थात् माण्डवी र श्रुतकीर्ति दुई मध्ये जेठी भरतलाई दिये औ अर्की शत्रुघ्नलाई दिये भन्ने लाउनु पर्छ । "एका" को "पूर्वा" भन्ने अर्थ हुँदैन' यो भूल कसको हो सो भन्नु गाह्रारो छ भानुभक्तको ▥ होइन होला । सानेहरको भूल हुन सक्छ तर भानुभक्त द्वारा स्वय लिखित रामायण न पाई निश्चित भन्नु असम्भव छ । स०

२ होमनाथ—जस्तै ।

यो लीला छ बुझी सिता कन तिनै राम्लाइ दीया भनी ।
नारद्जी[1] उठि गै गया उहि सुनी याद् भो मलाई पनी ॥
कुन् पाठ्ले अब रामलाइ म सिता पारूँ विचार् यो गर्‍याँ ।
थीयो यो शिवको धनुष् यहिँ यसैमा यो प्रतिज्ञा गर्‍याँ ॥११६॥

ताँदो यस् धनुको चढाउन जउन् विर्‌ले त सक्‌ला यहाँ ।
सीता छोरि दिन्याछु तेस् कन फिका होवैन यस् बात् महाँ ॥
जानुन् सब् विरले भनी कन गर्‍याँ यस्‌तो प्रतिज्ञा जसै ।
यो सूनी कन देशका विरहरू आया तुरुन्तै तसै ॥११७॥

को सक्थ्यो धनु त्यो उठाउन विना श्रीराम् अगाडी सरी ।
हिक्मत् हारि सबै घरै फिरि गया दर्शन् धनूको गरी ॥
राम्ले पूर्ण गराइ बक्सनु भयो मेरो प्रतिज्ञा पनी ।
यो चीन्ह्यॉ पनि सब्र कृपा[2] चरणले गर्दा भयाको भनी ॥११८॥

विश्वामित्रजि ध्यैं पनी जनकले बिन्ती अगाडी सरी ।
सीतानाथ् रघुनाथको[3] स्तुति गर्‍या आनन्दमा ती परी ॥
दाईजो सय कोटि दोलत सहित चेस् चेस् अयुत रथ् दिया ।
घोडा ता सय लाख् दिया छ सय ता खुप् मत्त हात्ती थिया[4] ॥११९॥

---

१ नारद आयेको कुरा माथी भनियेको छैन। सं०
२ नेपाल—प्रसन्द।
३ रैकन्—रघुनाथका।
४ होमनाथ—दिया।

पंठ्ल् लस्कर एक लाख् र सय तिन् केटी दियाथ्या जसैं ।
पूजा फेरि वशिष्ठको पनि गन्या भारी डचल्ले तसैं ॥
पूजा ताहिँ भरतजिको पनि भयो लक्ष्मणहरूको पनी ।
इच्छा भो रघुनाथको अब फिरौं जाऔं अयोध्या भनी ॥१२०॥

जानाको मनलय् बुझी जनकजी रामका चरणमा पऱ्या ।
रूसी मन् सबको गराइ बहुतैं बीदा जनकले गऱ्या ॥
सीताजी महतारिका अघि गईं आलिङ्गनादी गरी ।
लागिन् रून र सोहि सुनि सबका आँसु खस्या बर्बरी ॥१२१॥

सीताजी कन अर्ति यो पनि दिया मान्नू सम्हरा सरी ।
आफ्नो ईन बडो यही बुझि गऱ्या तिनको टहल् येस् गरी ॥
स्वामी धर्म पतिव्रता हुनु ठुलो जानेर हुनू भनी ।
अर्ती येति दिया र तेस् बखतमा बीदा भया ती पनी ॥१२२॥

यो विधिमा नगर पऱ्या प्रभुजिका भेरी मृदङ्गा पनी ।
स्वामीला पनि हर्ष भो प्रभु गया फेरी अयोध्या भनी ॥
गमसो लस्कर साथ लीन् जनकपुर् हेर्नी जर्न ना गयो ।
नाङ्गा निस माथी पडो भय हिम्त उनका माथैं कसो ॥१२३॥

यस् पृथ्वीतलका ति क्षत्रिहरुको ठूलो विनाशै गरी ।
आया तेस् विचमा तहीं परशुराम् उल्का भयो जुन् घरी ॥
पृथ्वी कम्प भइन् तसै बखतमा हाहा सबैमा परी ।
राजाका मनमा विचार् यहि पऱ्यो छोरा बचुन् क्या गरी ॥१२४॥

यस्तो चञ्चल चित्तले परशुराम्का पाउतल्मा पऱ्या ।
मेरा पुत्र बचुन् प्रभो परशुराम्! भन्न्या इ बिन्ती गऱ्या ॥
यस्तो बिन्ति पनी अनादर गरी कालाग्नि जस्ता भया ।
रामको गर्व हरूँ भनी परशुराम् रामकै अगाडी गया ॥१२५॥

कस्को पुत्र तँ होस् वता म कन रे जाब्रो पुरानू धनू ।
भाँच्दैमा अति गर्व भो तँ कन ता धेरै कुरा क्या भनू ॥
यो ता हो हरिको धनू विर भया ताँदो यसैमा चढा ।
भन्दै खुप् रिसले रह्या परशुराम् राम् कै अगाडी खडा ॥१२६॥

ताँदो आज चढाउँछस् त यसमा सङ्ग्राम् तँ ध्यैं गर्दछ ।
सक्तैनस् तब हेर् म रात्दिन सबैको प्राण् सहज् हर्दछु ॥
यस्ता क्रूर वचन् गरी परशुराम् कालाग्नि झैं रुप् धऱ्या ।
पृथ्वी कम्प गराइ लोकहरुको सम्पूर्ण सातो हऱ्या ॥१२७॥

---

१ सोमनाथ—हस्य ।

यस्तो क्रूर वचन् सुनेर रघुनाथ् क्रोध्ले अगाडी सरी ।
खोसी लीनु भयो धनुष् परशुराम्को त्यो बलैले गरी ॥
ताँदो जल्दि चढाइ बाण् पनि तहाँ लीनु भयेथ्यो जसै ।
ठूलो बल् रघुनाथको बुझि सबै खूसी भयो लोक् तसै ॥१२८॥

हूकुम् श्री रघुनाथको परशुराम्लाई भयो यो तहाँ ।
तारो आज बताउ हान्छु अहिले ब्रह्मन् ! म हान् कहाँ ॥
चाँडो उत्तर देउ यस् बखतमा यस्लाइ लौ हान् भनी ।
तारो क्यै न दिया त काट्छु अहिले तिम्राइ गोडा पनी ॥१२९॥

हूकुम् येति गरेर तेज् परशुरामको खैंचन् भो जसै ।
चीन्ह्या श्रीरघुनाथलाइ अधिको वृतान्त सम्झ्या तसै ॥
बिन्ती येति तहाँ गर्‍या पनि हरे ! चीन्ह्याँ जगन्नाथ् भनी ।
जसको अंश मिल्यो र केहि भगवान् ! यसतो भयाँ मै पनी ॥१३०॥

पापी भो अति कार्तवीर्य अब ता यस्लाइ मार्छु भनी ।
बालक् पो म थियाँ गर्‍याँ हजुरको ठूलो तपस्या पनी ॥
यस्तो वर् खुसि भै मलाइ दिनु भो शक्ती समेत्को गरी[2] ।
इच्छा पूर्ण हुन्याछ जाउ अब ता क्यै शक्ति मेरो लिई[3] ॥१३१॥

---

१ भारतजीवन (ब)—भयाको ।
२ होमनाथ—भक्ती समेतै गरी । अध्यात्म रामायण—"मच्चिद्शेन युक्तस्त्व जहि हैहय पुगवम्" 'अंश' को 'शक्ति' द्वारा अनुवाद हुनु जाती हो । 'भक्ति' ता हुन सक्तैन । फेरी तल "यो शक्ति फेरी हरी" भनेको छ । अतएव 'शक्ति' पाठ नै जाती छ । स०
३ बबई—धरी ।

पैल्हे मार र कार्तवीर्य कन फेर् सब् क्षत्रिको नाश् पनी ।
एक्काईस वखत् गऱ्या प्रभुजिको हूकुम् छ यस्तै भनी ॥
क्षत्रीशून्य भयाकि पृथ्वि तिमिले कश्यप्जिलाई दिया ।
येती कर्म गरी सकेर अधिको सेखी पुऱ्याई लिया ॥१३२॥

त्रेतामा अवतार् लिन्याछु नरमा राम् नाम् जगत्मा धरी ।
भेट् होला तिमि ध्यैं उही वखतमा यो शक्ति फेरी हरी ॥
ताहाँ देखि तपै गरेर रहनू ब्रह्मैजिका दिन् भरी ।
येती अर्ति मलाइ दी कन गया वैकुण्ठधाम्मा हरी ॥१३३॥

मैले काम् पनि सो सबै गरि सक्यॉं राम्लाइ भेट्यॉं पनी ।
मेरो शक्ति हजूरले हरि लिंदा चीन्ह्यॉं प्रभू हुन् भनी ॥
मेरो जन्म सफल् भयो सहजमा पायॉं परात्मा पनी ।
बूझ्यॉं तत्त्व सबै पनी हजुरको पात्रै कृपाको बनी ॥१३४॥

जो छन् भक्त हजूरका ति सँगको सत्सङ्ग मेरो हवस् ।
यो भक्ती दृढ भै प्रभू ! हजुरका येही चरणमा रहोस् ॥
येती विन्ति तहाँ गरी सकल पाप् पुण्यै समर्पण् गऱ्या ।
इच्छित् वर् प्रभुले दिंदा परशुराम् आनन्दमा तीं परया ॥१३५॥

---

१ सोमनाथ—मलाजिय ।    २ नेपाल—हरी ।

ताहीँ श्री रघुनाथका वरिपरी घूमी नमस्कार् गरी ।
मर्जीले ति गया महेन्द्र गिरिमा मन् राम् चरण्मा धरी ॥
देख्या तेज् दशरथ्जिले र सुतको हर्षाश्रुधारा धरी ।
प्रेम्का सागरमा तहीँ डुबि गया आलिङ्गनादी गरी ॥१३६॥

येती काम् गरि राम् गया सहजमा पुग्या अयोध्या महाँ ।
सीतालाइ लियेर राज्य सुख भोग रामले गऱ्या क्यै तहाँ ॥
क्यै दिन् भानिज हुन् भरत् कन यहीँ ल्याऊँ घरैमा भनी ।
भानिज्लाइ लिना निमित्त खुसिले आया युधाजित् पनी ॥१३७॥

बीदा श्री दशरथ्जिले पनि दिया बीदा मिलेथ्यो जसै ।
एक् शत्रुघ्न लिई भरतजि त गया मामा कहाँ पो तसै ॥
आया राम विहा गरेर पुरिमा जसै उठेथ्यो खबर् ।
सारा रैयतको प्रसन्न मन भो हुन्थ्यो खुसी क्या अबर् ॥१३८॥

सीताराम् अधि तप् गरिन् र त यहाँ छोरा बुहारी भया ।
कौशल्या कन ता मिल्यो अदितिको शोभा सबै ताप् गया ॥
सीताराम् पनि लोकमा सकलको आनन्दमङ्गल् गरी ।
चेष्टा मानिसको गरी कन रह्या त्रैलोक्यका नाथ् हरी ॥१३९॥

## इति श्रीबालकाण्ड

---

१ बर्द—बै।

२ भारतजीवन, नेपाल—उठेथ्यो खबर्— यो पाठ निरर्थक छ। यो भन्दा बर्ता पाठ त 'उठ्यो त्यो खबर' हुन्छ। सं०

# श्रीअयोध्याकाण्ड

एकान्त स्थलमा सितापति थिया सीता हजुर्मा रही ।
हात्मा चामर ली प्रभू कन तहाँ हाँक्थिन् समीप्मा गई ॥
आकाशमार्ग गरी बहुत् खुसि हुँदै नारद्जि ताहीं गया ।
नारद्जी कन दण्डवत् गरि तहाँ राम्जी बहुत् खुस् भया ॥ १ ॥

संसारी म थियाँ बडो हुन गयाँ दर्शन् मिलेथ्यो जसै[1] ।
यो भाग्योदय हो बुझ्याँ पनि यहाँ दर्शन् मिल्याको उसै[2] ॥
मैले गर्नु छ काम् कउन् हजुरको चाँडो उ आज्ञा हवस् ।
त्यो काम् सिद्ध गराउँला हजुरको आनन्द मन्मा रहोस् ॥ २ ॥

यसता बात् प्रभुका सुनी कन जवाफ् सोही बमोजिम् दिया ।
नारद्ले बहुतै गर्‍या स्तुति तहाँ राम्लाइ मन्मा लिया ॥
विन्ती गर्नु कुरो[3] थियो मन विषे विन्ती गर्‍या त्यो पनी ।
ब्रह्माको विनती लिई हजुरमा आई रह्याँछु भनी ॥ ३ ॥

---

१ होमनाथ—भिन्थ्यो यो ।
२ ऐजन—भिन्थ्यो यो जसै ।
३ ऐजन—कुरा ।



राम-सीता-लक्ष्मण वनमा जाँदै हुनुहुन्छ

भूको भार म दुष्ट मारि हरुँला जान्छु अयोध्या महाँ ।
भन्न्या येति वचन् गरी कन हजुर् पाल्नू भयेथ्यो यहाँ ॥
यस्तो हो तर गादि दीन दशरथ् राजाजिका मन् भयो ।
स्वामित्ले अब राज्यमा भुलि दिया भार् हर्नु काम ता रह्यो ॥ ४ ॥

नारद्का इ वचन् सुनी खुसि भई उत्तर् प्रभूले पनी ।
जल्दी चक्सनु भो म राज्य न गरी भोली म जान्छु भनी ॥
स्वामित्का इ वचन् सुनेर बहुतै नारद्जि खूसी भया ।
तिन् फेरा प्रभुको प्रदक्षिण गरी आकाश्गतीले गया ॥ ५ ॥

न्तोष्ले दशरथ्जिका मन विषे आनन्दमङ्गल् भयो ।
म्लाई अब राज्य दुँ भनि उसै मन् यस् लहड्मा गयो ॥
यस्तो मन् हुन गो र डाकि गुरु थ्यैं यस्तो हुकुम भो पनी ।
भोली राज्य म दिन्छु पुत्र कन सब् सामग्रि ल्याऊ भनी ॥ ६ ॥

मन्त्री डाकि हुकुम् भयो सँग रह्या जो जो कहन्छन् गुरु ।
सो सो चिज् झटपट् तयार् गर अवर् सब् काम छोड्नू बरु ॥
मन्त्रीले पनि यो हुकुम् सुनि तहाँ साथै गुरूका रह्या ।
चाहिन्छन् जति चिज् ति खोज्न गुरुले खोलेर सब् चिज् कह्या ॥ ७ ॥

---

१ नेपाल—मारि ।
२ सर्व—भोली । अध्यात्मरामायण—रावणस्य विनाशार्थं श्वो गन्ता दण्डकाननम् ।
३ रत्नजीवन, होमनाथ—तस्तो मन् हुन गो र डाकि गुरुलाइ कामलाइ हुकुम् भो पनी ।
' अध्यात्मरामायण—वसिष्ठ स्वकुलाचार्यमाहूयेदमभाषत ।
४ होमनाथ—अनै ।

मन्त्रीलाइ अह्राइ राघवजिका साथ्‌मा वशिष्ठै गया ।
पैल्हे श्री रघुनाथले गुरु भनी सम्मान गर्दा भया ॥
हे त्रैलोक्यपते ! गुरू हुन त हूँ तिम्रो म क्या हूँ गुरु ।
इनका हुन्‌ इ गुरू भनेर इ सबै भन्छन्‌ भनुन्‌ लौ बरु ॥ ८ ।

तिम्रो दर्शन पाउँला भनि यहाँ प्रोहित्‌ भया कै म हूँ ।
गुह्यै खुल्छ भनेर डर्‌ हुन गयो धेरै कुरा क्या कहूँ ॥
खोल्न्या छैन म गुह्य चुप्प रहुँला सब्‌ जान्दछु ता पनी ।
जानी जानि म बिन्ति गर्न अहिले आयाँ हजुर्‌मा पनी ॥ ९ ।

भोली हुन्छ तिलक्‌ हजुर्‌ कन यहाँ सामग्रि जम्मा भयो ।
पृथ्वीमा सुकला हवस्‌ हजुरको सब्‌ शास्त्रले भन्छ यो ॥
सब्‌ इन्द्रीय जितेर आज उपवास्‌ गर्नू सिताले सँगै ।
आज्ञा पाउँ म जान्छु काम्‌ छ बहुतै सब्‌ काम्‌ बिचार्‌छु म गै ॥ १० ॥

यस्तो बिन्ति गरी वशिष्ठ गुरु फेर्‌ जरसै गयाथ्या पनी ।
राम्‌ले लक्ष्मण थ्यैं भन्या म तिमिलाइ काम्‌ गर्नै चुँला भनी ॥
छैनन्‌ भाइ भरत पनी त तिनका खातिर्‌ छ मेरी दया ।
कौशल्या सुनि खुस्‌ हुनिन्‌ भनि त जो सम्चार्‌ बताउँदै गया ॥ ११ ॥

---

१ [illegible] ।
२ भरतसिंह, सोमनाथ—इन्द्र ।
३ सोमनाथ—मेरा ।

राजाले त खतम् गऱ्या दिनु भनी क्या गर्दछिन् कैकयी ।
यस्मा विघ्न कदापि पर्न न दिउन् लक्ष्मी र दुर्गा भई ॥
कौशल्या पनि यो विचार् गरि तहाँ गर्थिन् पुजा देविको ।
धौताका मनमा भन्या ठहरियो काम् विघ्न गर्नू निको ॥ १२ ॥

वाणी ! गै तिमि विघ्न पारि कन आउ ती मन्थरा कैकयी ।
द्वी स्त्रीका घटमा पसेर तिमिले काम् सिद्ध लाऊ गई ॥
धौताका इ वचन् सुनेर झटपट् तेस् मन्थरामा पसिन् ।
कैकेयी कन खुप् भुलाउन भनी फेर् कैकयीमा पसिन् ॥ १३ ॥

वाणीका वशमा पऱ्याकि छँदि ती जाहाँ थिइन् कैकयी ।
काम् बित्ला भनि चट्पटाइ तहिं झट् त्यो मन्थरा गै गई ॥
नाना छल् गरि निक्क पारि कन सब् वृतान्त विस्तार् भनी ।
द्वी वर् छन् तिमि मागि ल्यौ भनि ठुलो सूचन् गरी यो पनी ॥ १४ ॥

वाणीले ति भुलाइयाकि छँदि लौ मन्दी भइन् कैकयी ।
राम्लाई वनवास् भरत् कन रजाइँ माग्छु म चाँडो गरी ॥
द्वी वर्ले जब काम सिद्ध गरुँला घँूला सये गाउँ भनिन् ।
बीदा दी घर मन्थरा कन फिराइ रिस् गर्न लाग्दी भइन् ॥ १५ ॥

---

१ दौन्त्य—दूती । मात्स्रीवन—सुम्दाउँ भनि तर्के।

सुन्दर् वस्त्र निकालि फालि कपडा मैला शरिर्मा धरिन् ।
आभूषण् कन फ्याँकि खूप रिसले खाली जमिन्मा परिन् ॥
सज्जन् वेस सुमती पनी कुमतिका सङ्ले त बिग्री गयो ।
भन्छन् जो दुनियाँ उ लक्षण यहाँ ठिक् कैकयीमा भयो ॥ १६ ॥

कैकेयी सित वस्नलाइ खुशिले राजा गयाध्या जसै ।
देख्यानन् र तहाँ कता गइ भनी चाकर्नि सोध्या तसै ॥
क्रोधागार विषे भयाकि त बुझ्याँ कारण् छ कुन् कत्ति यो ।
बूझ्याको पनि छैन गै हजुरले बुझ्नू हवस् क्यान हो ॥ १७ ॥

केटीका इ वचन् सुनी कन डराइ राजा नजिक्मा गया ।
कैकेयी कन क्यान यो रित गऱ्यौ वात् खोल भन्दा भया ॥
जो भन्छु म पुऱ्याउँला भनि शपथ् खाँदा जसै वात् गरिन् ।
राजा वृक्ष सरी गिऱ्या पृथिविमा यस्मा वहुत् जिद् गरिन् ॥ १८ ॥

रामलाई वनवास् भरत् कन रजाइँ देऊ भनी जिद् गरी ।
द्वी वर्ले यहि यौ दिदौंन त भन्या वाँच्नू त मुर्दा सरी ॥
भोली येति कुरा भयेन त भन्या मर्न्याछु विष् खाइ म ता ।
भन्न्या येति कुरा सुनी फिरि गिऱ्या राजा जमिन्मा यता ॥ १९ ॥

---

१ नेपाल, मदनपीठन—पल्टो ।
२ हेमराज—गर्दछि ।
३ रेडन—भो
४ रेडन—रित ।
५ नेपाल, हेमराज—भन्दछो ।

त्यो रात् वर्ष समान् व्यतित् हुन गयो राजा ति मूर्छा भया ।
सब् सामग्रि तयार् गरी कन बिहान् मन्त्री हजुर्मा गया ॥
देख्या चाल् र महाविचार् हुन गयो सोध्या पऱ्यो क्या भनी ।
विस्तार् पाइ सुमन्त्र राम् लिन गया आया तहाँ राम् पनी ॥ २० ॥

राजालाइ त दुःख सुक्ख हुनको कारण् तिमी छौ भनी ।
वन्मा गै तिमि राज्य द्यौ भरतलाइ भन्दी भइन् यो पनी ॥
यस्ता बात् सुनि बात् गऱ्या प्रभुजिले सुन्छ्यौ कि माइ कैकयी ।
राजा खूसि रहुन् म जान्छु वनमा के काम् छ घर्मा रहीं ॥ २१ ॥

गाह्रो कत्ति न मानि जान्छु वनमा राजा त बोलुन् भनी ।
बोल्याको प्रभुको वचन् सुनि तहाँ बोल्छन् ति राजा पनी ॥
हे राम्चन्द्र ! मलाइ आज तिमिले बाँधेर राज्यै गरी ।
छुट्टा देखि बचाउ पाप् तिमि कनै लाग्दैन यस्तो गरी ॥ २२ ॥

राजा येति भन्या र फेर् पनि विलाप् खुप् गर्न लाग्दा भया ।
राजाको बुझियो र आशय तहाँ राम्चन्द्र माइ थ्यै गया ॥
कौशल्या पनि भक्तिले हरिजिका ध्यान्मा रह्याकी थिइन् ।
राम्जीलाइ न देखि कत्ति न छुटाइ ताना प्रभूमा दिइन् ॥ २३ ॥

---

१ होमनाथ—जि—राजजि ।
२ ऐजन—तहाँ ।
३ भारतजीवन—हुन गो ।
४ नेपाली—कैकयी ।

सुमित्राले भन्दा पछि पलक माइका खुलि गयो ।
प्रभूलाई देख्ता[1] अधिक मन सन्तोष् पनि भयो ॥
खुसीले काख्मा ली कन जब भनिन् खाउ कछु भनी ।
सुनी रामज्यू भन्छन् अब त कति खाँला नि म पनी ॥ २४ ॥

गयो खान्या वेला म कन त मिल्यो राज्य वनको ।
भरत्ले राज् पाया यहिं बसि गरुन् राज्य जनको ॥
विदा बक्स्या जावस खुसि सित म जान्याछु वनमा ।
म चाँडै फिर्न्याछु विरह न हवस् कत्ति मनमा ॥ २५ ॥

वचन् सुन्दा मूर्च्छा परि कन उठ्याकी छँदि तहाँ ।
भनिन् कौशल्याले अब म तिमिलाइ छोड्दछु कहाँ ॥
भन्या राजाले ता तर म तिमिलाइ रोक्दछु यहाँ ।
कि साथै लै जाऊ म कन तिमि जान्छौ अब जहाँ ॥ २६ ॥

तिमीलाइ बीदा दी म कसरि यहाँ दुःख सहुँला ।
बरू प्राणै त्यागी यमपुरि महाँ जाइ रहुँला ॥
विलाप् कौशल्याको यति सुनि दयाले भरि गयो ।
तहाँ लक्ष्मणको मन् तब अरु उपर् रिस् हुन गयो ॥ २७ ॥

---

१ नेपाल, हीरानाथ—प्रभूलाई देख्नामा ।

नजर् दी रामज्यूमा अरु सित उठ्याको रिस बढाइ ।
गर्‌या बिन्ती राम् ध्यैं अब भरत ध्यैं गर्दछु लडाइ ॥
हजुर्‌को राज् हर्न्या जति जति त छन् मार्छु सबलाइ ।
पितै बाँधछु पैल्हे भनि कन भन्या क्या छ अरुलाइ ॥ २८ ॥

चढ्या जावस् गादी सकल रिपुको नाश् म गरुँला ।
यसै काम्‌ले माइका सकल मनको शोक हरुँला ॥
सुन्या लक्ष्मण्‌जीका इ वचन जसै राम् खुसि भया ।
बुझाया विस्तार्‌ले पनि तहि ठुलो ली कन दया ॥ २९ ॥

सुन्यौ भाइ ! संसार्‌मा शरिर अति कच्चा छ जनको ।
शरिर् कच्चा जानी न गर तिमि रिस् कत्ति मनको ॥
सबै भोग् चञ्चल् छन् बिजुलि सरि एक् छिन् न रहन्या ।
विचार् यस्तो राखी सहु तिमि बडो हुन्छ सहन्या ॥ ३० ॥

भ्यागुतो खाँ भनि खोज्छ डाँस् मुख विषे साँप्‌ले धर्‍याको पनी ।
तस्तै भोग् गरुँला भनेर मनले भन्छन् दुनीयाँ पनी ॥
क्याको रस् छ यहाँ विचार मनले काल्‌सर्पको मुख् परी ।
क्या होला वन जाउँला[2] इ सबलाइ आनन्द राखुन् हरी ॥ ३१ ॥

---

१ भारतजीवन, होमनाथ–भट्ट । अध्यात्म रामायण–उन्मत्तं भ्रान्तमनसं कैकेयीवशवर्तिनम् । बद्ध्वा निहन्मि भरतं तद्बन्धून्मातुलानपि ॥

२ भारतजीवन—क्या होला वन जानलाइ ।

यस्ता बात् प्रभुका सुनी कन तहाँ सीताजि मूर्छा परिन् ।
पैल्हे ज्योतिषिको कुरो सब कही छोड्दीन सेवा भनिन् ॥
सीताका यति बात् सुन्या र खुसि भै साथै सिताजी लिया ।
ब्राह्मण खूसि सदा रहुन् भनि तहाँ दौलत् बहूतै दिया[1] ॥ ४० ॥

कौशल्याजि जहाँ थिइन् तहिं गई लक्ष्मण्जिले विन्ति लाइ ।
माता मेरि पिछा भइन् भनि तहाँ सुम्प्या सुमित्राजिलाइ ॥
येती काम् गरि रामका हुकुमले लक्ष्मण् तयारी भया ।
सीता लक्ष्मण साथमा लि रघुनाथ् राजा भयामा गया[2] ॥ ४१ ॥

बीदा हून पिताजि थ्यैं जब सिता लक्ष्मण् लि राम्ज्यू गया ।
यस्तो देखि असह्य भो र दुनियाँ सब् शोक गर्दा भया ॥
सीताराम् कन दुःख यो हुन गयो कैकेयि दुष्टै भई ।
सीता आज कसोरि दुःख सहनिन् घोर् जङ्गलैमा गई ॥ ४२ ॥

यो अन्याय भयो यहाँ त न बसौं जाऔं प्रभूका सँगै ।
राम्लाइ छोडि यहाँ कसो गरि बसौं बूझेन मन् ता न गै ॥
यस्ता बात् गरि लोकले त बहुतै[3] शोक् गर्न लाग्या भनी ।
सब् विस्तार् गरि वामदेव ऋषिले सब्लाइ बुझाया पनी ॥ ४३ ॥

---

१ श्लोक ३८ का प्रथम दुई चरण पछी भारतजीवनमा श्लोक ४० का अन्तिम दुइ चरण छन् । माझका श्लोक हरु छुट्का [illegible] अध्यात्मरामायणमा पनी छन् । स०

२ नेपाल—राजाजिका पास् गया ।

३ होमनाथ—लोकले पनि बहुत् ।

हे लोक् हो ! अति गर्दछौ तिमि त शोक् यो शोक ता छाडि यौ ।
साक्षात् विष्णु इ हुन् भनेर मनले श्रीरामलाइ जानि ल्यौ ॥
पृथ्वीको सब भार् हरेर रघुनाथ् फिर्छन् इ जान्छन् कहाँ ।
साँचा हुन् इ कुरा अवश्य तिमिले खेद् कीन मान्यौ यहाँ ॥ ४४ ॥

यस् बातले ऋषिले मनुष्यहरुको खुप् मन् बुझाई दिया ।
पौंच्या राम् पनि कैकयी र दशरथ् जाहाँ बस्याका थिया ॥
हे मातर् ! वन जानलाइ अब ता आयौं जना तिन् चली ।
बीदा जान मिलोस् म जान्छु वनमा रिस् राग् रती भर् न ली ॥ ४५ ॥

आज्ञा जान मिलोस् पिताजिकि पनी जान्छु सदा खुस् म छु ।
दुख् पाउनन् कि भनी पिताजि कन शोक् मन्मा न लागोस् कछु ॥
कैकेयी यति बात् सुनी खुसि भई वस्तर् पुराना दिइन् ।
लाया श्री रघुनाथले ति कपडा सीताजिले ता लिइन् ॥ ४६ ॥

यसता वस्त्र म लाउँ आज कसरी भन्न्या मनैमा धरी ।
लज्जाले रघुनाथका मुख विषे हेरिन् कटाक्षै गरी ॥
श्रीरामले मुद्रा गरी ति कपडा हातमा जसै ता लिया ।
त्यो देखी कन राजपत्निहरु सब् रोया तहाँ जो थिया ॥ ४७ ॥

---

१ होमनाथ—त्यो । २ ?जन—सुनेर ।

यस्ता बात् प्रभुका सुनी कन तहाँ सीताजि मूर्छा परिन् ।
पैल्हे ज्योतिषिको कुरो सब कही छोड्दीन सेवा भनिन् ॥
सीताका यति बात् सुन्या र खुसि भै साथै सिताजी लिया ।
ब्राह्मण खूसि सदा रहुन् भनि तहाँ दौलत् बहूतै दिया ॥ ४० ॥[1]

कौशल्याजि जहाँ थिइन् तहिं गई लक्ष्मण्जिले बिन्ति लाइ ।
माता मेरि पिछा भइन् भनि तहाँ सुम्प्या सुमित्राजिलाइ ॥
येती काम् गरि रामका हुकुमले लक्ष्मण् तयारी भया ।
सीता लक्ष्मण साथमा लि रघुनाथ् राजा भयामा गया[2] ॥ ४१ ॥

बीदा हून पिताजि थ्यैं जब सिता लक्ष्मण् लि राम्ज्यू गया ।
यस्तो देखि असह्य भो र दुनियाँ सब् शोक गर्दा भया ॥
सीताराम् कन दुःख यो हुन गयो कैकेयि दुष्टै भई ।
सीता आज कसोरि दुःख सहनिन् घोर् जङ्गलैमा गई ॥ ४२ ॥

यो अन्याय भयो यहाँ त न बसौं जाऔं प्रभूका सँगै ।
राम्लाइ छोडि यहाँ कसो गरि बसौं बूझेन मन् ता न गै ॥
यस्ता बात् गरि लोकले त बहुतै[3] शोक् गर्न लाग्या भनी ।
सब् विस्तार् गरि वामदेव ऋषिले सब्लाइ बुझाया पनी ॥ ४३ ॥

---

१ श्लोक ३८ का प्रथम दुई चरण पछी भारतजीवनमा श्लोक ४० का अन्तिम दुई चरण छन् । माझका श्लोक हर छुटेका छुन्छन् । तिनमा अनेक आवश्यक कुरा अध्यात्मरामायणमा पनी छन् । स०

२ नेपाल—राजाजिका पास् गया ।

३ होमनाथ—लोकले पनि बहुत् ।

हे लोक हो ! अति गर्दछौ तिमि त शोक यो शोक ता छाडि द्यौ ।
साक्षात् विष्णु इ हुन् भनेर मनले श्रीरामलाइ जानि ल्यौ ॥
पृथ्वीको सब भार् हरेर रघुनाथ् फिर्छन् इ जान्छन् कहाँ ।
साँचा हुन् इ कुरा अवश्य तिमिले खेद् कीन मान्यौ यहाँ ॥ ४४ ॥

यस् बात्ले ऋषिले मनुष्यहरुको खुप् मन् बुझाई दिया ।
पौंच्या राम् पनि कैकयी र दशरथ् जाहाँ बस्याका थिया ॥
हे मातर् ! वन जानलाइ अब ता आयों जना तिन् चली ।
बीदा जान मिलोस् म जान्छु वनमा रिस् राग् रती भर् न ली ॥ ४५ ॥

आज्ञा जान मिलोस् पिताजिकि पनी जान्छू सदा खुस् म छू ।
दुख् पाउनन् कि भनी पिताजि कन शोक् मन्मा न लागोस् कछू ॥
कैकेयी यति बात् सुनी खुसि भई वस्तर् पुराना दिइन् ।
लाया श्री रघुनाथले ति कपडा सीताजिले ता लिइन् ॥ ४६ ॥

यसता वस्त्र म लाउँ आज कसरी भन्न्या मनैमा धरी ।
लज्जाले रघुनाथका मुख विषे हेरिन् कटाक्षै गरी ॥
श्रीरामले मुट्ठरा गरी ति कपडा हात्मा जसै ता लिया ।
त्यो देखी कन राजपत्निहरु सब् रोया तहाँ जो थिया ॥ ४७ ॥

---

१ हामनाथ—त्यो । २ ऐजन—सुनेर ।

दुष्टे ! आज सिताजिलाइ किन यो वस्तर् पुराना दियौ ।
यस् कामले जति छन् यहाँ इ सबको प्राण् खैंचि ऐल्हे लियौ ॥
कैकेयी सित वात वशिष्ठ गुरुले येती गन्याथ्या जसै ।
बीदा भै रघुनाथ् चढ्या रथ विषे सम्पूर्ण रोया तसै ॥ ४८

सीताराम् वनमा चल्या रथ चढी लक्ष्मण् गया साथमा ।
वृक्षैका तलमा रह्या रघुपती घर् छोडि तेस् रातमा ॥
सुन्दर् एक् तमसा नदी तहिं थिइन् तिन्का दुवै तिर भरी ।
आयो लस्कर रामजिका सँग बस्यो खाली अयोध्या गरी ॥ ४९

फिर्नन् ता रघुनाथ् सँगै फिरियला जानन् चलौंला सँगै ।
रामलाइ छोडि यहाँ कसो गरि वसौं काहाँ बसौंला न गै ॥
यसता सुर् प्रभुले बुझी कन तहाँ युक्ती गन्या छल्नको ।
प्रातःकाल भयो उठेर झटपट् मनसुब् गन्या चल्नको ॥ ५० ॥

फर्की फेरि सहर् गया झइँ गरी बाटो छली राम् गया ।
फर्क्याछन् रघुनाथ् भनेर दुनियाँ सम्पूर्ण फिर्दा भया ॥
यस् रितले दुनियाँ फिराइ सहर श्री राम् वनमा गया ।
गङ्गाका तिरमा पुगेर अब ता ग्य् थाम भन्दा भया ॥ ५१ ॥

---

१ [illegible]

सुन्दर् वृक्ष थियो ठुलो तिर विषे एक् शिंशपाको तहाँ ।
दोस्रो वास् रघुनाथको तहिं भयो[1] त्यै वृक्षका तल् महाँ ॥
फल् फुल् ली कन भेट्नलाइ गुहजी आया बडा हर्षले ।
निर्मल् देह भयो तसै बखतमा श्रीरामका स्पर्शले ॥ ५२ ॥

मेरो आज पवित्र घर् पनि हवस् स्वामित्! गऱ्यॉ बिन्ति यो ।
सेवक हूँ करुणानिधान्! म कन होस् माया र मर्जी छ जो ॥
यो बिन्ती सुनि भन्दछन् प्रभु तहाँ सून्यौ सखे! आज ता ।
वनमा जान चल्याँ म जान्न घरमा याहीं रहन्छु म ता ॥ ५३ ॥

कौनै फलफुल खानु छैन अरुले केही दिउन् ता पनी ।
भन्न्या यो मनमा छ थाम्छु मनको आफ्नू प्रतिज्ञा भनी ॥
मेरै हौ तिमि राज्य जो छ उ पनी मेरै छ भन्दा भया[2] ।
बरको दूद घसी जटा मुकुट झैं पारेर बाँद्धा भया ॥ ५४ ॥

जल्पान् मात्र गरी सिता र रघुनाथ् कुशका शयन्मा गया ।
लक्ष्मणका सँगमा रही गुह पनी रात् भर् खडा भै रह्या[3] ॥
सीताराम फगत् कुशासन विषे देख्या[4] सुत्याको तहाँ ।
साह्रै ग्लानि भयो बहुत् गुहजिको शोक् बढ्न गो मन् महाँ ॥ ५५ ॥

---

१ नेपाल—हुन गयो ।

२ नेपाल, भारतजीवन, बबई—मेरै हौ तिमि राज्य छै नु पनी मेरै छ भन्दा भया । अध्यात्मरामायण—राज्य ममैतत्ते सर्वं त्वं सखा मेऽतिवल्लभ ।

३ होमनाथ—रह्या ।

४ नेपाल—देख्दा । भारतजीवन—देख्या ।

भन्छन् लक्ष्मणलाइ भाइ ! फजिति खुप् कैकयीले दिइन् ।
राजालाइ वशमा गरेर बहुतै दुर्मत् प्रभूको लिइन् ॥
लक्ष्मण् बात् सुनि भन्दछन् गुहजिका दिल् भित्र ठंडा गरी ।
लाग्या सुन्न पनी तहाँ गुहजिले तन् मन् वचन् सब धरी ॥ ५६ ॥

दाताको छ यहाँ इ दुःख सुखको फल् मिल्छ सब् कर्मको ।
दिन्छन् भन्नु कुबुद्धि हो न भन यो नाश् हुन्छ सब् धर्मको ॥
कर्ता हूँ पनि भन्नु छैन अभिमान् जन्ले न गर्नू कहीं ।
कर्मको फल भोग मिल्छ तिमिले यो बुझ्नु जाहीं तहीं ॥ ५७ ॥

धीरा भै रहनू विपत्ति सहनू कसतै परुन् ता पनी ।
कैल्है मोह विषे न पर्नु जनले माया छ संसार् भनी ॥
यस्तै बात् सुनि रात् वित्यो गुहजिका राम्का नजिक्मा रही ।
गङ्गा तर्न हुकुम् भयो प्रभुजिको ताहाँ उज्यालो भई ॥ ५८ ॥

फिर्दामा म पुजा अवश्य गरुँला सामग्रि ठूलो गरी ।
गङ्गे ! आज म जान्छु घोर वनमा केवल् नमस्कार् गरी ॥
यस्तो विन्ति गरी सिता पतिजिका साथै चलिन् पार् तरी ।
आज्ञाले घरमा फिऱ्या गुह पनी भक्ती मनमा धरी ॥ ५९ ॥

---

१ [illegible]—कुबुद्धिको न भनिकन् ।
२ नेपाल, [illegible]—[illegible] ।
३ [illegible]—[illegible] ।
४ नेपाल—[illegible] ।
५ [illegible]—[illegible] ।
६ [illegible]—[illegible] ।
७ [illegible]—[illegible] ।

गङ्गा पार् तरि मिर्ग मारि पकुवा तारेर खाया तहाँ ।
तेस्रो वास् रघुनाथको तहिं भयो एक् वृक्षका तल् महाँ ॥
चौथो वास् रघुनाथको हुन गयो आश्रम् भरद्वाजको ।
रामज्यूको ऋषिले गऱ्या स्तुति तहाँ सुर् जानि काम्काजको॥ ६० ॥

पाँचौ दिन् ऋषिका कुमार् सँग लिया बाटो बताउन् भनी ।
रामज्यूलाइ यमुनाजि तारि ति कुमार् साँझमा त फर्क्या पनी ॥
सीताराम् पनि चित्रकुट् पुगि गया वाल्मीकि बस्न्या जहाँ ।
वाल्मीकी कन दण्डवत् गरि बहुत् आनन्द मान्या तहाँ ॥ ६१ ॥

वाल्मीकी कन भन्दछन् रघुपती क्यै दिन् रहन्छु यहाँ ।
कुन् जग्गा बढिया छ सब् तरहले होला सुबिस्ता कहाँ ॥
सून्या वाल्मिकिले मनुष्य सरि भै रामले गऱ्याका कुरा ।
सोही माफिक बिन्ति बात पनि गऱ्या वाल्मीकि छन् ज्ञन्पुरा॥ ६२ ॥

जान्दैनन् महिमा बडा ऋषि पनी जसका त एक् नामको[1] ।
यस्ता हौ रघुनाथ ! हजुर् कन यहाँ क्याकाम् असल् ठामको॥
सज्जन्का हृदयै छ घर् हजुरको अच्छा बहुत् फेर् कहाँ ।
विस्तार् एक् सुनि बक्सनू पनि हवस् बिन्ती म गर्छु यहाँ ॥ ६३ ॥

---

१ ववई—नामको।

व्याधा हूँ अधिको म सप्तऋषिका निर्मल् कृपाले गरी ।
वाल्मीकी भनि नाम् चल्यो जब जप्याँ राम् नाम उल्टा गरी ॥
उल्टै नाम कि ता छ यस् ति महिमा विस्तार घेर् क्या कहूँ ।
गङ्गाका र इ चित्रकूट गिरिका बिच्का जगामा रहूँ ॥ ६४ ॥

वाल्मीकी ऋषिका वचन् सुनि बहुत् खुस् भै जगन्नाथ गया ।
गङ्गाका र ति चित्रकूट गिरिका बिच् पारि बस्ता भया ॥
गङ्गा देखि सुमन्त्र फर्कि दशरथ् जाहाँ बस्याका थिया ।
ताहाँ जन्दि गयेर जो छ समचार् बिल्कुल् सुनाई दिया ॥ ६५ ॥

बर्को दूद घसी जटा मुकुट झैं बाँध्या दुवै भाइले ।
फिर् लौ जा भनि यो हुकुम तहिँ दिया रामले मिना माइले ॥
गङ्गा पार् रघुनाथ् गया नजरले हेर्दा कठिन् भो तहाँ ।
छोड्याँ देख्न जसै रुँदै रथ लिई दौडेर आयाँ यहाँ ॥ ६६ ॥

सेना फिर्नि गयेर् भनी हुकुम भो लक्ष्मण् मिलागमको ।
छाती शोक् गनि भर् कदापि न गरुन् हुँदैन शोक् रामको ॥
यस्ता बात् गरि राम गया भनि सबै विस्तार् सुनाया जसै ।
कौशल्या दशरथ्‌लिन्याइ रिसिले बागबाग् यजारिन् तसै ॥ ६७ ॥

---

१ [illegible]

वाक्शर्ले अति ताप् भयो[1] रै दशरथ् भन्छन् मलाई कती ।
भन्थ्यौ मर्न बखत् यसै हुन गयो छाड्यो शरिर्ले गती ॥
ऐल्हे मर्छु सराप् पनी छ तिमिले खुप् पुत्रशोक्ले गरी[2] ।
जस्तै हामि मर्यौं उसै[3] गरि मर्‍या ठूलो विपत्ती परी ॥ ६८ ॥

येती एक तपस्विले अघि सराप् जो दी गयाथ्या मरी ।
तिन्का तेहि सरापको फल मिल्यो ठिक् आज उस्तै परी ॥
सब् विस्तार सरापको कहि सकी हा राम ! सीता ! गरी ।
प्राणैत्याग् दशरथ्जिले जब गर्‍या खल्बल् पर्‍यो तेस् घरी ॥ ६९ ॥

प्रातःकाल भयो वशिष्ठ गुरु झट् मन्त्री लि दर्बार् गया ।
तेल्मा ती दशरथ्जिलाइ धरि फेर् छोरा झिकाई लियाँ[4] ॥
च्वाँडै आउनको वशिष्ठ गुरुको आज्ञा छ भन्न्या सुनी ।
दूतैका सँग लागि भाइ कन ली आया भरत्जी पनी ॥ ७० ॥

कैकेयी सित भेट् भयो भरतको सोध्या पिता छन् कहाँ ।
सब् वृत्तान्त गरी भरत् कन त सब् विस्तार् सुनाइन् तहाँ ॥
सून्या शोक् मनमा पर्‍यो भरतका साह्रै रिसाया पनी ।
पापी हो तिमि कुम्भिपाक् नरकमा भोग् गर्न जाउली भनी ॥ ७१ ॥

---

१ होमनाथ—भयेर ।
२ भारतजीवन—पुत्रको शोक् गरी ।
३ होमनाथ—यसै ।
४ नेपाल, भारतजीवन—झिकाउँदा भया ।

कैकेयी कन गालि दी कन तहाँ दुःखी बहुतै भया ।
कौशल्याजि जहाँ थिइन तहिं रुँदै धाउँदै भरतजी गया ॥
हे मातर् ! मनमा कदापि न परोस् मत् छैन मेरो रती ।
पाप् लागोस् कछु मत्[2] भया[3] गुरुजिलाइ काटेर मार्‍या जती ॥ ७२ ॥

विन्ती यो गरि दुःखमा परि विलाप् गर्थ्या भरतजी तहाँ ।
मन्त्रीवर्ग समेत् वशिष्ठ गुरुजी पौंच्या नजिक्मा तहाँ ॥
देख्या शोक भरतजिको र गुरुले पीता बित्याछन् भनी ।
शोक् गर्नू बढिया त छैन किन शोक् गर्छौ महाराज् ! भनी ॥ ७३ ॥

नाना तत्त्व कही तहाँ भरतको सब् शोक् गुरुले हर्‍या ।
सब् आज्ञा गुरुको लिई भरतले काम्काज् पिताको गर्‍या ॥
राजाको किरिया जसै गरि सक्या दान्को असङ्ख्यै गरी ।
तेस् चित्मा मनले विचार् भरतले राख्या बहुत् शोक् गरी ॥ ७४ ॥

माता मेरि त राक्षसी सरि भइन् इन्का नजिक्मा यहाँ ।
बस्नू योग्य अवश्य छैन अब ता जान्छु प्रभू छन् जहाँ ॥
यस्तो चित्त थियो तहाँ भरतको इन्को छ यो मन् भनी ।
मालुम् ता गुरुमा थियो तर पनी भन्छन् उचित् हो भनी ॥ ७५ ॥

---

१ नेपाल, भारतजीवन—मन् ।
२ भारतजीवन—मन् ।
३ नेपाल—पाप् लागोस् कछू भया ।
४ ह्यामनाथ—जहाँ ।
५ बङ्ग—नजिक ।
६ भारतजीवन, नेपाल—न पनि सब् ।

बाबाको छ हुकुम् यहाँ भरतले राज् गर्नु रामले गई ।
चौधै वर्ष तलक् बसुन् वन विषे मानो मुनीश्वर भई ॥
सीताराम् यहि बातले वन गया याहाँ हजुर्ले पनी ।
गादी चढ्नु हवस् हुकुम् दिनु हवस् यो राज्य मेरो भनी ॥ ७६ ॥

यस्तो बिन्ति गरी वशिष्ठ गुरु चुप् जस्तै रह्याथ्या तहाँ ।
उत्तर् जल्दि दिया तहाँ भरतले क्या गर्छु यो राज् यहाँ ॥
कीर्तीमा अपकीर्ति पारि कसरी राज् गर्नु याहाँ बसी ।
दाज्यूको टहलै गरी सँग रह्या लक्ष्मण रह्याछन् जसी ॥ ७७ ॥

गया जाहाँ सीतापति म पनि जान्छु अब तहाँ ।
फगत् एक् कैकेयी[1] यहि बसि रहुन् छोडदछु यहाँ[2] ॥
फलाहारी हुन्छु सिर भरि जटा धारि वनमा ।
म भोली जान्याछु हिंडि कन विचार् यै छ मनमा ॥ ७८ ॥

प्रभूको गादी हो प्रभु कन फिरायेर घरमा ।
म गादी सुम्पन्छु किन म गरुँला राज्य करमा ॥
भरत्का यस्ता बात् सुनि कन सबै खुस् अति भया ।
भरत् भोली बेरै उठि कन सबेरै हिंडि[3] गया ॥ ७९ ॥

---

१ होमनाथ—फकत् कैकेयी एक् ।
२ थर्इ—वर्दा ।
३ होमनाथ—चलि ।

सबै माता भ्राता गुरु सहित सब् फौज पनि ली ।
फगत् सीतारामका चरणतलमा चित्त पनि दी ॥
भरत् गङ्गा पौंच्या गुहजि कन शङ्का हुन गयो ।
ठुलो लस्कर् देख्या न बुझि कन तानैं डर भयो ॥ ८० ॥

लडौंला[1] नाउ खैंची भरत कपटी हुन यदि भन्या ।
भनी मन् भै लस्करहरु कन तयार् हौ पनि भन्या ॥
ठुलो मित्री मतलब् गरि कन गये[2] बुझ्नदछु भनी ।
तहाँ भेटी राखी नजर तिर हेऱ्या कछु पनी ॥ ८१ ॥

जसै देख्या आँसू गह भरि घरी शोक् पनि गरी ।
कहाँ मिल्छन् सीतापति म कन भन्दा घरि घरी ॥
जसै सिर् पाऊमा गरि ति गुहले ढोग् पनि दिया ।
भरत्ले अङ्कैमाल् गरुँ भनि उठाई कन लिया ॥ ८२ ॥

भरत्जीले सोध्या गुह सित सिताका पति यहाँ ।
सुत्याको स्थल् कुन् हो म कन कहु जान्छु अब तहाँ[3] ॥
गया विस्तार् पाई रघुपति सुत्याका शयनमा ।
भरत्ले खेद् मान्या कुशशयन देखेर मनमा ॥ ८३ ॥

---

१ होमनाथ—लड्ँला ।
२ नेपाल—मन्या । अध्यात्मरामायण—स ययौ ज्ञातिभि सार्धं बहुभिर्विविधायुधैः
३ होमनाथ—वहाँ ।

अहो ! मेरा खातिर् वन वन सिताजी पति[1] सँगै ।
कुशासन्मा सुतछिन् न त यसरि सुतथिन् अघि कतै ॥
अहो ! धिक्कार् मेरी जनमजननी कैकयि भइन् ।
इनैले[2] गर्दैमा पति सँग[3] सिताजी वन[4] गइन् ॥ ८४ ॥

कहाँ छन् सीतानाथ् कति पर गया भेट्तछु कहाँ ।
छ केही मालुम् ता म कन कहु[5] जान्छु अब तहाँ ॥
बताया जाहाँ[6] छन् भनि ति गुहले राम् कन पनी ।
गुहैका सम्चार्ले खुसि पनि भया भेट्तछु भनी ॥ ८५ ॥

सब् विस्तार बताइँ[7] ताहिं गुहले गङ्गाजि तारी दिया ।
ताहाँ देखि भरत् चली पुगि गया जाहाँ भरद्वाज् थिया ॥
एक् दिन् ताहिं मुकाम् गऱ्या भरतले सम्मान् ऋषीले गऱ्या ।
बिलकुल् सैन्य जती थियाँ[8] भरतका मेज्मानिले छक् पऱ्या ॥ ८६ ॥

भोली बेर सबेर लस्कर लिई बीदा ऋषी ध्यैं भया ।
कैल्हे पुग्दछु चित्रकूट गिरिमा भन्दै भरत्जी गया ॥
खुस् भै लस्कर चित्रकूट गिरिका पौंच्या नजिक्मा जसै ।
खोज्या ताहिं भरत्जिले अघि गई डेरा प्रभूको तसै ॥ ८७ ॥

---

१ भारतजीवन, नेपाल—पनि ।
२ ऐजन—इनेका ।
३ नेपाल—सित ।
४ भारतजीवन—सँग ।
५ बबई—भन ।
६ होमनाथ—याहाँ ।
७ ऐजन—सुनाइ ।
८ भारतजीवन, नेपाल—थियो ।

डेरा देखी भरत्‌जी तहिं नजिक गया पाउका छाप देख्या ।
श्रीराम्‌का पाउका छाप् चिह्नि कन खुसिले माथले ताहिं टेक्या॥
भन्छन् धन्यैं रह्याँछु सहज न मिलन्या पाउका छाप देख्याँ ।
ब्रह्माजीले न पाउनू[1] छ त पनि सहजै माथले आज टेक्याँ ॥ ८८ ॥

यस्तो बोल्दै प्रभूका चरणधुलि विषे भक्तिले लटपटींदै ।
कैल्हे पुग्छु कहाँ छन् भनि कन मनले दस् दिशा दृष्टि दींदै ॥
जाँदा ताहीं भरत्‌ले प्रभुजि कन जसै नेत्रले देख्न पाया ।
स्वामित्‌लाइ आज पायाँ भनि कन खुसिले पाउमा पर्न धाया॥ ८९ ॥

देख्या पाऊ[2] पऱ्याको गह भरि बहँदा अश्रुधारा[3] धऱ्याको ।
सब राज्यै तृण् बरोबर् गरि कन वहुतै आफुमा मन् गऱ्याको॥
यस्तो देखी कृपाले भरत कन तहाँ काखमा राखि लीया ।
यस्तो[4] मन् हो[5] भरतको बुझि रघुपतिले खुप् कृपादृष्टि दीया ॥ ९० ॥

श्री सीतापति माइका चरणमा राख्या र सिर् फेर् पिता ।
काहाँ छन् किन् आज देख्तिन यहाँ क्या गर्दछन् छन् कता ॥
भन्दै खोजि गऱ्या पिता कन तहाँ श्री रामजीले जसै ।
सब् विस्तार वशिष्ठले भनि दिंदा शोक गर्न लाग्या तसै ॥ ९१ ॥

---

१ बम्बई—भेट्न्या ।
२ ऐजन—पाद्मा । भारतजीवन—पाउमा ।
३ नेपाल—आँसुधारा ।
४ होमनाथ—जम्नो ।
५ नेपाल—मन्हीन् ।

गङ्गास्नान गरी तिलाञ्जलि दिया फेर् पिण्डदानै पनी ।
फल् फुल्ले रघुनाथले तहिं दिया पाउन् पिताले भनी ॥
तेस् दिन्मा उपवास् गऱ्या जब बित्यो रात् फेरि गङ्गा गया ।
गङ्गास्नान् गरि फेर् फिरेर मढिमा आयेर बस्ता भया ॥ ९२ ॥

तहाँ सीतारामका चरणतलमा सिर् पनि धरी ।
अयोध्यै लैजान्छू भनि कन ठुलो मन्सुब गरी ॥
भरत् बिन्ती गर्छन् किन रघुपते ! आज वनमा ।
हजुर्ले आयाको म कन अति ताप् हुन्छ मनमा ॥ ९३ ॥

स्वामिन् ! हजुर्को म त दास पो हूँ ।
यो राज्य गर्ना कन योग्य को हूँ ॥
यो गादि ता याहिं हजूरको हो ।
मैले त सेवा गरि बस्नु पो हो ॥ ९४ ॥

छोरा हुनन् यश बहुत् गरीनन् ।
सम्पूर्ण लोकको पनि ताप् हरीनन् ॥
तब् पो ति छोरा सित राज्य छाडी ।
जानू असल् हो त छँदै छ झाडी ॥ ९५ ॥

---

१ नेपाल—वाँ ।
२ भारतजीवन, नेपाल—लोकमा ।

होमनाथ—लोक्को—लोक्का पाठने
व्याकरणका दृष्टिले शुद्ध छ । स० ।

वेला त यो होइन जान वन्मा ।
मेरा त यै निश्चय हुन्छ मन्मा ॥
जाऔं घरै फर्कि सघाइ जावस् ।
मेरी इ माता सित रिस् न आवस् ॥ ९६ ॥

यस्ता[1] प्रकारले गरि बिन्ति गर्दै ।
आँखा भरी आँसु[2] बहूत धर्दै ॥
रोया भरतले जब पाउमा गै ।
बोल्या प्रभूले पनि खूसि मन् भै ॥ ९७ ॥

हे भाइ ! गर्छौ किन आज जिद्दी ।
फिर्नू असल् छैन रे काम् न सिद्धी ॥
जान्छु म वन्मा तिमि फर्कि जाऊ ।
यस्[3] राज्यको काम् तिमिले चलाऊ ॥ ९८ ॥

राम्ले वनै गै मुनिभेष धर्नू ।
याहीं भरतले बसि राज्य गर्नू ॥
भन्न्या पिताको जब सुन्न पायौं ।
आज्ञा उसैले वन जान आयौं ॥ ९९ ॥

---

१ होमनाथ—यस्नै । ३ टैजन—सब् ।
२ देवन—हेरन ।

ई बात् भरतले जब सुन्न पाया ।
फेरी चरण्मा परि बिन्ति लाया ॥
हे नाथ् ! पिता हुन् मतिहिन् भयाका ।
स्त्रीका त साहै वशमा पर्याका ॥१००॥

उन्ले भन्याथ्या पनि राज्य छाडी ।
जानू असल् होइन आज झाडी ॥
स्वामित् ! बहुत् बिन्ति छ फर्कि जाऊँ ।
फर्कन्न भन्न्या त जवाफ् न पाऊँ ॥१०१॥

यस्तो भरत्ले जब जिद्दि लीया[1] ।
उत्तर् प्रभूले पनि फेरि दीया ॥
फर्कन्न भैय्या ! तिमि फर्कि जाऊ ।
पीताजिलाई पनि दोष् न लाऊ ॥१०२॥

खुप् सत्यवादी त पिताजि थीया ।
साँचै हुनाले वरदान दीया ॥
सो पूर्ण गर्ना कन जान्छु वन्मा ।
साँचो कुरा हो बुझि लेउ मन्मा ॥१०३॥

---

१ नेपाल, भरतजीवन—लाया ।

उत्तर् प्रभूको सुनि दुःख मान्या ।
फेरी चरणमा परि बिन्ति लाया ॥
फिर्नू हवस् स्वामित ! बिन्ति गर्छू ।
यस् दण्डकारण्य विषे म जान्छू ॥१०४॥

यसता वचन् सूनि भरत्‌जिलाई ।
फेरी हुकुम् भो तिमि फर्क भाई ॥
यो राज्य साट्या पनि हुन्छ झूटो ।
हे भाइ ! गर्छौ किन आज भूटो ॥१०५॥

हुकुम् यसतो सूनी भरत पनि राम्‌का चरणमा ।
परी बिन्ती गर्छन् म त रघुपते ! छु शरणमा ॥
चरण बाहिक् एक् छिन् रहन पनि ताप् हुन्छ मनमा ।
न फर्क्या स्वामित्‌का पछि पछि म ता जान्छु वनमा ॥१०६

न ता फर्की जान्या न त म कन लान्या वन पनी ।
भन्या मर्छु स्वामित् ! अब अरु कुरो केहि न भनी ॥
भनी आसन् बाँधी जब मरणमा निश्चय धर्‍यो ।
खुसी भै श्रीराम्‌ले पनि अति दयालू मन गर्‍या ॥१०७



भरतलाई रामचन्द्र खराउ दिदै हुनुहुन्छ

दिया सूचनं राम्ले गुरु कन बुझाऊ तिमि भनी ।
गुरूले एकान्तै लगि कन भरत्जी कन पनी ॥
बुझाया बात् खोली कन सुन इ जो हुन् रघुपति ।
जगन्नाथ् साक्षात् हुन् त्रिभुवनपतीका अधिपति ॥१०८॥

अघी ब्रह्माजीले सकल भुमिको भार् हर भनी ।
स्तुती गर्दा खुस् भै सुन म हरुँला भार् पनि भनी ॥
भन्याका हूनाले उहि वचन पालन् गरुँ भनी ।
प्रभू जान्छन् वन्मा पछि त सुन फिर्छन् घर पनी ॥१०९॥

प्रभूकै इच्छा हो नतर कसरी कैकयि पनी ।
वनै जाउन् भन्थिन् प्रभु कन रती तुल्य न गनी ॥
कुरो यस्तो जानी न गर तिमि यो आग्रह यहाँ ।
भुमीको भार् टारी कन पछि त जान्छन् प्रभु कहाँ ॥११०॥

रावण् मारि उतारि भारि भुमिको फिर्छन् जगन्नाथ् भनी ।
यस्ता हुन् रघुनाथ् भनेर गुरुले खोलेर गुह्यै पनी ॥
सब् विस्तार गरी दिया र गुरुका वाणी सुनी खुस् भया ।
फर्क्यौनन् रघुनाथ् भनी मन बुझ्यो राम्का नजिक्मा गया॥१११॥

हे नाथ् ! तत्त्व सुन्याँ म फिर्छु अब ता जान्छु अयोध्या महाँ ।
पूजा गर्न दिनू हवस् हजुरका एक् जोर् खराऊ यहाँ ॥
यसतो बिन्ति गरी प्रणाम् वरिपरी घुम्दै भरत्ले गर्‍या ।
आफ्ना साफि खराउ दी प्रभुजिले सब ताप भरत्को हर्‍या ॥११२॥

फेरी बिन्ति गऱ्या तहाँ[1] भरतले लौ फिर्दछू फिर्न ता ।
चौधै वर्ष समाप्ति पारि न फिऱ्या मर्न्याछु साँचै म ता ॥
यो बिन्ती सुनि लौ भनी भरतका साम्ने हुकुम् भो तहाँ ।
कैकेयी रघुनाथका चरणमा रूँदै परिन् खुप् तहाँ ॥११३॥

हे नाथ्! दुर्बुद्धि आई अति फजिति दियाँ राज्यको घात् गराई ।
मायाले मोह पार्दा मन पनि भुलि गै मेरि बुद्धी हराई ॥
क्यारूँ नाथ्! आज रुन्छू विपति परि गयो आज यो[2] चेत पायाँ ।
कठ्पुत्ली झैं नचाउँछिन्[3] त्रिभुवनपति! सब् धन्य छन् तिम्रि माया ॥

मेरो[4] माया छ छोरा जन धनहरुमा यो सबै खैंचि देऊ ।
दुर्बुद्धी हो पछी ता शरण परि भनी खुप् कृपा राखि लेऊ ॥
कैकेयी येहि पाठ्ले स्तुति गरि हरिका पाउमा सीर धारिन् ।
हे नाथ! आई शरणमा परि भनि करुणा राख यो बिन्ति पारिन्॥११५॥

हाँसी सीतापतीले पनि अभय दिया जो भनायाँ भन्यौ सो ।
दोष् तिम्रो छैन यस्मा बुझ तिमि मनले मेरि इच्छा त हो यो॥
सत्सा सन्तोष पाऊ म कन दिन दिनै सम्झदै दिन् बिताऊ ।
छुट्नन् सब् कर्म तिम्रा रति भर मनमा शोक् न राखेर जाऊ ॥११६॥

---

१ नेपाल—तहीं ।
२ ऐजन—पो ।
३ ऐजन—नचाउँछन् ।
४ भारतजीवन, नेपाल—मेरा ।

फेरी विन्ति गऱ्या तहाँ भरतले लौ फिर्दैछ्रु फिर्न ता ।
चौधै वर्ष समाप्ति पारि न फिऱ्या मर्न्याछु साँचै म ता ॥
यो विन्ती सुनि लौ भनी भरतका साम्ने हुकुम् भो तहाँ ।
कैकेयी रघुनाथका चरणमा रूँदै परिन् खुप् तहाँ ॥११३

हे नाथ् ! दुर्बुद्धि आई अति फजिति दियाँ राज्यको घात् गराई
मायाले मोह पार्दा मन पनि भुलि गै मेरि बुद्धी हराई
क्यारूँ नाथ् ! आज रुन्छु विपति परि गयो आज यो चेत पायाँ
कठ्पुतली झैं नचाउँछिन् त्रिभुवनपति ! सब् धन्य छन् तिम्रि माया

मेरो माया छ छोरा जन धनहरुमा यो सबै खैंचि देऊ ।
दुर्बुद्धी हो पछी ता शरण परि भनी खुप् कृपा राखि लेऊ ॥
कैकेयी येहि पाठ्ले स्तुति गरि हरिका पाउमा सीर धारिन् ।
हे नाथ ! आई शरण्मा परि भनि करुणा राख यो विन्ति पारिन्॥११

हाँसी सीतापतीले पनि अभय दिया जो भनायाँ भन्यौ सो ।
दोष् तिम्रो छैन यसमा बुझ तिमि मनले मेरि इच्छा त हो यो॥
मन्मा सन्तोष पाऊ म कन दिन दिनै सम्झदै दिन् बिताऊ ।
छुट्नन् सब् कर्म तिम्रा रति भर मनमा शोक् न राखेर जाऊ ॥१

१ नेपाल—भयाँ ।
२ नेपाल—पो ।
३ नेपाल—नचाउँछन् ।
४ भगवन्मेवन, नेपाल—मेरा ।

कैकेयी करुणा बुझी खुसि भईं बीदा प्रभू थ्यैं भइन् ।
श्री राम्‌का चरणारविन्द मनले भज्दै अयोध्या गइन् ॥
सब् लस्कर्‌हरु ली भरत पनि बिदा भै फेर् अयोध्या गया ।
सब् लस्कर्‌हरुलाइ राखि घरमा आफू फरक् भै रह्या ॥११७॥

नन्दी ग्राम्‌मा सऱ्याका भुमिशयन गरी रोज् फलाहार् गऱ्याका ।
एक् गट्ठा सब् जटाको गरि कन ति खराउ गादि माथी धऱ्याका ॥
गर्थ्या सब् राज्यको काम् त पनि सब कुरा गादिमा बिन्ति गर्दै ।
यस्तै रित्‌ले बिताया दिन भरतजिले राममा चित्त धर्दै ॥११८॥

केही दिन् चित्रकुट्‌मा बसि कन रघुनाथ् वाल्मिकी थ्यैं बिदा भै ।
जान्छु वन्‌मा म फिर्छु भनि कन खुसिले अत्रिका आश्रमै गै ॥
अत्रीका पाउमा सिर् धरि कन म त हूँ राम् भनी नाम् बताया ।
श्रीराम्‌का वाणि सुन्दा मन अति खुसि भै अत्रिले हर्ष पाया ॥११९॥

पूजा सीतापतीको गरि कन ऋषिले पाउमा बिन्ति लाया ।
वृद्धा छन् पत्नि मेरी सकल विषयमा एक् रती छैन माया ॥
भीत्रै छन् आज दर्शन् दिन मढुलि विषे भीत्र सीताजि जाउन् ।
सीताजीलाइ पाई अब त ति बुढिले जन्मको सार पाउन् ॥१२०॥

---

१ भारतजीवन—भइन् ।        २ होमनाथ—सारा लस्करलाइ ।

अत्रीको विन्ति सुनी हुकुम पनि दिया लौ सिता ! भीत्र जाऊ।
अत्रीकी पनि भेटी कन अब तिमिले जल्दि फर्केर आऊ।
आपना नाथ्को हुकुम् यो सुनि कन खुसि भै भीत्र सीताजि जाई।
भेटिन् वृद्धा वहुत् भै कन वसि रहन्या अत्रिकी पत्निलाई ॥१२१।

सीताले पाउमा सिर् धरि कन वहुतै प्रेम् बुढीमा बढाइन्।
जोर् जोर् कुण्डल् र सारी दिइ कन बुढिले अङ्गराग् फेर् चढाइन्।
यस्ले शोभा निरन्तर् दृढ पनि रहला यो पनी विन्ति लाइन्।
सीताजीलाइ आशिष् दिइ तिं अनसुयाले वहुत् हर्ष पाइन्॥१२२।

सीता र लक्ष्मण सहित् गरि रामलाई।
भोजन् म दिन्छु भनि खुप् सित चिज् बनाई॥
भोजन् गराइ रघुनाथकि जानि माया।
ताहाँ सपनि भइ रामकि कीर्ति गाया॥१२३॥

इति श्रीअयोध्याकाण्ड।

[illegible]

# श्रीअरण्यकाण्ड

अत्रीका आश्रमैमा बसि रघुपतिले प्रेमले दिन् बिताई ।
दोस्रा दिन्मा सबेरै उठि कन वनमा जान मन्सुब् चिताई ॥
अत्रीजीका नजिक्मा गइ कन अब ता जान्छु बीदा म पाऊँ ।
रस्ता यो जाति होला भनि कन कहन्या एक् अगूवा म पाऊँ ॥ १ ॥

सीताराम्को हुकुम् यो सुनि कन ऋषिले भन्दछन् क्या पठाऊँ ।
सब्को रस्ता त देख्न्या यहिं हजुर भन्या कुन् अगूवा पठाऊँ ॥
चिन्छु लीला हजुर्को तर पनि अगुवा याहिं अस्सल खटाई ।
यै मर्जी पूर्ण गर्नो कन पनि अगुवा आज दिन्छु पठाई ॥ २ ॥

अत्रीले बिन्ति येती गरि कन अगुवा शिष्य धेरै खटाया ।
केही रस्ता त आफैं पनि पछि पछि गै रामलाई पठाया ॥
एक् कोस् तक् पाँचदामा वडि नदि बहँदी नाउले तर्नु पर्न्या ।
मिल्थिन् त्यो तारि फर्क्या मढि तिर ऋषिका शिष्य सब् फिर्नु पर्न्या ॥

---

१ होमनाथ—पाऊँ ।

२ नेपाल, होमनाथ—यो ।

सीताराम् वनमा पुग्या वन थियो साहै खजित्को तहाँ ।
बाघ् भालू अरु दुष्ट राक्षसहरू डुल्छन् निरन्तर् जहाँ ॥
ताहीं पौंचि हुकुम् भयो प्रभुजिको भाई ! तयारी भई ।
सीताका म अगाडि हिंड्छु तिमिले हिंड्नू पछाडी रही ॥ ४ ॥

यसता बात् गरि राम लक्ष्मण तहाँ हिंड्न्या तयारी भई ।
एक् सुन्दर् वनमा तलाउ मिलि गो ठूलो छ कोस् वन् गई ॥
ठण्डा जल् तहिं पान् गरेर रघुनाथ् छाया बस्याथ्या जसै ।
आयो ताहिं विराध राक्षस ठुलो डर् दीन लाग्यो तसै ॥ ५ ॥

को हौ स्त्री पनि साथमा छ किन यो आयौ बड़ा वन् महाँ ।
कसतो सुर् मनमा छ फेर् अब उपर् जानू छ इच्छा कहाँ ॥
मैले सुन्दर गाँस् बनाउन असल् मान्याँ र सोध्याँ यहाँ ।
सब् नाम् काम समेत् बताउ तिमिले जुन् काम् छ जान्छौ जहाँ॥ ६ ॥

राक्षसका इ वचन् सुनी प्रभुजिले नाम् काम् बताया सबै ।
बाँच्नै मन् छ भन्या सिता र हतियार् छोडेर जाऊ उसै ॥
यसतो बोलि सिताजिलाइ लिन सुर् बाँधेर राक्षस् जसै ।
दौडेथ्यो रघुनाथले पनि ति हात् दूबै गिराया तसै ॥ ७ ॥

---

१ नेपाल—घेर । अध्यात्मरामायण—राक्षसै-
घोररूपैश्च सेवितं रामदृश्चान् ।
२ होमनाथ—जहाँ ।
३ पेजन—जहाँ ।
४ पेजन—जसै ।

जसै हात गिऱ्या तसै[1] त रिसले खाँ रामलाई भनी ।
दौडन्थ्यो मुख बाइ फेर् प्रभुजिले काट्या ति गोडा पनी ॥
हात् गोडा न हुँदा त सर्प सरिको पस्ऱ्यो भुमीमा जसै ।
हात् गोडा सब काटियो तब पनी घस्रेर आयो तसै ॥ ८ ॥

घस्री घस्रि उ सर्दथ्यो प्रभुजिले काट्या तहाँ सिर् पनी ।
विद्याधर्‌गण हो छुटोस् अब सराप् जावस् परम्‌धाम् भनी ॥
राक्षस्‌देह मऱ्यो सराप् पनि टऱ्यो[3] विद्याधरै फेर् भयो ।
श्री रामको स्तुति खुप् गरेर खुसि भै फेर् स्वर्ग लोकमा गयो ॥ ९ ॥

जसै स्वर्ग विराध् गयो प्रभुजिले रस्ता वनैको लिया ।
पालन् गर्छु म योगिको अब भनी मन्‌मा दया खुप् लिया ॥
ध्यान् गर्दै शरभङ्गजी वन महाँ जाहाँ बस्याका थिया ।
ताहीं श्री रघुनाथजी खुसि हुँदै पौंचेर दर्शन् दिया ॥ १० ॥

ताहाँ श्री शरभङ्गले प्रभुजिमा तन् मन् वचन् सब् धरी ।
आफ्नू कर्म जती थियो तहिं तती सम्पूर्ण अर्पण् गरी ॥
अरसल् ताहिं चिता बनाइ हरिको दर्शन् नजर्‌ले गरी ।
ताहाँ देहदहन् गरी चलि गया संसारसागर् तरी ॥ ११ ॥

---

१ भारतजीवन—ढलै ।
२ बम्बई—काटिदा ।
३ भारतजीवन, नेपाल—तऱ्यो ।

मुक्ती श्री शरभङ्गको जब भयो तस्सै मुनीश्वरहरू ।
आया भेट्‌न भनी बहुत खुसि भई वन्‌मा थिया जो अरू ॥
हात्‌ जोरी स्तुति खुप्‌ गऱ्या ति ऋषिले स्वामित्‌ इनै हुन्‌ भनी।
कोमल्‌ चित्त गरी तहाँ नजरले हेऱ्या प्रभूले पनी ॥ १२ ॥

बिन्ती सब्‌ ऋषिले गऱ्या हजुरमा हाम्री विपत्ती पनी ।
देख्या पूर्ण दया हुन्या थिइ बहुत्‌ आपत्‌ रह्याछन्‌ भनी ॥
जाऔं सब्‌ ऋषिका मठी मढि विषे वाहीं गई यो दया ।
होला चित्त विषे भनी ति ऋषिले भन्दा प्रभूजी गया ॥ १३ ॥

देख्या तेस्‌ वनमा अनेक्‌ पृथिविमा खप्पर्‌ र सोध्या तहाँ ।
कस्‌का खप्पर हुन्‌ अनेक्‌ नजरले देखछु म याका यहाँ ॥
श्री सीतापतिका वचन्‌ सुनि तहाँ बिन्ती ऋषीले गऱ्या ।
ई सिर्‌ हुन्‌ ऋषिका यहाँ छल परी धेरै ऋषीश्वर्‌ मऱ्या ॥ १४ ॥

राक्षस्‌का छलले बहुत्‌ ऋषि मऱ्या भन्न्या कुरा यो सुनी ।
ताहाँ सब्‌ ऋषिलाइ राखि सबका साम्ने प्रतिज्ञा पनी ॥
सब्‌ राक्षसहरूको म नष्ट गर्न्‌ला भन्न्या प्रभूले गऱ्या ।
खुसी मन्‌ हुन गो र ताहिं ऋषि ता आनन्दमा सब्‌ पऱ्या ॥ १५ ॥

---

१ [illegible]—[illegible] छ [illegible] । [illegible] ।
२ [illegible]—[illegible] । [illegible]— ३ [illegible]—[illegible] ।
[illegible] मुनि [illegible]

केही वर्ष बिताइ ताहिँ हरिले सब् योगिको ताप् हऱ्या ।
माया फेरि सुतीक्ष्णका उपर भै प्रस्थान् प्रभूले गऱ्या ॥
जाहाँ भक्त सुतीक्ष्ण छन् तहि गई दर्शन् प्रभूले दिया ।
पूजा पूर्ण गरी सुतीक्ष्ण ऋषिले राम्लाइ मन्मा लिया ॥ १६ ॥

सायुज्यै मुक्ति मिल्छ्या तिमि कन सुन यो देह जैले त छुट्ला ।
भन्न्या आज्ञा प्रभूको सुनि कन अब ता कर्मको पाश टुट्ला ॥
भन्न्या यो मन् ऋषीको हुन गइ बहुतै चित्तमा हर्ष पाया ।
सीताराम्ले अगस्ती सित गइ कछु दिन् बस्न मन्ले चिताया ॥१७॥

प्रभूका साथैमा पछि पछि सुतीक्ष्णै[१] पनि गया ।
अगस्तीका भाई सित पुगि त एक् रात् प्रभु रह्या ॥
ति अग्नीजिह्वा खुप् खुसि पनि भया ईश्वर भनी ।
चिह्नी ताहाँ तिन्ले विधि सित गऱ्या पूजन पनी ॥ १८ ॥

तहाँ देखी सीतापति उठि सबेरै चलि गया ।
अगस्ती काहाँ छन् भनि खबर ली दाखिल भया ॥
अगस्तीले खुस् भै स्तुति गरि बहुत् मन् पनि धऱ्या ।
विराट् रुप्ले वर्णन् गरि कन त पूजा पनि गऱ्या ॥ १९ ॥

---

१ होमनाथ, भारतजीवन—सुतीक्ष्ण ।

सुन्दर् धनू र तरवार् सँग वाण् धन्याका ।
ठोक्रा त जोडि अघि इन्द्रजिले धन्याका ॥
ताहीं थिया सब दिया रघुनाथलाई ।
बिन्ती[1] गऱ्या सकल भार् हर आज जाई ॥ २० ॥

आठ् कोसमा असल पञ्चवटी भन्याको ।
आश्रम् असल् छ रमणीय बहुत् बन्याको ॥
ताहीं बसेर कछु दिन् तिमिले बिताऊ ।
सब् साधु माथि करुणा तहिं गै चिताऊ ॥ २१ ॥

यस्तो अगस्ति ऋषिको उपदेश पाई ।
श्री राम् तयार् पनि भया तहिं जानलाई ॥
मालुम् थियो त पनि जुन् ऋषिले बताया ।
सो मार्ग जान कन पाउ उतै चलाया ॥ २२ ॥

जान्थ्या प्रभू अलिकती पर केहि जाई ।
जङ्गल् बिषे अधिक वृद्ध जटायुलाई ॥
देख्या र राक्षस भनी कन मार्नलाई ।
माग्या धनू प्रभुजिले र लिला जनाई ॥ २३ ॥

---

१ बंर्त—बिन्तय ।

मार्न्या कुरा सुनि जटायु बहुत् डराई ।
राजाजिको प्रिय सखा हुँ भनी कराई ॥
गर्न्याछु हित् यहिं बसी म सिताजिलाई ।
कल्याण् मिलोस् हजुर देखि बहुत् भलाई ॥ २४ ॥

श्री रामले पनि तहाँ अति खूसि मन्ले ।
आनन्द निर्भय दिया पछि फेरि तिन्ले ॥
स्वामित्! शरण् छु भनि खुप् सित विन्ति लाया ।
श्री राम् तहाँ पछि त पञ्चवटी त आया ॥ २५ ॥

डेरा पर्‍यो प्रभुजिको तहिं बीच वन्मा ।
एकान्त देखि कन हर्ष भयो र मन्मा ॥
आनन्दपूर्वक रह्या रघुनाथ ताहीं ।
आर्को त आश्रम नजीक थियेन काहीं ॥ २६ ॥

एकान्त देखि कन लक्ष्मणले चरण्मा ।
विन्ती गर्‍या रघुपते ! म त छु शरण्मा ॥
ज्ञान् कुन् कहिन्छ भनि कुन् त कहिन्छ विज्ञान् ।
जान्दीन केहि म विषे त ठुलो छ अज्ञान् ॥ २७ ॥

आज्ञा हवस् सकल तत्त्व म सुन्न पाऊँ ।
जान्न्या पुरुष् अरु छ को र कता म जाऊँ ॥
यो विन्ति लक्ष्मणजिको सुनि हर्ष पाया ।
लक्ष्मण्जिलाइ सब तत्त्व तहीं बताया ॥ २८ ॥

यै ज्ञान् कहिन्छ सुन येहि कहिन्छ विज्ञान् ।
यो रित् गरी कन त्रस्या हुँदि छुट्छ अज्ञान् ॥
खोलेर येहि रितले प्रभुले बताया ।
लक्ष्मण्जिले पनि तहीं सब तत्त्व पाया ॥ २९ ॥

यै बीचमा नजिक शूर्पणखा त आई ।
देख्या तहाँ प्रभुजिले पनि दुष्टलाई ॥
कन्दर्पका वश परी प्रभुका नजिक् गै ।
सोधी तहाँ प्रभुजिलाइ बहूत खुस् भै ॥ ३० ॥

नाम् सब् कह्या प्रभुजिले जब नाम सूनी ।
ऐल्हे म भज्दछु पती भनि येति गूनी ॥
बिन्ती गरी म कन पत्नि बनाइ लेऊ ।
कन्दर्पको कठिन ताप छुटाइ देऊ ॥ ३१ ॥

यसतो वचन् सुनि सिता कन हाँसि हेरी ।
उत्तर दिया प्रभुजिले घरमै छ मेरी ॥
सौता बुझी कन न भज् तँ पती मलाई ।
भाई छ खालि बरु भज् पति भाइलाई ॥ ३२ ॥

---

१ [illegible]—[illegible]। [illegible]—[illegible] सुन्दरी ।
२ नेत्र, [illegible]—[illegible] । [illegible]

सॉचो भन्या भनि तं लक्ष्मणका नजिक् गै ।
आयाँ म पनि हुन येति भनेर खुस् भै ॥
सून्या वचन् सकल लक्ष्मणले र ताहाँ ।
दास् हूँ म ता म सित कुन् सुख मिल्छ याहाँ ॥ ३३ ॥

जा वाहिं मालिक उ हुन् उहिं बस्नु अच्छा ।
बुद्धी रहेनछ बहुत् रहिछस् तँ कच्चा ॥
यसता वचन् सुनि र शूर्पणखा रिसाई ।
सीताजिलाइ अब खाँ भनि फर्कि धाई ॥ ३४ ॥

भार् हर्न बीज् प्रभुजिले तहिं रोपन आँट्या ।
लक्ष्मणजिलाइ भनि नाक र कान् कटाया ॥
आज्ञा लि लक्ष्मणजिले पनि काटि दीया ।
भागी डराइ कन भाइ जहाँ त थीया ॥ ३५ ॥

विस्तार् गरी त्रिशिर दूषण खर् भन्याका ।
राक्षस् पनी सुनि ति अग्नि सरी बन्याका ॥
आया जहाँ प्रभु थिया तहिं तीन भाई ।
लस्कर् समेत् अधिक जल्दि कदम् बढाई ॥ ३६ ॥

---

१ भारतजीवन—र ।
२ भारतजीवन ( क )—नाक र कान काट्या । अध्यात्मरामायण—चिच्छेद नासा कर्णौ च लक्ष्मणोऽलघुविक्रम ।

राक्षस् भनी प्रभुजिले तहिं चाल पाया[1] ।
लक्ष्मण्जिलाइ तहिं काम् प्रभुले अह्राया[2] ॥
हे भाइ ! आज तिमिले इ सिताजिलाई ।
गूफा विषे लगि बसी रहु जल्दि जाई ॥ ३७ ॥

एक् बात् न बोलि कन जल्दि उठेर जाऊ ।
सङ्ग्रामको बखत भो अब बेर् न लाऊ ॥
मार्छु[3] म दुष्ट कन तेज् अधिकै जनाई ।
चौधै हजार् कन सहज् टुकरा बनाई ॥ ३८ ॥

यसतो हुकुम् हुन गयो र सिताजिलाई ।
लक्ष्मण्जिले सँग लिई कन जल्दि जाई ॥
गूफा विषे बसि रह्या रघुनाथ् तयारी ।
चँडै भयाँ धनु र बाणहरु ठिक्क पारी ॥ ३९ ॥

आया खर त्रिशिर दूषण तीन भाई ।
लस्कर् समेत् सँग लिई कन रिस् चढाई[4] ॥
ठाकुर्जिका उपर बाणकि वृष्टि पार्‍या ।
ठाकुर्जिले पनि ति बाण् सब काटि टार्‍या ॥ ४० ॥

---

१ बंबई—पाई ।

२ ऐजन—अहाई ।

३ नेपाल—गया । भारतजीवन—म याँ । भारतजीवनका दुवै प्रतिमा यही पाठ छ । "मया" का ठाउँमा यसतो छपियेको होला । अध्यात्मरामायण—राम परिकर बध्वा धनुरादाय निष्ठुरम् । तूणीरावक्षयशरौ बध्वा यत्तोऽभवत् प्रभु ॥ स०

४ बंबई—चढाई ।

तिन्का ति सर्व हतियारहरु काटि टारी ।
सम्पूर्ण राक्षसहरू कन जल्दि मारी ॥
काट्या खर त्रिशिर दूषणलाइ ताहाँ ।
सम्पूर्ण राक्षस सक्या घरि चार माहाँ ॥ ४१ ॥

मार्‍या खर त्रिशिर दूषणलाइ जस्सै ।
सीता र लक्ष्मण पनी प्रभु सीत तस्सै ॥
आया डराइ कन शूर्पणखा त भागी ।
रावण जहाँ छ उहिं जाँ भनि जान लागी ॥ ४२ ॥

रावण् जहाँ छ उहिं पाँचि विलाप गर्दै ।
सब् भाइ बन्धुहरुका मनलाइँ हर्दै ॥
देख्यो तहाँ बहिनिलाइ त नाक् गयाकी ।
त्यो फेरि बुच्चि पनि कान न भै रह्याकी ॥ ४३ ॥

माया भयो बहिनि माथि र झट्ट उठ्यो ।
विस्तार सोध्न नजिकै पनि जल्दि छुट्यो ॥
हे बैन्हि ! कुन् पुरुष हो भन नाक काट्न्या ।
खूपै रहेछ सहजै पनि मर्न आँट्न्या ॥ ४४ ॥

---

१ नेपाल—मनसाइ ।
२ डोमनाथ—गयाकी ।

जस्लेत नाक् सित इ कान् कन आज काट्यो ।
हे बैन्हि ! जान सुन त्यो अब मर्न आँट्यो ॥
यस्ता वचन् सुनि र नाम समेत् बताई ।
सीता र लक्ष्मण सहित् रघुनाथलाई ॥ ४५ ॥

तिन्[1] छन् पराक्रमि ति पञ्चवटी बस्याका ।
ठोक्रा भिरी कन धनू पनि खुप् कस्याका ॥
गर्छू विचार मनले त यही म मान्छु ।
सब् भस्म याँ[2] गरि दिनन् कि भनेर ठान्छु ॥ ४६ ॥

आई रह्याँछु म त खुप् सित मन् डराई ।
फिर्छन् ति सर्व ऋपिलाइ त खुस् गराई ॥
आश्चर्य मानि कन दौडि म याँहि आयाँ ।
विस्तार् पनी हजुरमा सब विन्ति लायाँ ॥ ४७ ॥

सीताजिलाइ अति सुन्दर्[3] मानि ताहाँ ।
ल्याऊँ टपक्क टिपि सुन्दरिलाइ याहाँ ॥
भन्ना निमित्त अति चित्त घरी गयाकी ।
पायाँ विपत् नकटि बुचि समेत् भयाकी ॥ ४८ ॥

---

१ होमनाथ—ती ।
२ देजन—यो ।
३ देजन—सुन्दरि ।

ल्याऊ समर्थ छ भन्या तिमि आज जाऊ ।
साम्ने त हर्न छ कठिन् तिमि मन् न लाऊ ॥
एक् युक्तिले छल गरी कन हर्नु पर्ला ।
साम्ने कदापि न गया तहिं देह मर्ला ॥ ४९ ॥

तेसले बहुत भयमा परि बात् गर्‍याको ।
लस्कर् समेत् त्रिशिर दूषण खर् मर्‍याको ॥
सून्यो र बैन्हि कन खातिर खूप दीयो ।
एकान्तमा गइ लहड् पनि खूप लियो ॥ ५० ॥

सामान्य मानिस भया कसरी ति मार्‍या ।
लस्कर् खर त्रिशिर दूषण छुट्टि पार्‍या ॥
सामान्य होइन इ ता परमेश्वरै हुन् ।
नाहीं त भाइहरुका अघि टिक्तथ्यो कुन् ॥ ५१ ॥

ईश्वर् भया हुँदि कसै पनि मार्दछन् ती ।
सामान्य हो पनि भन्या[1] हरुँला सिताजी ॥
ईश्वर् भया हुँदि विरोध् गरि खुस् हुन्याछन् ।
रीसै हुन्याछ मजुँला त म माथि ता झन् ॥ ५२ ॥

१ नेपाल—सामान्य हुन् यदि भन्या ।

येती विचार् गरि तऱ्यो र समुद्र पारी।
मारिच् जहाँ छ ऋषिका सरि रूप धारी॥
पुग्यो तहाँ र रथ राखि नजिक् गयाको।
विस्तार् गऱ्यो खरहरू सब नाश् भयाको॥ ५३ ॥

यसतो पऱ्यो म कन आज सहाय देऊ।
सुन्दर् ठुलो मृगस्वरुप् तिमि आज लेऊ॥
रामचन्द्रलाइ छलि दुर् तिमिले गराया।
सीता जसै म हरुँला तब फर्कि आया॥ ५४ ॥

मारीचले यति हुकुम् जब ताहि सून्यो।
तेसतो हुकुम् सुनि तहाँ मन भीत्र गून्यो॥
बिन्ती गऱ्यो सकल तेज् प्रभुको जनाई।
स्वामित् भनेर भनले जय खुप् चिताई॥ ५५ ॥

कसले गऱ्यो र उपदेश् तिमि आज आई।
सीता म हर्छु मृग हो तँ भन्यौ मलाई॥
त्यौ शत्रु हो तिमि तसै कन मार ताहाँ।
कूलै समेत क्षय गराउन खोजछ याहाँ॥ ५६ ॥

को सकछ जित्न र ठुलो तिमि सूर गर्छौ।
यो सुर् लिया कुल समेत् तिमि आज मर्छौ॥
एक् बाणले म कन चार् सय कोस साऱ्या।
बालक् थिया त पनि भस्म सुबाहु माऱ्या॥ ५७ ॥

आज्काल् गयाँ वन विषे मृगरूप धारी ।
एक् बाणले यहिं पनी त दिया पछारी ॥
छाद्दै रगत् अति डरायर भागि आयाँ ।
जावैन भन्छु अब खुप् सित चेत पायाँ ॥ ५८ ॥

तस्मात् तिमी पनि विरोध् मति यो न लेऊ ।
सीता म हर्छु भनि आग्रह छाडि देऊ ॥
सब् नष्ट हुन्छ तिमिले मति यस्ति लीया ।
देख्यौ खर त्रिशिर दूषण मारि दीया ॥ ५९ ॥

हीतै कहन्छ भनि यो तिमि जानि लेऊ ।
आर्को कहन्छु म गुठिल् तिमि चित्त देऊ ॥
ई ता अनन्त अधिनाथ् परमेश्वरै हुन् ।
ब्रह्माजिले पनि भजिन्छ सदा पुरुष् जुन् ॥ ६० ॥

नारद्जिका वचन सूनि म आज भन्छु ।
स्वामित् ! म ता हित्त चिताइ सदा रहन्छु ॥
लौ मार रावण भनी वरदान माग्या ।
ब्रह्माजिले र उहिं सुर् प्रभु गर्न लाग्या ॥ ६१ ॥

---

१ होमनाथ—यहन्छु ।

जाऊ घरै वसि रहू मति यो न लेऊ ।
ईश्वर् बुझेर उहि माफिक चित्त देऊ ॥
जो गर्दछन् प्रभु गरुन् छ लिला उनैको ।
लाग्दैन जोर् प्रभु विषे अरुका कुनैको ॥ ६२ ॥

मारीचले जब त बात् यति सब् बतायो ।
इन् बात् सुनी बुझि त खुप् सित चित्त लायो ॥[1]
मारीचलाइ अनि रावण भन्छ हेरी ।
सीता म हर्छु मृग भै कन जाउ फेरी ॥ ६३ ॥

ईश्वर् त हुन् यदि भन्या ति अवश्य मार्छन् ।
सामान्य हुन् यदि भन्या ति अवश्य हार्छन् ॥
ईश्वर् भया पनि असल् छ अवश्य तर्छु ।
सामान्य हुन् त म सिता सँग भोग गर्छु ॥ ६४ ॥

जाऊ अवश्य म सिताजि हरेर लिन्छु ।
बोल्यौ यहाँ कछु भन्या त म काटि दिन्छु ॥
यसतो हुकुम् गरि तहाँ जब बीच पार्‍यो ।
मारीचले पनि तसै जिय आस मार्‍यो ॥ ६५ ॥

---

१ सोमनाथ—इन् बात् सुनेर बुझि खुप् ।

आखिर् मन्याँ म हरि देखि मन्या त तर्छु । [1]
यस् दुष्ट देखि मरिया त नरक् म पर्छु ॥ [2]
यसतो विचार् गरि तहाँ मृगरूप धारी ।
हुकुम् सिरोपर धरी कन भो तयारी ॥ ६६ ॥

दौड्यो लिला पनि चरित्र विचित्र गर्दै ।
सीताजिका नजिक गै कन ताहिं फिर्दै ॥
सीताजिलाइ गर्छ मोह भनेर दाग्यो ।
लीला गरी कन वरी परि चर्न लाग्यो ॥ ६७ ॥

छल् हो भनी प्रभुजिले पनि चाल पाया ।
एकान्तमा गइ सिता कन काम् अह्राया ॥
सीते ! अदृश्य भइ लौ बस अग्नि माहाँ ।
छायासिता पनि बनायर छोड याहाँ ॥ ६८ ॥

एक् भिक्षुको रुप लि रावण आज आई ।
हन्यो [illegible] दुष्ट तिमिलाइ स्वरुप् छपाई ॥
चाँडो अवश्य तिमिले पनि रुप् छपाऊ ।
एक वर्ष सम्म छपि दिन् तिमिले बिताऊ ॥ ६९ ॥

---

१ नेपाल—मन्या ।
२ पेजन—यस दुष्ट देखि मरि ता नरकै ।
अध्यात्मरामायण—
यदि मां राघवो हन्यात्तदा मुक्तो भवार्णवात् ।
मां हन्याद्यदि चेद्दुष्टस्तन्मे निरयो ध्रुवम् ॥

यस्तो हुकुम् सुनि अदृश्य सरूपधारी ।
छाया सिता पनि दुरुस्त गरिन् तयारी ॥
सीता छपी कन रहिन् जब अग्नि माहाँ ।
छायासिता सँग बस्या रघुनाथ ताहाँ ॥ ७०

छायासिताजि अति चित्र विचित्र मानी ।
खेलाउँ तेस मृगलाइ् भनेर ठानी ॥
बिन्ती गरिन् रघुपते ! मृग आज देऊ ।
[1] खेलाउँछु अधिक जाति छ पक्रि लेऊ ॥ ७१ ॥

ईच्छा थियो प्रभुजिको पनि विन्ति सूनी ।
जानू असल् छ भनि यो मन भित्र गूनी ॥
हात्मा धनू लि मृगका पछि आफु धाया ।
लक्ष्मणजिलाइ् बस तीमि भनी अह्राया ॥ ७२ ॥

लक्ष्मण् रह्या तहिं सीता सित चौकिदारी ।
मारीचलाइ् प्रभुले पनि खुप् लघारी ॥
मार्‍या तहाँ जब त दिक् बहुतै गरायो ।
हे भाइ् लक्ष्मण ! मर्‍याँ भनि छल् करायो ॥ ७३ ॥

---

१ [illegible]

छल्का वचन् सुनि सिताजि बहुत् डराइन् ।
लक्ष्मण्जिलाइ तिमि जाउ भनी अह्राइन् ॥
लक्ष्मण्जिले हुकुम यो सुनि विन्ति पाऱ्या ।
हे माइ ! जो मृग थियो प्रभुले त माऱ्या ॥ ७४ ॥

तेसतो कहाँ मृग थियो मृगरूपधारी ।
मारीच राक्षस थियो र त आज मारी ॥
ठाकुर्जिले तहिँ गिराइ दिंदा करायो[1] ।
हे भाइ लक्ष्मण ! मऱ्याँ भनि छल् गरायो ॥ ७५ ॥

ज्योतिस्वरुप् तहिँ भयो र मिल्यो हरीमा ।
आश्चर्य भो सकललाइ तसै घरीमा ॥
यस् दुष्टले पनि त यो गति आज पायो ।
भन्न्या बुझेर सब जन् कन हर्ष आयो ॥ ७६ ॥

लक्ष्मण्जिका वचन सुनि सिता रिसाइन् ।
आँसू बहुत् नजर देखि पनी खसाइन् ॥
बोलिन् अवाच्य पनि लक्ष्मणलाइ ताहाँ ।
भञ्ली मलाइ भनि भन्छैं[2] कि आज याहाँ ॥ ७७ ॥

---

१ भारतजीवन—करायो ।  २ होमनाथ—मनछ ।

राम् देखि बाहिक अवर् त भजैन मैले ।
तिम्रै अगाडि यहिं छोड्दछु देह ऐले ॥
तिम्रो त चित्त अति दुष्ट रहेछ जान्याँ ।
काम् देखि आज तिमिलाइ अति[1] शत्रु मान्याँ ॥ ७८ ॥

यस्ता वचन् सुनि ति लक्ष्मणजी रिसाया ।
बोलिन् अवाच्य भनि मित्र मनै चिताया ॥
धिक् चण्डि ! येति भनि खुप् सित चट्पटाया ।
वन्देविलाइ रखवारि तहीं खटाया ॥ ७९ ॥

सीताजिलाइ तहिं छोडि उठी गयाका ।
दूरै हुँदा नजर देखि फरक् भयाका ॥
देख्यो र रावण सिता सित जल्दि आयो ।
सन्न्यासिको स्वरुप ली कन रुप् छपायो ॥ ८० ॥

सन्न्यासि हुन् भनि बहुत् गरि भक्ति लाइन् ।
पूजा प्रणाम् पनि गरी कन हर्ष पाइन् ॥
विन्ती गरिन् वस गुरो ! प्रभु फर्कि आई ।
गर्नन् बहुत् प्रिय हजुर् कन चित्त लाई ॥ ८१ ॥

---

१ दोमनार्थ—व ।

यसता वचन् सुनि सिता तिर दृष्टि दींदो ।
को हो पती बुझुँ भनी कन गुह्य लींदो ॥
सोध्यो सिता सित पती पनि जो छ को हो ।
नाम् काम् समेत् तिमि बताउ न आज जो हो ॥ ८२ ॥

सीताजिले पनि भनिन् सब जो छ नाम् काम् ।
सन्न्यासि जानि कन कचि न पारि छल् छाम् ॥
सोधिन् तहाँ म पनि नामहरु सुन्न पाऊँ ।
कुन् हो बताउ तिमिले पनि नाम ठाऊँ ॥ ८३ ॥

यसता वचन् सुनि सिता कन हर्न आँटी ।
नाम् काम् तहाँ सब कह्यो रति भर् न ढाँटी ॥
बोल्यो अवाच्य पति मानि मलाइ लेऊ ।
रामचन्द्रलाइ तिमिले अब छाडि देऊ ॥ ८४ ॥

यसता वचन् सुनि अलिक् मनले डराइन् ।
बातले त दुष्ट कन तृण् सरिको गराइन् ॥
हे दुष्ट रावण ! अवश्य तँ आज मर्लास् ।
ऐले जसै प्रभुजिका अघि याहिं पर्लास् ॥ ८५ ॥

यस्ता वचन् सुनि रिसायर जल्दि ऊठ्यो ।
धान्यो स्वरुप् र अब हर्छु भनेर छूट्यो ॥
बिस् बाहु दस् मुख शरिर् पनि शुद्ध कालो ।
देखाइ सब् कन तरास् मन भीत्र हान्यो ॥ ८६ ॥

सीताजीलाइ मन्ले चित्ति कन मनमा मातृवत् बुद्धि गर्दो ।
हात्ले मैले छुँदामा अनुचित छ भनी स्पर्श केही न गर्दो ॥
आफ्ना नङ् सब् जमिन्मा धसि कन जमिनै जल्दि हात्ले उठायो ।
सीताजीलाइ रथ्मा धरि कन ठगुन्यो राम देखी छुटायो ॥८७॥

हा राम् ! लक्ष्मण ! यत्ति मात्र मुखले बोलेर साह्रै रुँदी ।
तन् मन् राम विषे धरेर बहुतै विह्वल् निरन्तर् हुँदी ॥
देख्या ताहि जटायुले र उडि गै रथ् चूर्ण पारी दिया ।
घोडा चूर्ण गराइ फेर् धनु समेत् टुक् टुक् गराई दिया ॥ ८८ ॥

रावण् झन् वीर थीयो अति झपट गरी हातमा खड्ग लीयो ।
काट्यो दूवै परवेटा रिस सित र तहाँ भूमिमा पारि दीयो ॥
बाधा पाई जटायू पृथिवितल गिन्या फेरि रथ्को तयारी ।
जल्दी पान्यो र सीता लिइ कन पुगि गो दुष्ट ता सिन्धु पारी ॥ ८९ ॥

आकाश्मा जब ऋष्यमूक गिरिका ऊपर् पुगीथिन् जसै ।
आफ्ना सब् गहना फुकालि वलियो पोको बनाइन् तसै ॥
राम् लक्ष्मण् कन यो दिउन् भनि तहाँ पोकै खसालिन् पनी ।
सुग्रिवले त गुफा निपे धरि लिया कस्ले खसाल्यो भनी ॥ ९० ॥




रावण जटायुलाई मार्दै

सीताजीलाइ लङ्का लगि कन मनमा मातृवत् बुद्धि गर्दो ।
भित्री जुन् हो बगैंचा तहिं असल अशोक् वृक्षका नीच् धर्दो ॥
सेवा खुप् गर्न लाग्यो तर पनि मनमा माइले दुःख पाइन् ।
हा राम् ! हा राम् ! जगन्नाथ् ! यहि वचन गरी राममा चित्त लाइन् ॥

मारीच् मारेर फिर्या प्रभु पनि वनमा देखिया ताहिं भाई ।
राम्ले ताहीं विचार्या मन मन इ कुरा भाइ पुग्नै न पाई ॥
माया सीता बन्याकी अलिकति पनि याद् छैन ई भाइलाई ।
सॉचै सीता इनै हुन् भनि कन मनले भन्दछन् चाल् न पाई ॥ ९२ ॥

यो बात् बोल्दिन गुह्य राखछु म पनी मानुन् सिता हुन् भनी ।
सीता निश्चय हुन् भन्या त रिसले लड्नन् रिपू थ्यै पनी ॥
यसतो निश्चय मन् भयो प्रभुजिको लक्ष्मण् पुग्या झट् तहाँ ।
सोध्या श्री रघुनाथले किन सिता छोडेर आयौ यहाँ ॥ ९३ ॥

लक्ष्मण्ले पनि यो हुकुम् सुनि तहाँ बिन्ती गर्‍या क्या गरूँ ।
जो दुर्वाच्य गरिन् सबै भनु भन्या सक्तीन मैले बरू ॥
मारिच्का छलका वचन् सुनि बहुत् दुर्वाच्य बोलिन् जसै ।
संझायाँ भरसक् अनेक् तरहले लागेन बिन्ती कसै ॥ ९४ ॥

---

१ होमनाथ—खुप् ।

फेरि उत्तर प्रभुले दिया अनुचितै हो यो गन्यौ ता पनी।
छोड्नू क्रन्ति थियेन दुर्वचनले स्त्री हो भनी ता पनी ॥
येती बात् गरि राम आश्रम विषे जल्दी कदम् ली गया।
देख्यानन् र सिताजिलाइ बहुतै शोक् गर्न लाग्दा भया ॥ ९५ ॥

क्री राक्षसहरुले हन्या कि वनमा की दुष्टले पेट् भन्या।
एक् थोक् क्या त भयो अवश्य म गयाँ कुन् दुष्टका खेल् पन्या॥
वन्देवीहरुलाइ मालुम भया विस्तार् बताऊ यहाँ।
सीता मेरि पियारि देखतिन म ता जान्छु सिता छन् जहाँ ॥ ९६ ॥

यस्तो रित् सित सोधि सोधि रघुनाथ् ज्ञानैस्वरूपी पनी।
जस्तो मानिस गर्छ सोहि रितले हा मेरि सीता! भनी ॥
फिर्थ्या तेस् वनमा वडा विरहले सोध्या न पाई उसै।
यै बिच्मा वनमा त रथ् र धनुका देख्या अनेक टुक् तसै ॥ ९७ ॥

भन्छन् लक्ष्मणलाइ भाइ! तिमिले देख्यौ यहाँको कुचाल्।
अर्को आइ जिती लियेछ बिचमा मैले त देख्याँ कुचाल् ॥
येती बात् गरि राम् अलिक् पर गया देख्छन् त पल्टी रही।
चिन्हैलाइ कठिन् जटायु कन ता दुवै पखेटा गई ॥ ९८ ॥

---

१ भारतजीवन—दमतै। २ होमनाथ—सोध्या।

अज्ञान् क्ति थियेन ता पनि तहाँ लीला नरैको गरी ।
चील्ह्याको न चिह्नचै गरेर भगवान् मन्छन् अगाडी सरी ॥
हे भाई ! धनु देउ दुष्ट मिलि गो मार्छु म वाणै धरी ।
खान्या येहि रहेछ हेरि वुझियो पल्टेछ खुप् पेट् भरी ॥ ९९ ॥

सून्या बात् र जटायुले पनि हवाल् वृत्तान्त विन्ती गऱ्या ।
सूनी पूर्ण दया भयो नजिक गै छाम्या र सब् ताप् हऱ्या ॥
सीताको समचार् खबर कहि तहाँ साम्ने जटायू पऱ्या ।
स्नान् दाहा गरि मांसपिण्डहरु दी क्रीया प्रभुले गऱ्या ॥१००॥

सायुज्यै मुक्ति पाई स्तुति पनि बहुतै भक्ति राखेर लाई ।
पौंच्या धाम्मा जटायू प्रभु पनि नरको ठिक्क लीला जनाई ॥
वन् वनमा फिर्न लाग्या विरह गरि गरी सोध्छन् जाहिं ताहीं ।
दोस्रा देख्न्या मिल्यानन् सकल वन ढुंड्या एक् पनी काहिं नाहीं॥१०१॥

छातीमा मुख् भयाको सिर पनि न हुँदा नाम् कवन्धै रह्याको ।
चार् चार् कोस् सम्म पुग्न्या दुइ अति बलिया दीर्घ बाहू भयाको ॥
राक्षस् थीयो तहाँ एक् वसि वसि कन सब् हातले खैंचि खान्या ।
तेसैका वाहु विच्मा रघुपति पुगिया रोकियो मार्ग जान्या ॥१०२॥

---

१ होमनथ—मरै । २ देखन—सरदा ।

राक्षस्ले घेरियाको बुझि कन रघुनाथ् भन्दछन् भाइलाई
हे लक्ष्मण् ! आज देख्यौ अब विच परियो निल्छ की हामिलाई ।
ठाकुर्जीका वचन् ई सुनि कन विनती ताहिं लक्ष्मण्जि गर्छन्
हे नाथ् ! क्या डर् छ यस्को दुइ भइ दुइ हात् काटि घँ[1] याहिं मर्छन्॥१०३

येती बात् गरि हात् दुवै सहजमा काटी खसाल्या जसै ।
राक्षस्ले पनि हात् गिऱ्या जब तहाँ आश्चर्य मान्यो तसै ॥
सोध्यो आज म वीरका पनि सहज् हातै खसाल्यौ यहाँ ।
को हौ क्या मनमा लियेर वनमा डुल्छौ छ जानु कहाँ ॥१०४॥

उत्तर् श्रीरघुनाथले पनि दिया हाँसेर विस्तार् गरी ।
सून्यो राम भनी तहाँ र मनले चीह्न्यो इनै हुन् हरी ॥
ठाकुर्जी कन चीह्नि खुस् अधिक भै विस्तार आफ्नू गऱ्यो ।
हे नाथ् ! आज चिह्न्याँ हजुर् कन यहाँ पायाँ र सब् ताप् टऱ्यो ॥१०५॥

ब्रह्मा देखि अवश्य पाइ वरदान् गन्धर्व हूँ ता पनी ।
राम्रो छू भनि गर्व भो र ऋषि ता साहै न राम्रा भनी ॥
हाँस्याँ के हि र अष्टवक्र ऋषिले राक्षस् भयेस् लौ भनी ।
पैले स्राप गरी दिया पछि त फेर् मुक्ती बताया पनी ॥१०६॥

---

१ होमनाथ—विस्तार् अनेक फेर् गऱ्यो ।

राक्षस् भै कन फिर्दथ्याँ म रिसले सिर् इन्द्रजीले हन्या ।
ब्रह्माको वरदान् थियो र म जियाँ इन्द्रादि सब् छक् पन्या ॥
सीरै गै पनि यो जियो अब कसो गर्लो भनी खुप् दया ।
आयो इन्द्रजिका र खान कन मुख् छाती विषे दी गया ॥१०७॥

चार् चार् कोस तलक् समाउन भनी लामा त हातै दिया ।
सो हात् आज गिराइ बक्सनु भयो याहीं तलक् ई थिया ॥
जस्तो मुक्ति ति अष्टवक्र ऋषिले पैल्हे बताया यहीं ।
तेसतो ठिक्क भयो इ हात् गिरि गया मुक्ती त पायाँ यहीं ॥१०८॥

क्या बात् ! धन्य रहेंछु आज म प्रभो ! आसरा गन्याथ्याँ जती।
रातोदिन् रटना थियो चरणको भै गो शरणको गती ॥
खाडल् खुप् गहिरो खनेर उसमा यो देह मेरो धरी ।
पोली भस्म गराइ बक्सनु हवस् जान्छु म संसार् तरी ॥१०९॥

सीता पाउनको उपाय विनती गर्न्याछु साँचो गरी ।
भन्न्या यो विनती सुन्या र हरिले पोली दिया खाग् गरी ॥
सुन्दर् शुद्ध स्वरूप् धन्यो प्रभुजिले खुस् भै दिया वर् पनी ।
भक्तीले वहुतै गन्यो स्तुति र त्यो पोंच्यो परम्धाम् पनी ॥११०॥

---

हे नाथ ! सीताजि मिल्निन् अब तिमि शबरी छन् जहाँ ताहिं जाऊ ।
साहैं भक्ती छ तिम्रा चरणकमलको ताप तिन्का छुटाऊ ॥
येती बिन्ती जगन्नाथ सित गरि जब धाम् त्यो गयो राम फेरी ।
आश्रम्सा पौंचि दर्शन् शबरि कन दिया खुप् कृपा राखि हेरी॥ १ १ १॥

आसन् देखि उठेर जल्दि शबरी राम्का चरणमा परिन् ।
सक् भर्को बहुतै पुजा गरि तहाँ हात् जोरि बिन्ती गरिन् ॥
हे नाथ ! हिन् कुलकी स्त्रिजाति भ गरीब् जान्दीन तिम्रो स्तुति ।
आधार् मात्र फगत् छ यै चरणमा यस्तै छ मेरो गति ॥११२॥

बिस्तार् सब् गुरु देखि सूनिं गुरुका आज्ञा मनैमा लिईं ।
कैल्हे देखछु हजूरलाइ भनि खुप् तन् मन् हजुर्मा दिईं ॥
पूजा नित्य हजूरको गरि यहाँ स्वामिन् ! बस्याकी थियाँ ।
हे नाथ ! आज दया भयो हजुरको प्रत्यक्ष देखी लियाँ ॥११३॥

क्याले आज बहुत् प्रसन्न हुनु भो कुन् कर्म मैले गऱ्याँ ।
योगीका मनले न भेटि सकिन्या मैले त दर्शन् गऱ्याँ ॥
यसतो बिन्ति सुनी दया बहुत भो हेतू प्रभूले कह्या ।
उच् निच् स्त्री र पुरुष् बिचार्दिन मता खुस् हुन्छु भक्ती भया ॥११४॥

---

१ नेपाल, होमनाथ—मेरी । २ होमनाथ—पार ।

नौ साधन् कि त भक्ति छन् ति नवमा पैल्हे त सत्संग हो ।
पैल्हे साधन पो भयो पनि भन्या बाँकी रह्याका ति जो ॥
आठ साधन्हरु हुन् ति ता क्रमसितै मिल्छन् असल् सङ्गले ।
सत्को सङ्ग भया सबै बनि गयो क्या हुन्छ कुन् सङ्गले ॥११५॥

सत्को सङ्ग मै रह्याकी दिन दिन म उपर् भक्ति ठूलो भयाकी ।
सज्जन्को सङ्ग पाई कन सब गुणमा पार पोंची गयाकी ॥
देख्याँ मैले र दर्शन् दिन भनि खुसले आज आफैं म आई ।
दीयाँ दर्शन् र पायौ तिमि अधम भया पाउँथ्यौ क्या मलाई ॥११६॥

मुक्ती भो आज तिम्रो अब फजिति छुट्या खूसि भै आज जाऊ ।
मेरी सीता कहाँ छन् कछु खबर भया त्यो पनी सब् बताऊ ॥
हुकुम् जस्सै सुनीथिन् तब तहिं विनती गर्दछिन् क्या बताऊँ ।
सर्वव्यापी हजुर्ले बुझि त न सकिन्या एक् रती छैन ठाउँ ॥११७॥

साँचो बिन्ती गर्‍याँ यो तर पनि नरको आज यो रूप धारी ।
आज्ञा भो ता म बिन्ती पनि हजुर विषे गर्दछु काल् विचारी ॥
सीता लङ्का विषे छन् अब त हजुरले भेट सुग्रीवलाई ।
बक्स्या जावस् ति गर्नन् जति जतिहरु काम् बिल्कुलै पार लाई॥११८॥

---

१ होमनाथ—नउमा ।
२ ऐजन—दो ।
३ ऐजन—सतसङ्गै ।
४ ऐजन—सब ।

पम्पा भन्नू तलाऊ पनि नजिक हुन्या ऋष्यमुक पर्वतैका ।
ठाकूरैमा ति बस्छन् अति फजिति सही[1]दिन् बिताईं संधैका[2] ॥
वालीको डर् हुनाले तहिं बहुत बस्या वालि जाँदैन ताहाँ ।
वालीलाईं न जानू भनि कन छ सराप् सब् गऱ्याँ बिन्ति याहाँ ॥११९॥

सुग्रिव् सीत मित्यारि गर्नु सब काम् हून्या छ सीता पनी ।
मिलनिन् आज म देह त्याग् गरि यहीं पोल्छु नजिक् मैं भनी ॥
बिन्ती पारिचिता बिषे पसिशरीर् यो जो छ सब् त्याग् गरिन् ।
ठाकुर्को अति भक्तिले ति शबरी संसारसागर् तरिन् ॥१२०॥

क्या दुर्लभ् रघुनाथ् खुसी हुन गया जात्को अधम् भै पनी ।
श्रीराम्का अघि देह छाडि कन पार्[3] पौंचिन् सहज् तैं[4] पनी ॥
ब्राह्मण भै कन भक्ति गर्दछ भन्या उस्का त ज्ञन् क्या कुरा ।
जो कोही पनि भक्ति भो भनि भन्या योगी ति हुन्छन् पुरा ॥१२१॥

हे लोक् हो ! रघुनाथका चरणको भक्ती छ मुक्ती दिन्या ।
यो जानी कन कामधेनु सरिका राम् हुन् मनैमा लिन्या ॥
क्या गर्छौं अरु मन्त्र तन्त्रहरुले छोडेर सब् राममा ।
तन् मन् लाइ अवश्य जान मनले सार् मिल्छ यै काममा ॥१२२॥

## इति श्रीअरण्यकाण्ड

---

१ नेपाल—भई । भारतजीवन—भनी ।
२ बरा—दुर्दैसा ।
३ होमनाथ—नी ।
४ पैन्न—भै ।

# श्रीकिष्किन्धाकाण्ड

जस्तै मुक्त भई गइन् ति शबरी सब् बात् सुनी राम् पनी ।
जान्छू आज म ऋष्यमूक गिरिमा सुग्रीव भेट्छू भनी ॥
जान्थ्या कोस् भरिको तलाउ मिलिगो पम्पा भन्याको पनी ।
चीह्न्या श्री रघुनाथले शबरिले यै हो भन्याको भनी ॥ १ ॥

माछा कच्छप चल्दछन् कमलको सब् गिर्छ केसर् तहाँ ।
केसर्ले जब छोपियो पनि भन्या देखिन्छ जल् पो कहाँ ॥
नीला लाल सफेद् कमल् पनि अनेक् रङ्का भयाका तहाँ ।
बोल्छन् हंस चकोर सारसहरू लाटा कस्यारा जहाँ ॥ २ ॥

जस्तो निर्मल हुन्छ सन्तहरूको मन् सोहि माफीक जल् ।
निर्मल् देखि बहुत् प्रसन्न हुनु भो लाग्यो र साह्रै असल् ॥
थोडो जल् पनि पान् गरी सकल वन् हेर्थ्या जगन्नाथ् तहाँ ।
देख्या सुग्रिवले डरायर नजर् लाया प्रभू छन् जहाँ ॥ ३ ॥

---

१ भारतजीवन (क)—अरु ।  २ बर्र—केही ।

वालीको छल हो भन्या बुझि तहाँ हातले इसारा दिया ।
औरै कोहि रहेछ सज्जन भन्या हेरेर हाँसी लिया ॥
ब्राह्मणको लडिका बनेर हनुमान् जाऊ ति को हुन् कहाँ ।
जान्छन् क्या मनमा छ सब् वरिपरी हेरेर डुल्छन् तहाँ ॥ ४ ॥

सुग्रिवले हनुमानलाइ जब यो हूकुम दिया जा भनी ।
ब्राह्मणका लडिका बनेर हनुमान् राम्का हजुर्मा पनी ॥
पौंची पाठ सित बिन्ति पारि सब काम् सोध्या प्रभूको[1] जसै ।
विस्तार् नाम र कामको प्रभुजिले खुस् भै बताया तसै ॥ ५ ॥

सुग्रिवको हनुमानले पनि तहाँ विस्तार बिन्ती गऱ्या ।
बोकूँ श्री रघुनाथलाइ भनि फेर् आफ्नू स्वरुप् झट् धऱ्या ॥
राम् लक्ष्मण् कन बोकि जल्दि हनुमान् सुग्रीवका पासमा ।
पौंचाऊँ रघुनाथलाइ भनि खुप् कूद्या ति आकाशमा ॥ ६ ॥

जल्दी पर्वतका उपर् पुगि गया छाया विषे राम् रह्या ।
सुग्रिवलाइ खबर् दिना कन तहाँ जल्दी हनूमान् गया ॥
विस्तार् पायर आइ सुग्रिवजिले दर्शन् प्रभूको गऱ्या ।
हाँगा कोमल[2] भाँचि आसन दियाँ[3] आनन्दसागर् पऱ्या ॥ ७ ॥

---

१ रोमनाथ—प्रभूका । ३ भारतजीवन—दिई ।
२ पंवरं—डाँगाको छल ।

आसन् सुग्रिवलाइ लक्ष्मणजिले दीया [illegible] ।
लक्ष्मणजी कन वस्न आसन दिया ताहीं [illegible] ।
सब् वृत्तान्त बताइ लक्ष्मणजिले विस्तार् सुनाया [illegible] ।
सीता जुन् गहना खसालि गइथिन् हाजिर् गराया [illegible] ८ ।

हा राम् ! लक्ष्मण ! येति भात्र मुखले बोलेर आकाशमा ।
जान्थिन् सब् गहना फुकालि कन ता हाम्रा यसै वासमा ॥
गिर्न्यौं पाठ् सित पो खसालि ति गइन् चिह्नीन याहीं थियौं ।
कसका हुन् यहि चीह्नि बक्सनु हजुर् यै हो हजुर्मा दियौं ॥ ९ ॥

येती बिन्ति गरी दिया ति गहना हेर्न्या प्रभूले पनी ।
चीह्न्या सब् गहना र शोक बहुत भो हा ! मेरि सीता ! भनी॥
रोया छाति विषे धर्‍या र[3] गहना नाना [illegible] ।
लक्ष्मण् सुग्रिवल तहाँ प्रभुजिको दिल् [illegible] ॥ १० ॥

हे राम ! रावणलाइ मारि महँजे [illegible] ।
हाजिर् हामि गराउँला हजुरमा [illegible] ॥
येती बिन्ति तहाँ ति सुग्रिवजिले [illegible] ।
बोल्या श्री हनुमानले पनि [illegible] ।

---

१ भारतजीवन, नेपाल—[illegible]
२ होमनाथ—मै ।

अग्नी साक्षि धरेर सुग्रिवजिले राम् थ्यै मित्यारी गरी ।
बाहाँ जोरि सखा भई नजिकमा सुग्रिव् बस्या तेस् घरी ॥
सुग्रिव्ले तहिं बिन्ति बात् पनि गर्‍या हे नाथ् ! फजीती सही ।
वालीका डरले बहुत् दिन बित्या एसै जगामा रही ॥ १२ ॥

याहाँ वालि त आउँदैन छ सराप् मातङ्गजीको र यो ।
पायाँ वस्न नहीं भन्या म कन ता कस्ले बचाऊँदथ्यो[1] ॥
वालीको बल बिन्ति गर्छु अहिले जस् देखि सब् डर्दछन् ।
कस्तै वीर[2] हउन् लड्या पनि भन्या लड्न्या सबै मर्दछन् ॥ १३ ॥

ठूलो विर् मयपुत्र राक्षस थियो मायावि ता नाम् थियो ।
वाली सीत लडाञि गर्न भनि त्यो आयो र हाँक् खुप् दियो ॥
वालीले पनि दौडि गै कन तहाँ हान्यो मुठीले जसै ।
बाधा पाइ डराइ भागि उ गयो लाग्यो पछाडी तसै ॥ १४ ॥

वालीका पछि लागि मै पनि गयाँ राक्षस् गुफामा गयो ।
ढोकामा त मलाइ राखि रिसले फेर् भित्र जाँदो भयो ॥
मैन्हा दिन् बिति गै गयो त पनि त्यो फर्केन वाली जसै ।
साहै दिक् म थियाँ कसो गरुँ भनी आयो रगत् पो तसै ॥ १५

---

१ वेदान्त—पायाँ वस्न नहीं न ता म कन ता । २ होमनाथ—वैरि ।
मारुतजीवन—पायाँ वस्न नहीं भन्या ।

लौ वाली त मरेछ हेरि[1] रगतै आयो गुफा देखि ता ।
मैलाई पनि फर्कि मार्छ रिसले गूफा थुनी जाँ म ता ॥
यस्तो बुद्धि भयो र पत्थर ठुलो ल्यायाँ र गूफा थुन्या ।
फर्की आउन मन् गऱ्या पनि सहज् निस्की न सक्नू हुन्या ॥ १६ ॥

यस्ता पाठ् सित खुप् थुन्याँ र म फिऱ्याँ वाली मऱ्यो[2] लौ भनी।
विस्तार् सर्व सुनाउँदा म कन ता राजा बनाया पनी ॥
राजा भै कन राज्य भोग् पनि गऱ्याँ क्यै दिन् पछी वालि ता ।
राक्षस् मारि फिरेर दाखिल भयो रीसाइ मै माथि ता ॥ १७

उस् दिन् देखि डराइ याहिं म रह्याँ मेरी त पत्नी पनी ।
बल्जफ्ती[3] सित भोग गर्छ गरुँ क्या पुग्दैन जोर् तै पनी[4] ॥
याहीं आउन सक् भये यहिं पनी आयेर मान्यौं[5] थियो ।
पापको क्या डर मान्छ त्यो र बलले जस्ले बुहारी लियो ॥ १८

साहै दुःखि भयेर् सुग्रिवजिले बिन्ती गऱ्याको सुनी ।
सुग्रिव्को[6] अब दुःख हर्दछु भनी अन्तःकरण्ले गुनी ॥
खातिर् श्री प्रभुले गऱ्या सुन सखे ! त्यो वालि मारी यहाँ ।
तिम्रो[7] राज्य गराउँला अब उपर् जोर् चल्छ तेस्को कहाँ ॥ १९

१ सबै पुस्तकहरुमा 'हेरि' भन्ने पाठ छ । तर यो पाठ उसतो अनुकूल भये जस्तो लाग्दैन। 'हेर' वा 'हेर् इ' भन्ने पाठ भये राम्रो हुँदो हो। स०
२ होमनाथ—मन्यो ।
३ भारतजीवन, होमनाथ—बल्जफ्त्ब् ।
४ नवई—जोरै पनी ।
५ होमनाथ—मान्यैं ।
६ ऐजन—सुग्रीव्को ।
७ नेपाल, भारतजीवन—तम्रो ।

यस्तो सत्य वचन् सुन्या प्रभुजिको शङ्का पन्यो तै पनी ।
सक्छन् क्या तब वालि मार्न कन ता ठूलो छ वाली भनी ॥
वालीलाइ बहूत बिर् बुझि तहाँ रामका अगाडी सरी ।
वालीको अघिको पराक्रम कह्या बिल्कूल बिस्तार् गरी ॥ २० ॥

एक दिन् दुन्दुभि नाम राक्षस ठुलो आयो र हाँक् खुप् दियो ।
वालीले सहजै निमोठि कन सिर् छुट्ट्याइ हातमा लियो ॥
मोही फ्याँकि दिंदा यहाँ गिरि गयो चार् कोस् जगामा जसै ।
छीटा पर्न गयो बहुत् रगतको ऋषीं रिसाया तसै ॥ २१ ॥

वालीलाइ सराप् दिया अब यहाँ आइस् भन्या तैं पनी ।
सिर् जुदा भइ पृथ्विमा गिरि गयास् जस्तै गिन्यो यो पनी ॥
यो मालुम् त मलाइ सब् अघि थियो मो जानि याहीं रयाँ ।
उसलाई पनि यो छ याद् तब मतेस् बिर् देखि बाँच्तो भयाँ ॥ २२ ॥

मोही सिर् अझ तक् छ पर्वत सरी यो फ्याँकन सक्नू भया ।
वाली मार्न समर्थ ताहिं चिहुला मेरा त मेरी गया ॥
ई बात् सुग्रिवका सुनी झलक घू इन्लाट भन्न्या भयो ।
फ्याँक्या सिर् तहिं पाउका अँगुलिले चालीस कोस् तक गयो॥ २३ ॥

---

१ [illegible]
२ [illegible]
३ [illegible]
४ [illegible]
५ [illegible]
६ [illegible]
७ [illegible]

देख्या सुग्रिवले तथापि मनमा शङ्का त फेरी रह्यो ।
सक्छन् क्या तब वालि मार्न कन ता ठूलो छ भन्न्या भयो ॥
सात् ताल् वृक्ष इ छन् इ एक शरले छेड्छन् त मार्छन् भनी ।
सुग्रिव्का मनमा भयो र इ कुरा सब् थोक् सुनाया पनी ॥ २४ ॥

हे नाथ् ! बिन्ति म गर्दछु अरु पनी यस्तो छ वाली भनी ।
येही सिर् कन फ्योंकि मात्र मनले मानेन विश्वास् पनी ॥
वालीले यहि ताल वृक्ष कन ता बूटै बराबर् गनी ।
हल्लायेर खसालि दिन्छ जति छन् सम्पूर्ण पत्ता पनी ॥ २५ ॥

ई ताल् वृक्ष पनी यहाँ हजुरले एक् वाण ऐल्हे धरी ।
सब्मा छिद्र गराइ बक्सनु हवस् बुझन्या छ मन् खुप् गरी ॥
येती बिन्ति तहाँ ति सुग्रिवजिले राम् ध्यैं जसै ता गर्‍या ।
राम्जीले पनि लौ भनेर खुसिले हात्मा धनू वाण् लिया ॥ २६ ॥

बाण् फ्योंक्या प्रभुले र वेग् सित गयो सात ताल भेदन् गरी ।
पर्वत् भूमि समेत् विदारि पर गो सामने त सब् साफ् गरी ॥
ठोक्कैमा फिरि आइ बाण् जब पर्‍यो सुग्रीवजी छक् पर्‍या ।
साक्षात् श्रीपति हुन् भनी चिह्नि तहाँ राम्को स्तुती खुप् गर्‍या ॥ २७ ॥

---

१ हामनाथ—इ त ।
२ नेपाल—गरी ।
३ हामनाथ—धनुर्वाण ।
४ नेपाल—धर्‍या ।
५ भारतजीवन—छिनारि ।
६ होमनाथ—सबै ।

हे नाथ ! बल्ल चिह्नयाँ अहो ! सकलका आत्मा जगन्नाथ् भनी।
माया देखि फरक् भयो अब त मन् लाग्दैन माया पनी ॥
क्या गर्छु अब पुत्र दार धनले सम्पूर्ण ई दुर् हउन्[2] ।
मेरा सब् दस इन्द्रियै हजुरका सेवा टहल्मा रहुन् ॥ २८ ॥

यै पाठ्ले जब ता गऱ्या स्तुति तहाँ सुग्रीवले सो सुनी[3] ।
यो ज्ञान् आज म घू[4] भनी प्रभुजिले अन्तःकरण्ले गुनी ॥
मायाले अनि मोह पारि रघुनाथ् हाँस्या र बोल्या जसै ।
सुग्रिव् मोह भया वचन् सुनि तहाँ ऊ ज्ञान बिर्स्या तसै ॥ २९ ॥

हे सुग्रीव सखे ! मलाइ दुनियाँ भन्नन् मित्यारी गरी ।
कुन् चिज् सुग्रिवलाइ दी कन गया आपत्ति तिन्को हरी ॥
यो लोक्को अपवाद् म मेट्छु अब ता वाली छ ऐल्हे जहाँ ।
ताहाँ गै कन हाँक देउ तिमिले त्यो वालि माछ्रै यहाँ ॥ ३० ॥

ऐल्हे राज्य गराउँछु भनि तहाँ राम्को हुकुम् भो जसै ।
सुग्रिव् खूसि भयेर वालि कन खुप् हाँक्या वचन्ले तसै ॥
किष्किन्धापुरिका नजीक वनमा आयेर हाँक् खुप् गरी ।
सुग्रिव् तो जब ता चल्या बुझि खबर् वाली छुट्या तेस् घरी ॥ ३१ ॥

---

१ होमनाथ—भयौं अब मन्मर।
२ पेजन—ई दूर हुन्।
३ बर्दर—राम्ले त सब् त्यो सुनी।
होमनाथ—राम्ले त त्यो सब् सुनी।
४ होमनाथ—बनि।
५ पेजन—हामेर।
६ पेजन—तिन्को।
७ पेजन—यही।
८ मारतज वन (क)—वनमा
९ होमनाथ—सुग्रीव्जी।

वाली सुग्रीवको लडाञि पनि भो सुग्रीव एक् क्षण् लड्या ।
सक्थ्या सुग्रिवले कहाँ सहजमा वाली विरैले धर्‍यां[1] ॥
बाण् छोडी कन वालिलाइ अब ता मार्नन् प्रभूले भनी ।
एक् क्षण् ता यहिँ[2] आसले टिकि गया घुस्सा दिंदामा पनी ॥ ३ २ ॥

वाली सुग्रिवको दुरुस्त अनुहार् एक् देखि राम्ले जसै ।
बाण् थाम्या टिकि सक्नु मुसकिल भई सुग्रीव भाग्या तसै ॥
पौंच्या श्री रघुनाथका हजुरमा काम्दै र छादै रगत् ।
बल् तोडी कन वालिले हरि लियो[3] एक् देह पौंच्या फगत् ॥ ३ ३ ॥

सुग्रिव्ले तहिं बिन्ति खुप् सित गर्‍या हे नाथ् ! मलाई यहाँ ।
मार्नैको[4] यदि मन् छ पो पनि भन्या जोर् चल्छ मेरो कहाँ ॥
आफैंले यहिं मारि बक्सनु हवस् स्वामित् ! हजुर्ले पनी ।
शत्रूलाइ लगाइ मार्न त उचित हो क्या सखा हो भनी ॥ ३ ४ ॥

सुग्रिव्का इ वचन् सुनी गह भरी आँसू प्रभूले धर्‍या ।
सुग्रिवजी कन अङ्कमाल गरि खुप् खातिर् प्रभूले गर्‍या ॥
हे सुग्रीव सखे ! दुरुस्त अनुहार् एक् देखि शङ्का भयो ।
मर्नन् मित्र भनेर पो डर हुँदा बाँचेर वाली गयो ॥ ३ ५ ॥

---

१ होमनाथ—धर्‍या ।
२ नेपाल—तहिँ त ।
३ होमनाथ—लियो ।
४ पेअन—मार्नाको ।

चिह्न देह विषे धरेर अहिले जाऊ र हॉक् देउ फेर् ।
वालीलाइ म मारि दिन्छु सहजै लाग्वैन ऐल्हे त बेर् ॥
यस्ता बात् गरि खुप् शपथ् पनि गरी सुग्रीवको मन् भरी ।
आज्ञा लक्ष्मणलाइ बक्सनु भयो फुत् ल्याउ माला धरी ॥ ३६

सो माला पहिराइ भाइ ! तिमिले जल्दी पठाऊ तहाँ ।
हॉक् दीउन् अब वालिलाइ अहिले मार्छु म छोड्छु कहाँ ॥
लक्ष्मणले पनि यो हुकुम् सुनि तहाँ माला लगाई दिया ।
त्यो माला पहिरेर सुग्रिव गया वाली जहाँ विर् थिया ॥ ३७

वालीलाइ सुनाइ हॉक् बहुत दी सुग्रिव् बस्याथ्या जसै ।
वालीले पनि शब्द सुग्रिवजिको सून्या र ऊठ्यो तसै ॥
आश्चर्यै मनमा भयो अघि भन्या ऊठ्यो पछी रिस् पनी ।
मुक्का स्वाईं लघारियो त पनि फेर् फर्क्यो भगूवा बनी ॥ ३८ ।

वालीले पनि फेर् कछाड् कसि तयार् भै जान लाग्या जसै ।
ताराले त न जाउ यस् वखतमा भन्दै समातिन् तसै ॥
कोही वीर् बलवान् सहाय मिलि पो सुग्रीव आया यहाँ ।
साहायै न भया त येहि घडिमा सुग्रीव फिर्थ्या कहाँ ॥ ३९ ।

---

१ ववई—गरी ।
२ होमनाथ—उठ्या ।
३ ऐजन—भने ।
४ भारतजीवन, नेपाल—स्वाईं ।
५ ववइ, होमनाथ—मनी ।
६ ववइ—लाग्यो ।
७ ऐजन—अलवत् । अध्यात्मरामायण—महायो बत्वालस्य वधिं नून समागत ।

ताराका इ वचन् सुनेर बलवान् वीर् बालि बोल्छन् तहाँ ।
हे प्यारी ! न डराउ को छ म सरी विर् आज दोस्रो यहाँ ॥
सुग्रिव्लाइ सहज् सहाय सहितै मारेर फिर्न्या म छु ।
विर् हूँ हाँक दिंदा कसो गरि बसूँ शङ्का न मान्या कछु ॥ ४० ॥

वालीका इ वचन् सुनी कन तहाँ ताराजिले फेर् पनी ।
भन्छिन् नाथ् ! कछु सूनि बक्सनु हवस् क्या भन्दछे यो भनी ॥
बिन्ती गर्छु म हित् कुरो हजुरमा साक्षात् अयोध्यापती ।
श्री राम्चन्द्र सहाय छन् अब तहाँ चल्दैन जोर् एक् रती ॥ ४१ ॥

सुग्रिव् सीत मित्यारि लाइ रघुनाथ्ज्यूले पिछामा लिया ।
वाली मारि म राज्य आज दिउँला भन्न्या वचन् यो दिया ॥
भन्न्या बात् अरुमा हुँदा वन महाँ सूनेर अङ्गद् यहाँ ।
आई सब् इ कुरा मलाइ अघि नै भन्थ्यो न जाऊ तहाँ ॥ ४२ ॥

सुग्रिव् सीत विरोध् न राख तिमिले जाऊ र ल्याऊ यहाँ ।
यो राज् सुग्रिवलाइ देउ अब ता जित् छैन तिम्रो तहाँ ॥
श्रीराम्का दुइ पाउमा पर तिमी गर्नन् प्रभूले दया ।
साँचा हुन् इ कुरा बुझी लिनु हवस् भोग् गर्न इच्छा भया ॥ ४३ ॥

---

१ मारा ले वाली सँग कुरा गर्दा "तिमी", "नपारी" र "हजुर" भनी भनेकी छन् । विविध रचनाको प्रयोग देखाउन कविले यसो गरेको होइन किन्तु छन्दवश भाषा हुनाले यौटै रूप राख्नु नसकेको हुने हुनाले र ईश्वर तुल्य आफ्ना आराध्य पतिदेव हुँ जे भने पनि हुने हुनाले उपर्युक्त सबै रचनाको प्रयोग तराले गरेकी हुन् । स०

येती बिन्ति गरेर पाउ दुइमा पक्रेर रोइन् जसै ।
तारालाइ बुझाउना कन तहाँ फेर् वालि बोल्याँ तसै ॥
हे प्यारी ! न डराउ कत्ति रघुनाथ् साक्षात् रमाका पती ।
नारायण् भनि चिन्दछु म पनि सो नाथ् हुन् जगत्का पती ॥ ४४ ॥

ताहाँ छन् रघुनाथ् भन्या चरणमा पर्न्याछु चाँडै तसै ।
सुग्रीवै छ फगत् भन्या सहजमा मार्न्याछु छोड्छु कसै ॥
सुग्रिव् कुन् बलियो छ पाजि भगुवा त्यो लड्न मनसुब् लिन्या ।
तेस् पाजी कन डाकि आज कसरी यो राज्य मैले दिन्या ॥ ४५ ॥

तस्मात् शोक् न गरी बसी रहु तिमि जान्छु म ताहाँ भनी ।
लड्नैलाइ कछाड् कसी कन तयार् भै वालि दौड्या पनी ॥
वाली सुग्रीव दुइ भाइ रिसले फेर् लड्न लाग्या जसै ।
रुख्को आड गरी तहाँ प्रभुजिले एक् बाण छोड्या तसै ॥ ४६ ॥

बाण् बज्र्यो जब वालिका हृदयमा सर्वाङ्ग बाधा गरी ।
पृथ्वी कम्प गराइ झट् तहि गिऱ्या वाली त मूर्छा परी ॥
मूर्छा दुइ घडी पऱ्या पछि अलिक् चैतन्य आयो जसै ।
देख्या श्री रघुनाथलाइ खुसि भै सामन्ने बस्याका तसै[3] ॥ ४७ ॥

---

१ भारतजीवन—बोल्यो।
२ बंबई—मरेर।
३ नेपाल—यसै।

भन्छन् श्रीरघुनाथलाइ रघुनाथ ! तिम्रो बिराम् क्या गऱ्याँ ।
धर्मै छोडि[1] लुकेर आज तिमिले माऱ्यौ म ऐल्हे मऱ्याँ ॥
यो क्या क्षत्रियधर्म हो लुकि लुकी विर् बाण छोड्छन् कहीं ।
क्षत्री भै कन धर्म छोडि लडन्या एक् आज देख्याँ यहीं ॥ ४८ ॥

साम्ने भै कन बाण छोडि[2] तिमिले माऱ्यौँत खुप् यश् थियो ।
सुग्रिव् हो कति साख् म हुँ कति कुसाख् हा दैव ! क्या मन् दियो ॥
सीता रावणले हऱ्यो भनि बहुत् सन्ताप[3] मन्ले गरी ।
सुग्रिव्लाइ सहाय ली म कन ता लूकेर चोर् झैं गरी ॥ ४९ ॥

माऱ्यौ यो अति चुक् भयो गरुँ कसो बाँच्थ्या त याहीं बसी ।
रावण्लाइ कुलै समेत् सहजमा झिक्थ्याँ म पाता कसी ॥
लङ्कापूरि समेत् पनी म बलले झिक्थ्याँ सहजमा यहीं ।
पाजी रावणलाइ मार्न तिमिले क्या जानु पर्थ्यो उहीं ॥ ५० ॥

चोरी मारि लिंदा[4] न यश् हुन गयो मारू न खानू भयो ।
धर्मात्मा तिमि पापि झैं हुन गयौ ज्यान् व्यर्थ मेरो गयो ॥
वालीका इ वचन् सुनेर रघुनाथ् भन्छन् तँ बोल्छस् कति ।
वाली हूँ भनि गर्व गर् त पनि हेर् साँचै तँ होस् दुर्मति ॥ ५१ ॥

---

१ होमनाथ—छाडि ।
२ ऐजन—छाडि ।
३ ऐजन—सन्ताप् मनैले ।
४ बर्द्द—दिंदा ।

पत्नी सीत वियोग् हुँदा यति विलाप् हुँदा रह्याछन् भनी ।
मालुम् सब् त तहीं छ फेर् म भनु क्या पर्दैन भन्नू पनी ॥
पत्नीदान् गरि पुण्य हुन्छ जति सो मिल्न्या छ पुण्यै पनी ।
तस्मात् आज अवश्य हान शरले जावस् पती ध्यैं भनी ॥ ६०॥

येती बात अघि राम सीत[1] गरि फेर् सुग्रिव्जिलाई पनी ।
भन्छिन् लौ गर राज्य आज खुसिले मितले दियाको भनी ॥
ताराका इ वचन् सुनी कन बहुत् आयो प्रभूमा दया ।
तारालाइ बुझाउना कन तहाँ एक् तत्त्व भन्दा भया ॥६१॥

हे ताराजि ! विचार् न[2] राखि तिमिले शोकै कती गर्दछयौ ।
यो मेरो पति हो भनेर न बुझी व्यर्थै शरीरि हर्दछयौ ॥
जीवै हो पति भन्दछयौ पनि भन्या मर्दैन जीव् ता कहीं ।
देहै हो पनि[3] भन्दछयौ त किन शोक् गछर्यौ छ ऊ ता यहीं ॥६२॥

श्रीराम्का इ वचन् सुनी कन तहाँ ताराजि चुप् भै रहिन् ।
जुन् सन्देह पर्‍यो वहाँ मन महाँ सो मात्र सोद्धी भइन् ॥
हे नाथ् ! मर्जि भयो सुन्याँ सब कुरा बुझ्दैन[4] मन् तै पनी ।
सन्देहै मनमा रह्यो[5] म कन ता को गर्छ यो भोग् भनी ॥६३॥

१ होमनाथ—का सँग ।
४ होमनाथ—पनी ।
५ नेपाल—हुदैन ।

देहै गर्दछ भोग् भनू पनि भन्या जड् पो छ यो देह ता ।
ईश्वर् हो उहि गर्छ भोग् भनु भन्याँ सक्तीन भन्नै म ता ॥
साहै मोह भयाँ म ता हजुरका एकै वचन्‌ले गरी ।
माया राखि बुझाइ बक्सनु हवस् अज्ञान मेरो हरी ॥ ६४ ॥

ताराका इ वचन् सुनी कन बहुत् माया मनैमा धरी ।
तत्त्वज्ञान् सब ताहिं बक्सनु भयो खोलेर विस्तार् गरी ॥
हे ताराजि ! न रोउ आज मनले संसार् छ झूटो भनी ।
झूटो कुन् रितले छ यो भनि भन्या भन्छू म विस्तार् पनी ॥ ६५ ॥

म ता नित्यै पो हूँ यहि शरिरमा लागि म गयाँ ।
शरिर् मर्दा आफैं मइँ मरि गया झैं पनि भयाँ ॥
अहो ! अज्ञान् मेरो भनि कन जहाँ तक् मन महाँ[1] ।
लिंदैनन् ताहाँ[2] तक् फजिति पनि छन् यै जन महाँ ॥ ६६ ॥

स्फटिक् जस्तो जिव् हो शरिरहरु लाहा बुझि लिनू ।
स्फटिक् लाहाका सङ् धरि कन त दृष्टान्त छ दिनू ॥
लहाको[3] सङ् बस्ता स्फटिक म छु लाल् भन्छ जसरी ।
शरिर् मर्दा मर्छु म पनि भनि जिव् भन्छ तसरी ॥ ६७ ॥

---

१ नेपाल, भारतजीवन—न मनमा ।
२ होमनाथ—ताहीं ।
३ नेपाल—रहैका ।

स्फटिकले रातो छ भनि कन सुहावस् त उ पनी ।
सुहावस् यस् जिवले शरिर सँगमा मर्छु म भनी ॥
न ता जिव् मर्‍याँ हो शरिर सँग लागेर जनको ।
न रातो हुन्या हो स्फटिक सब खेल् जान मनको ॥ ६८ ॥

मनैका खेल्ले जिव् शरिर मई हूँ भन्दछ भनी ।
जहाँ तक् जान्दैनन् फजिति तहिं तक् मिल्दछ पनी ॥
मनैको खेल् यो हो[1] भनि कन त जान्न्या तरि गया ।
न जान्न्या जिव्[2] जो हुन् उति त सब फन्दा परि गया ॥ ६९ ॥

शरिर् मै हूँ मेरै धन जनहरू हुन् भनि जसै ।
पर्‍यो[3] मन्का खेल्मा तब फजिति मिल्छन् बुझ यसै ॥
विना सत्का सङ्ले विनँ[4] गुरु कृपाले इ फजिती ।
अवश्यै छुट्तैनन् सकल मनका खेल न जिती ॥ ७० ॥

म नित्यै आत्मा हूँ शरिरहरु हुन् चार घरिका ।
विचार्मा टिक्तैनन् विषय पनि छन् स्वप्न सरिका ॥
भनी जान्न्या जन्ले दृढ गरि लिया भक्तिरसले ।
न बिर्स्यो ई मैले यति कहि दियाँ प्रीतिवशले ॥ ७१ ॥

---

१ होमनाथ—हो यो ।
२ भारतजीवन—जो ।
३ भारतजीवन (क)—पर्‍यो ।
४ होमनाथ—विनु ।

उस् जन्ममा अधिक भक्ति गर्‍यौ र ऐल्हे ।
दर्शन् दियाँ न तर झट्ट म मिल्छु कैल्हे ॥
मेरो स्वरुप् र इ वचन् अबं सम्झि लीया ।
छुट्नन् ति दुःख तिमिलाइ जती त थीया ॥ ७२ ॥

लेखै हवैन अब कर्म पनी गरीन्या ।
रस्ता कह्याँ भवसमुद्र सहज् तरीन्या ॥
मेरो स्वरुप् र इ वचन् जति सम्झि लिन्छन् ।
सब् कर्मपाश् ति सहजै सित काटि दिन्छन् ॥ ७३ ॥

यस्ता वचन् प्रभुजिका सुनि खूसि मन्ले ।
छोडिन् जती छ अभिमान् पनि ताहिं तिन्ले ॥
सुग्रीवको पनि गयो अभिमान ताहाँ ।
रामको कृपा हुन गया पछि टिक्छ काहाँ ॥ ७४ ॥

हूकुम् भयो प्रभुजिको तहिं मित्रलाई ।
हे मित्र सुग्रिव ! जलाउ इ वालिलाई ॥
क्रीया गरी कन शरिर् गर शुद्ध ऐल्हे ।
सब् काम छोडि कन यै गर आज पैल्हे ॥ ७५ ॥

---

१ बंबई—सब ।    २ नेपाल—थियो ।

हूकुम् भयो र तब वालि लगी जलाया ।
क्रीया गरी सकि ति सुग्रिव ताहि आया ॥
अर्पण् गरी सकल राज् प्रभुका चरण्मा ।
सेवक् बनी कन म बस्छु भनी शरण्मा ॥ ७६ ॥

सुग्रिव्लाइ हुकुम् भयो प्रभुजिको जो हौ तिमी सो म हूँ ।
जाऊ आज र गादिमा बस म ता याहीं वनैमा रहूँ ॥
गाऊँमा घरमा बस्तैन म भनी मेरो प्रतिज्ञा छ यो ।
जानन् लक्ष्मण ता सँगै घर पनी भाई गया भै गयो ॥ ७७ ॥

वर्षाकाल् विति सक्छ यो जब तसै सीताजिको खोज् ग या ।
येती मर्जि दियो र सुग्रिव बहुत् आनन्दसागर् पऱ्या ॥
लक्ष्मण्जी पनि रामका हुकुमले सुग्रीवका साथ् गया ।
सुग्रिव् गादि विषे बस्या पछि फिरी दाखिल् प्रभू ध्यैं भया ॥ ७८ ॥

राम्ले ताहिं थियो प्रवर्षण गिरी तेस्का शिखर्मा चढी ।
देख्या सुन्दर एक् गुफा स्फटिकको ताहीं गराया मढी ॥
फल् फुल् ताहिं खचित् थियो नजिक मे थीयो तलाऊ पनी ।
देख्या मन् खुसि भो तहाँ प्रभुजिको बस्न्यै जगा हो भनी ॥ ७९ ॥

---

१ नेपाल—बसैन ।
२ हामनाथ—भयो ।
३ नेपल—पश्चिको ।
४ हामनाथ—बन्या ।
५ पैजन—बस्दा ।

वर्षाकाल तलक् रह्या प्रभु तहाँ पर्थ्यो बखत्मा झरी ।
जन्तू पुष्ट थिया सबै ति वनका खायेर घाँस् पेट् भरी ॥
बस्थ्या श्रीरघुनाथका वरिपरी खुप् ध्यान् प्रभूमा धरी ।
ध्यान् जन्तूहरुको विचार् गरि तहाँ खूसी रहन्थ्या हरी ॥ ८० ॥

लक्ष्मण्ले तहिं बिन्ति एक् दिन गर्‍या हे नाथ्! पुजाको विधान्।
पाऊँ सुन्न हुकुम् हवस् खुसि भई कुन् हो करूणानिधान् ॥
ब्रह्मा व्यास् अरु नारदादिहरु सब् भन्छन् पुजाले सरी ।
आर्को तर्न उपाय छैन जनको खुस् छन् पुजैमा हरी ॥ ८१ ॥

यस्तो सूनि गयो र मन् चरणमा सोध्याँ पुजाको विधान् ।
साँचो तत्त्व बताउन्या हजुर झैं को छन् दयाका निधान् ॥
यस्ता लक्ष्मणका वचन् सुनि तहाँ पूजा विधी हो जती ।
सब् संक्षेप् रितले कह्या प्रभुजिले लक्ष्मण् भया खुस् अती ॥ ८२ ॥

वर्षाकाल् यही रीतले तहिं बित्यो वार्ता कथाको गरी ।
समझ्या इष्ट सिताजिलाइ र विलाप् फेर् गर्न लाग्या हरी ॥
किष्किन्धापुरिमा यसै बिच महाँ मन्त्री हनूमानले ।
सुग्रिव् सीत सिताजि खोज् गर भनी बिन्ती गर्‍या ज्ञानले ॥ ८३ ॥

---

१ भारतजीवन—नजर् ।

लाग्या गर्न विलाप् अनेक् तरहले लीला गरी राम् उसै ।
भन्छन् छन् ति सिता कहाँ अझ पनी लागेन पत्ता कसै[1] ॥
याहाँ छन् ति सिता भनी कन खबर् पाऊँ त जाऊँ तहाँ ।
ल्याऊँ अम्रित झैं सिता कन यहाँ पाऊँ खबर् पो कहाँ ॥ ८८

हे भाई ! सुन जो छ आज इ सिता हर्न्या म तेस्को सबै ।
कूलै भस्म गराउन्या छु करुणा राख्दैन उस्मा कवै[2] ॥
येती बात् तहिं भाइ सीत गरि फेर् सीताजिका शोक् धरी[3] ।
लाग्या गर्न विलाप् अनेक् तरहले त्रैलोक्यका नाथ् हरी ॥ ८९ ॥

हे सीते ! कसरी म देखि पर भै बस्छ्यौ तिमी छौ कहाँ ।
प्राणै थाम्न कठिन् भयो म विनु ता आपत् भया हुन् तहाँ ॥
तिम्रो भेट न पाउँदा म कन ता ई चन्द्र सूर्यै बन्या ।
तिम्रो ता गरुँ क्या बखान्[4] तिमि त झन् छ्यौ दुष्टका पास् भन्या॥ ९० ॥

सुग्रिव् आज कृतघ्न झैं हुन गया आयो शरद्काल् पनी ।
सुतैं छैन सिताजिलाइ अझ तक् खोज् गर्नु पर्लो भनी ॥
मार्छु सुग्रिव दुष्टलाइ पनि फेर् वाली सरीको गरी ।
लक्ष्मण्ले प्रभुका वचन् सुनि गऱ्या बिन्ती अगाडी सरी ॥ ९१ ॥

---

१ होमनाथ—लागे ।
२ नेपाल, भारतजीवन—कवै ।
३ होमनाथ—गरी ।
४ पेजन—बयान् ।

हे नाथ् ! आज मलाइ बक्सनु हवस् हूकुम् म मार्छ्रे गई ।
लक्ष्मण्का इ वचन् सुनेर रघुनाथ् अत्यन्त खूसी भई ॥
भन्छन् भाइ ! न मार आज बहुतै हप्काउ जाऊ तहाँ ।
मारी हाल्न त योग्य छैन तर खुप् चेताइ आऊ यहाँ ॥ ९२ ॥

हूकुम् यो प्रभुको सुनी कन तहाँ लक्ष्मण्जि जल्दी गया ।
सीतानाथ् नरको लिला गरि विलाप् खुप् गर्न लाग्दा भया ॥
किष्किन्धापुरि पौंचि लक्ष्मणजिले टङ्कार् धनूको गन्या ।
पत्थर् वृक्ष उठाइ वानरहरू कोही अगाडी पन्या ॥ ९३ ॥

सब् वानर् कन नष्ट गर्दछु भनी लक्ष्मणजिले वाण् धन्या ।
अङ्गद् आइ उठाइ वानरहरू जल्दी चरण्मा पन्या ॥
अङ्गद् सीत वहुत् प्रसन्न भइ झट् ताहाँ अहाया पनी ।
जाऊ देउ खबर् अगाडि तिमिले लक्ष्मण्जि आया भनी ॥ ९४ ॥

अङ्गद् गै कन त्यो खबर् जब दिया सुग्रीवलाई तहाँ ।
जल्दी सुग्रिवले हुकुम् पनि दिया लौ जाउ ल्याऊ यहाँ ॥
अङ्गद्लाइ सँगै लियेर हनुमान् चाँडै चरण्मा परी ।
लक्ष्मण्लाइ बुझाइ ल्याउ तिमिले सब् रीस शान्ती गरी ॥ ९५ ॥

---

१ नेपाल—पेर् ।
२ बदई—वेही ।
३ होमनाथ—मन्दा ।

यस्तो सुग्रिवको वचन् सुनि तहाँ सोही बमोजिम् गरी ।
पाऊमा परि वाहुमा धरि लिया ल्याया बहुत् खुस् गरी ॥
हुकुम् सुग्रिवको सुनी कन तहाँ ताराजि चाँडै गइन् ।
लक्ष्मण्लाइ बुझाइ खुस् गरुँ भनी खुप् विन्ति गर्दी भइन् ॥ ९६ ॥

लक्ष्मण् सुग्रिवको भयो जब त भेट् सुग्रिव् चरण्मा पऱ्या ।
लक्ष्मण्ले पनि ताहिं सुग्रिवजिको सातो कुराले हऱ्या ॥
वाली झैं हुन मन् छ की भनि जसै लक्ष्मण्जिले बात् गऱ्या ।
लक्ष्मण्लाइ बुझाउना कन तहाँ जल्दी हनूमान् सऱ्या ॥ ९७ ॥

लक्ष्मण्जी पनि कामले बुझि गया बातन्चित् खुसीका गरी ।
फिर्नाको मतलब् गऱ्या प्रभु थिया जाहाँ जगन्नाथ् हरी ॥
लक्ष्मण्का सँग लागि सैन्य पनि ली सुग्रीव खुस् भै गया ।
जाहाँ श्रीरघुनाथ् थिया तहिं सबै दाखिल् क्षणैमा भया ॥ ९८ ॥

देख्या श्रीरघुनाथलाइ र परै रथ् देखि उत्रेर फेर् ।
लक्ष्मण् सुग्रिव पाउमा परि गया लागेन एक् छीन बेर् ॥
राम्ले सुग्रिवलाइ मित्र ! भनि खुप् आलिङ्गनादी गरी ।
सोधपुछ् गर्नु भयो बहुत् खुसि हुँदै आफैं अगाडी सरी ॥ ९९ ॥

लाग्या सुग्रिव बिन्ति गर्न रघुनाथ् ! मैले त सेना पनी ।
ल्यायाँ विर्हरु छन् अनेक् तरहका छन् इन्द्र तुल्यै पनी ॥
ई सब् स्वामितका निमित्त खुसि भै प्राणै दिन्या छन् जसो ।
हूकुम् हुन्छ हवस् यहाँ हजुरको गर्छन् ति ऐल्है तसो ॥१००॥

खूसी भै रघुनाथको हुकुम भो हर्षाश्रुधारा परी ।
हे सुग्रीव सखे ! इ वानरहरु जाउन् दिशा दस् भरी ॥
जाहाँ छन् ति सिता तहीं पुगि खबर् ल्याउन् भनी रामको ।
हूकुम् पाइ् पठाइ वानरहरू उर्दी दिया कामको ॥१०१॥

जाऊ विर्हरु सब् दिशा दस विषे सीताजि मिल्छिन् कहाँ ।
पत्ता लाइ सिताजिको खबर ली सब् वीर आऊ यहाँ ॥
मैन्हा दीन विताइ एक् रति खबर् केही न पाई त जो ।
ढिल् गर्न्यौं तसलाइ ता म सहजै मार्न्या छु मन्या छ त्यो ॥१०२॥

यस्तो जल्दि हुकुम् गरी अरु दिशा वानर् पठाया अवर् ।
दक्षिण् तीर त खुप् वडा विरहरू छानी पठाया जबर् ॥
अङ्गद्लाइ र जाम्बवान् र हनुमान् विर् नल् सुषेण् फेर् शरभ्
मैन्द द्विविदैं आठ् पठाइ प्रभुका पासमा रह्या एक् फगत ॥१०३॥

---

१ होमनाथ—गरी ।
२ पेजन—न्हौं ।
३ पेजन—गरौं ।
४ प्रथम संस्करणमा "मैदं द्वीविध" भन्ने पाठ थियो । "भारतजीवन' हेर्दा "मैन्द्वीर् विर" भन्ने पाठ पर्‍यो । तर संस्कृत रामायण अनुसार "मैन्दद्विविद" भन्ने पाठ नै शुद्ध ठहरिन्छ । आठ वानरलाइ सुग्रीवले दक्षिण दिशा नि पठोइसाथियो । ती आठ वानरको नाम संस्कृत रामायण अनुसार यस्तो छ ।

दक्षिणां दिशमत्यर्थं प्रयत्नेन महाबलान् ॥
युवराज जाम्बवन्तं हनुमन्त महाबलम् ।
नलं सुषेण शरभ मैन्द द्विविदमेव च ॥

हूकुम् पाइ इं आठ विर्हरु पनी झट् जान लाग्या जसै ।
हात्मा औंठि लियेर एक् हुकुम भो राम्चन्द्रजीको तसै ॥
जाऊ काम् पनि साधि आउ हनुमान् ली जाउ औंठी पनी ।
मेरो नाम् यहि औंठिमा छ र दियाँ सीताजि चीन्लिन् भनी ॥१०४॥

यो काम् सिद्ध गराउन्या त तिमि छौ तिम्रो छ यो बल् भनी ।
चीह्नयाँको छु तबै त भन्छु म शुभै हुन्या छ रस्ता पनी ॥
येती श्रीरघुनाथको पनि हुकुम् पाया र औंठी लिया ।
खूसी भै हनुमानले प्रभुजिमा सम्पूर्ण तन् मन् दिया ॥१०५॥

अङ्गद् विर् हनुमान्हरू हुकुमले दक्षिण् दिशामा गया ।
सर्वत्रै पृथिवी ढुँडी ढुँडि सबै घुम्दै ति जाँदा भया ॥
एक् दिन् विन्ध्यगिरी विषे वन महाँ देख्या र राक्षस् जसै ।
रावण् हो कि भनी मुठी मुठि कसी मार्‍या कसैले तसै ॥१०६॥

रावण् होइन यो त जाउँ भनि फेर् अर्को वनैमा गई ।
ढुँढ्‍या प्यास बढ्यो र जल् पनि ढुँडी हिंड्‍या ति आकुल् भई ॥
गूफा देखि त प्वाँख् चिसा गरि गरी हाँस् निस्कँदा देखि तेस् ।
गूफा भित्र पस्या सबै विरहरू देख्या बहुत वस्ति वेस् ॥१०७॥

---

१ ऐजन—ति ।
२ सबै रामप्पाना "चिन्लिन्" भन्ने पाठ छ । सो निरर्थक हुँदा माथीको पाठ दिय्यो । स०
३ होम्नाथ—रुबबै ।
४ ऐजन—पसि बनै ।
५ ववई—मबैले ।
६ होम्नाथ—सोत्न् ।

ठण्डा जल् सितका तलाउ पनि धेर् सब वृक्ष फल् फुल् भरी ।
घर् छन् धेर् घरमा छ चिज् पनि अनेक् हीराजवाहेर् धरी ॥
गुल्जार् देख्नु भन्या मनुष्यहरु ता एक् देख्नु नाहीं कहीं ।
एक् योगीनि स्वयम्प्रभा कन जहाँ ध्यान् गर्दि देख्या तहीं ॥१०८॥

सोधिन् योगिनिले प्रणाम् तब गऱ्या कुन् काम आयौ यहाँ ।
क्या मन्सुब् छ बताउ फेर् अब उपर् जानू छ इच्छा कहाँ ॥
यस्ता योगिनिका वचन् सुनि तहाँ बोल्या हनूमानले ।
आयों आज यहाँ सबै यति जना केवल् जलै खानले ॥१०९॥

काम् यै हो यहि काम गर्नु छ भनी विस्तार् सुनाया जसै ।
साह्रै खुस् हनुमानका वचनले हूँदी भइन् ती तसै ॥
बोलिन् फल् फुल खाउ जल् पनि पिई फर्केर आऊ यहाँ ।
मेरो नाम बताइ आज त म ता जान्छु प्रभू छन् जहाँ ॥११०॥

यस्ता योगिनिका वचन् सुनि गया जल्पान् गरी फेर् पनी ।
आया योगिनिले गरिन् सब कुरा राम्का इ दुत् हुन् भनी ॥
हेमाकी सखि हूँ सखी गइ गइन् उन्का वचन्ले यहाँ ।
धेरै वर्ष वसी प्रभू भजि लिंदा ऐल्हे कृतार्थ भयाँ ॥१११॥

---

१ नेपाल—भरी ।  २ बबर—पीनले ।

भन्थिन् राम् अवतार् हुन्याछ हरिको हन्याँ छ रावण् सिता ।
खोजन्या वानर आउनन् तहिँ तलक् याहीँ रहू तीमि ता ॥
वानर्को रघुनाथको गरि पुजा यै ब्रह्मलोक् आउली ।
जान्छू आज म ता तिमी बसि रहू क्यै काल् पछी आउली ॥११२॥

यस्तो अर्ति दिई गइन् सङ्गिनिन्यू जुन् ब्रह्मलोक् हो वहाँ ।
नाच्तैमा शिव खुस् हुँदा अघि दिया यो स्थानं बस्ती यहाँ ॥
पुत्री हुन् उ त विश्वकर्मकि म हूँ गन्धर्वकन्या सबै ।
विस्तार् आज कह्याँ म जान्छु खुसि भै जाहाँ प्रभू छन् अबै ॥११३॥

आँखा चिम्ल पुन्याइ दिन्छु सहजै रस्ता विषे क्षण् महाँ ।
जाऊ तीमिहरू पनी भनि सहज् पौँचाइ रस्ता महाँ ॥
श्रीराम्चन्द्रजि थ्यैं ति योगिनि गइन् वानर् पुग्या रस्तिमा ।
पौँचिन् योगिनि रामको कुटि जहाँ थीयो उसै बस्तिमा ॥११४॥

रामको स्तुति गरिन् र वर् दिनु भयो जाऊ र बद्री महाँ ।
मेरो ध्यान् गरि यो बिताउ र शरिर् पाउली परम्धाम् तहाँ ॥
जो तिम्रा मनमा छ त्यो सब पुगोस् यस्तो त वर् ली गइन् ।
बद्रीमा गइ रामका वचनले ससार तर्दी भइन् ॥११५॥

---

१ छोमनाथ—पाउली । अध्यात्मरामायण— यतासि भवन विष्णोर्योगिगम्य सनातनम् ।

२ नेपाल—थ्यात ।

३ ऐजन—तीरस्य ।

ठण्डा जल् सितका तलाउ पनि धेर् सब वृक्ष फल् फुल् भरी ।
घर् छन् धेर् घरमा छ चिज् पनि अनेक् हीरा जवाहेर् धरी ॥
गुल्जार् देख्नु भन्या मनुष्यहरु ता एक् देख्नु नाहीं कहीं ।
एक् योगीनि स्वयम्प्रभा कन जहाँ ध्यान् गर्दि देख्या तहीं ॥१०८॥

सोधिन् योगिनिले प्रणाम् तव गर्‍या कुन् काम आयौ यहाँ ।
क्या मनसुब् छ बताउ फेर् अब उपर् जानु छ इच्छा कहाँ ॥
यसता योगिनिका वचन् सुनि तहाँ बोल्या हनूमानले ।
आयौं आज यहाँ सबै यति जना केवल् जलै खानले ॥१०९॥

काम् यै हो यहि काम गर्नु छ भनी विस्तार् सुनाया जसै ।
साहै खुस् हनुमानका वचनले हूँदी भइन् ती तसै ॥
बोलिन् फल् फुल खाउ जल् पनि पिई फर्कैर आऊ यहाँ ।
मेरो नाम बताइ आज त म ता जान्छु प्रभू छन् जहाँ ॥११०॥

यसता योगिनिका वचन् सुनि गया जलपान् गरी फेर् पनी ।
आया योगिनिले गरिन् सब कुरा रामका इ दुत् हुन् भनी ॥
हेमाकी सखि हूँ सखी गइ गइन् उनका वचन्ले यहाँ ।
धेरै वर्ष वसी प्रभू भजि लिंदा ऐल्हे कृतार्थ भयाँ ॥१११॥

---

१ नेपाल—भरी। २ वर्ष—पीनर्‍ने।

भन्थिन् राम् अवतार् हुन्याछ हरिको हर्न्या छ रावण् सिता ।
खोजन्या वानर आउनन् तहिँ तलक् याहीँ रहू तीमि ता ॥
वानरको रघुनाथको गरि पुजा यै ब्रह्मलोक् आउली ।
जान्छू आज म ता तिसी बसि रहू क्यै काल् पछी आउली ॥११२॥

यसतो अर्ति दिई गइन् सङ्गिनिज्यू जुन् ब्रह्मलोक् हो वहाँ ।
नाच्नैमा शिव खुस् हुँदा अघि दिया यो स्थानं बस्ती यहाँ ॥
पुत्री हुन् उ त विश्वकर्मकि म हूँ गन्धर्वकन्या सबै ।
विस्तार् आज कहाँ म जान्छु खुसि भै जाहाँ प्रभू छन् अबै ॥११३॥

आँखा चिम्ल पुग्याइ दिन्छु सहजै रस्ता विषे क्षण् महाँ ।
जाऊ तीमिहरू पनी भनि सहज् पौंचाइ रस्ता महाँ ॥
श्रीरामचन्द्रजि थ्यैं ति योगिनि गइन् वानर् पुग्या रस्तिमा ।
पौंचिन् योगिनि रामको कुटि जहाँ थीयो उसै बस्तिमा ॥११४॥

रामको स्तुति गरिन् र वर् दिनु भयो जाऊ र बद्री महाँ ।
मेरो ध्यान् गरि यो बिताउ र शरिर् पाउली परम्धाम् तहाँ ॥
जो तिम्रा मनमा छ त्यो सब पुगोस् यसतो त वर् ली गइन् ।
बद्रीमा गइ रामका वचनले संसार तर्दी भइन् ॥११५॥

---

१ होमनाथ—पाउली । अध्यात्मरामायण—
यतासि भवनं विष्णोर्योगिगम्य सनातनम् ।
२ नेपाल—थान ।
३ पैजन—तीरमा ।

सीता खोज्न भनेर वानरहरू फिर्‍या सबै वन् महाँ ।
सीतालाइ न पाउँदै विति गयो घेर् काल[1] एक् दिन् तहाँ ॥
अङ्गद्ले अति शोक गऱ्या अब सहज् मार्छन् सबैको[2] गयो ।
प्यारो प्राण गरौं कसो[3] अब मऱ्यौं बाँच्नू यहीं तक् भयो ॥११६॥

सुग्रिव्ले त मलाइ मार्नु छ सहज् पाया निहूँ यो पनी ।
मार्छन् निश्चय शत्रु[4] जानि अहिले यो शत्रुको बिज् भनी ॥
केवल् रामकृपा हुँदा अघि बच्याँ ऐल्हे त राम्ले पनी ।
दिन्छन् निश्चय मार्नलाइ मतलब् खोजेन सीता भनी ॥११७॥

अङ्गद्का इ वचन् सुनी कन तहाँ कै[5] बिन्ति यो पार्दछन् ।
हे साहेप ! यहीं बसौं यहिं बस्या कुन् पाठले मार्दछन् ॥
अङ्गद्का अरु वानरादिहरुका सून्या र कूरा तहाँ ।
बोल्या श्रीहनुमानले किन बहुत् छोटा गऱ्यौ वात् यहाँ ॥११८॥

सुग्रिव्का प्रिय छौ अवश्य भगवान् राम्चन्द्रजीका पनी ।
साँचो भन्छु म बेस् कुरो हजुरमा यस्तो छ कारण् भनी ॥
भूभार् हर्न भनेर राम अवतार् आदीपुरुष्को भयो ।
कस्को सक् छ सिताजि हर्न नहिं ता इच्छा प्रभू कै छ यो ॥११९॥

---

१ नेपाल—घेर् काल् र ।
२ होमनाथ—सबैका ।
३ ऐजन—कसो गरौं ।
४ नेपाल—वैरि ( वैरि ? ) ।
५-ऐजन—भरी ।

मानिस्को अवता भयो प्रभुजिको सेवक् त वानर् भई ।
गर्छौं सेवन भक्तिले प्रभुजिका केवल् हुकुम्मा रही ॥
जान्याछौं पछि धाममा पनि सँगै यो जान मन्ले यहाँ ।
क्या गर्छौं मनमा कुतर्क हरिको रिस् छैन कस्तै महाँ ॥१२०॥

यस्ता बात् हनुमानका सुनि बुझ्या अङ्गद् र खूसी भई ।
विन्ध्याचल् गिरिका कुनाकुनि समेत् सम्पूर्ण खोज्दै गई ॥
पौंच्या क्षारसमुद्रका[1] तिर महाँ पर्वत् थियो एक् तहाँ ।
तेस्को नाम महेन्द्र हो नजिकमा देखिन्छ सागर् जहाँ ॥१२१॥

पृथ्वीमा न मिलिन् सिता त जलमा जान्या छ बाटो कतै ।
खोजौं जाउँ भन्या सक्यौं पृथिवि सब् पायौंन सीता कसै ॥
फर्कौं जाउँ भन्या पनी अब सहज् मार्छन् त चाहीं यहीं ।
मर्नू आज निको भनेर तिरमा बन्दर्[2] बस्या सब् तहीं ॥१२२॥

सम्पाती अति वृद्ध गृद्ध वनमा थीया ति निस्क्या जसै ।
हेर्‍या दृष्टि फिराइ तेस् तिर महाँ देख्या ति वानर् तसै ॥
बोल्या वाक्य पनी म भर्छु अब पेट् पायाँ अहारा भनी ।
अङ्गद् विर्हरुले सुन्या र इ वचन् साह्रै डराया पनी ॥१२३॥

---

१ नेपाल—क्षीरसमुद्र ।
२ होमनाथ—पर्वी ।
३ पैजन—वानर् ।

लाग्या भन्न सबै ति वानर हरू आये छ हाम्रो त काल् ।
मर्छौं आज अवश्य मार्छ यसले यो गृद्धको हेर चाल् ॥
क्या बात् भाग्य जटायुका प्रभुजिको प्यारो हुन्या काम् गरी ।
ठाकुर्लाइ रिझाइ पार् पनि गया संसारसागर् तरी ॥१२४॥

व्यर्थै हामि त गृद्धका मुख विषे सब् पर्न आयौं यहाँ ।
येती वानरका वचन् सुनि तसै सम्पाति बोल्या तहाँ ॥
हे विर् हो ! न डराउ आज तिमिले प्यारो सुनायौ कुरा ।
मेरै भाइ जटायु हो कहु खबर् तेस्को त सप्पै कुरा ॥१२५॥

अङ्गद् विर्हरूलाइ निर्भय दिई येती भन्याथ्या जसै ।
सब् वृत्तान्त बताइ अङ्गदजिले विस्तार् सुनाया तसै ॥
सम्पाती तहिं भन्दछन् म कन लौ लैजाउ सागर् महाँ ।
दिन्छु आज जटायुलाइ जलदान् चाँडो म ऐल्हे तहाँ ॥१२६॥

सीताको म बताउँला सब खबर् स्नान् अञ्जलीदान् गरी ।
ई बात् सूनि उचालि झट् लगि दिया सम्पातिले स्नान् गरी ॥
दीया अञ्जलिदान् जसै फिरि उहीं ल्यायेर राखी दिया ।
सम्पाती खुसि भै सबै कहि दिया आपर्न्ति देख्तै थिया ॥१२७॥

---

१ भानुजीवन—काल ।
२ भानुजीवन—कुरो ।
३ हीरानाथ—पुग । भानुजीवन—कुरो ।
४ भानुजीवन, नेपाल—आपत्त ( आपत् त ? ) स०

हे विर् हो ! म त गृद्ध हुँ र म सिता देख्छु नजर्ले पनी ।
याहीं छन् यहि भेप् छ येति सँग छन् यसतो छ चाला भनी ॥
भन्छु सब् तिमिलाइ चार सय कोस् जो कुद्द सक्छौ यहाँ ।
सो लङ्का पनि पुग्दछौ उति कुधा पौंचिन्छ लङ्का महाँ ॥१२८॥

लङ्कामा ति सिताजि छन् तहिं गया मिल्छिन् सिताजी जहाँ ।
गाह्रो चार् सय कोस कुद्द छ तहीं जाऊ न जाऊ तहाँ[2] ॥
रावण्ले लगि भित्रि गुप्ति[3] वनमा राख्याकि छन् बेस् गरी ।
पौंची भेट् गर जान सक्छ तिमिमा को यो समुद्रै तरी ॥१२९॥

अश्शोक्का वन मित्र वृक्ष छ असल् एक् शिंशपाको तहीं ।
सीता छन् तहिं भेट् हुन्या छ तहिं लौ जाऊ गयो काल् यहीं ॥
क्यारूँ रावणलाइ मार्न म सहज्[5] मार्न्याँ थियाँ हो र को ।
साक्षात् सूर्यजिका कठोर् किरणले प्वाँखै डढ्या सब् र पो ॥१३०॥

जाऊ चार् सय कोस कुद्द सकन्या कुन् विर् छ सागर् महाँ[6] ।
सीताको समचार् खबर् बुझि सहज् फर्केर आऊ यहाँ ॥
यो समचार बताइ फेर् खुसि भई आफ्नू हवाल् सब् कह्या ।
जुन् रितले अघि प्वाँख् डढ्या र विपती पाई अनेक् ताप् सह्या ॥१३१॥

---

१ सोमनाथ—तही ।
२ ऐजन—कहीं ।
३ ऐजन—भीत्र गुप्त ।
५ ऐजन—सहजै ।
६ भारतजीवन, नेपाल—सो गै तहाँ ।
अध्यात्मरामायण—उल्लङ्घ्य सिन्धुं शतयोजना- [illegible]



सीता लाई हनुमान् ठूलो रूप देखाउँछन्

# श्रीसुन्दरकाण्ड

तर्छु क्षारं[1] समुद्र आज सहजै भन्न्या इरादा धरी ।
श्रीराम्का चरणारविन्द मनले अत्यन्त चिन्तन् गरी ॥
भन्छन् विर्हरूलाइ ताहिं हनुमान् हे वीर हो ! पार् तरी ।
सीताजी कन भेट्दछु म अहिले जान्छु बडो वेग् धरी[2] ॥ १ ॥

पापी जन् पनि रामका स्मरणले संसार पार् तर्छ ता ।
राम् कै काम निमित्त औंठि सँग ली जान्छु दुतै हूँ म ता ॥
क्या डर् क्षारं[3] समुद्र तर्न सहजै पौचन्छु लङ्का भनी ।
चारै पाउ जमिन् विषे धसि कुद्या हेर्दै तमासा पनी ॥ २ ॥

दक्षिण् तरफ् मुख गरी कन कुद्न बस्ता ।
ऊपर् नजर् दि अघिका दुइ पाउ धस्ता ॥
सोझो गराइ कन पॉटि कुद्या जसै ता ।
वायू सरी हुन गया हनुमान् तसै ता ॥ ३ ॥

---

१ नेपाल—क्षीर ।
२ होमनाथ—गरी ।
३ नेपाल—क्षीर ।

आकाश्मार्ग गरी कुदेर हनुमान् उडथ्या ति आकाशमा ।
सीताजी कन भेटि फर्कि कन फेर् रामचन्द्रका पासमा ॥
पुग्न्या अक्कल वल् छ छैन इनको वूझौं सबै बल् भनी ।
इन्द्रादीहरुले खटाइ सुरसा जल्दी पठाया पनी ॥ ४

जल्दी गै सुरसा अघिल् तिर बसिन् साम्ने हनूमानका ।
क्या भन्छन् हनुमान् भनेर खुसि भै कूरा गरिन् खानका ॥
भोकी धेर् दिनकी म खोजि हिंडथ्याँ क्या खाँ अहारा भनी ।
पायाँ वह्ल यहाँ[1] मिल्यौ तिमि त एक् साहै भयाँ खुस् पनी ॥ ५ ॥

आऊ लौ पस मूखमा भनि तसै[2] बोल्या हनूमान् तसै ।
भन्छन् आज सिता न भेटि कन ता पस्तीन मुख्मा कसै ॥
सीता भेटि म फर्कुंला र रघुनाथ्ज्यूका हजुर्मा गई ।
विस्तार् बिन्ति गरेर आइ पसुँला तिम्रो अहारा भई ॥ ६ ॥

यसतौ[3] बात् सुनि भन्दछिन् ति सुरसा मेरा मुखैमा पसी ।
निस्की जाउ नहीं भन्या म वलले पक्रेर दाह्रा धसी ॥
माछ्रै येति भनिन् र लौ तब यहाँ मुख् बाउ चाँडो भनी ।
चार् कोस्को त शरिर् गरी कन वस्या आफू हनूमान् पनी ॥ ७ ॥

---

१ सोमनाथ—यही।
२ रेजन—जसै।
३ भारतजीवन, नेपाल—यस्तो।

चार् कोसका हनुमान देखि सुरसा बिस् कोसको मुख् गरिन् ।
चालिस् कोस हनुमान् भया र असि कोस मुख् फेरि जल्दी धरिन्॥
जल्दी फेर् हनुमानले छबिस कोस्को रुप् गराई बस्या ।
फेर् दूई सय कोस् मुखै जब गरिन् अङ्गुष्ठ झैं भै पस्या ॥ ८ ॥

निस्क्या जल्दि र भन्दछन् ति हनुमान् हे देवि ! मुखमा पसी ।
निस्क्यॉं जान्छु म ता अवश्य अब ता बन्दैन काम् ता बसी ॥
अक्कल् बल् सितका वचन् जब सुनिन् यस्ता हनूमानका ।
आफ्नू सत्य कुरो तसै सब कहिन् छाडिन् कुरा खानका ॥ ९ ॥

सक्छौ काम् तिमि साधि आउ हनुमन् ! यो बल् छ तिम्रो भनी ।
चीह्नथॉं भन्छु म इन्द्रका हजुरमा तिम्रो पराक्रम् पनी ॥
बल् बुझ्नै भनि इन्द्रका हुकुमले आया कि ता हूँ भनी ।
खुस् भै स्वर्ग विषे गइन् ति सुरसा कूवा हनूमान् पनी ॥ १० ॥

जस्ले सागर नाम् धर्‍या म कन सो राजा सगर् जो गया ।
तिन्का वंश महॉं विभूषण सरी श्रीराम राजा भया ॥
तिन्का काम निमित्त आज हनुमान् जान्छन् इ लङ्का महॉं ।
मैनाक् पर्वत ! निस्क जाउ तिमि गै विश्राम् गराऊ तहॉं ॥ ११ ॥

---

१ भारतजीवन, होमनाथ—कुरा । २ होमनाथ—भर्‍यो ।

शाक्या हुन् हनुमान् बिसाइ[1] फल फुल् खाउन् र जाउन् भनी ।
भन्दा सागरका वचन् सुनि तहाँ निस्क्या ति मैनाक् पनी ॥
आर्को एक मनुष्यको स्वरुप ली हात् जोरि बिन्ती गऱ्या ।
आई फल्फुल खाइ जाउ हनुमन् ! भन्दै अगाडी सऱ्या ॥ १२

आज्ञा सागरको हुँदा चरणमा आयाँ म ऐल्हे भनी ।
मैनाक्ले यति बिन्ति बात् जब गऱ्या बोल्या हनूमान् पनी ॥
राम्को काम् न गरी बसेर कसरी खान्छु म जान्छु यसै ।
हातले छुन्छु म लौ भनेर खुसि भै छोयेर कूद्या तसै ॥ १३

केही दुर् हनुमान् पुग्या पछि तहाँ एक् सिंहिका राक्षसी ।
छाया पक्रि उ जन्तु खैंचि बलले खान्थी जलैमा बसी ॥
छाया पक्रि उ ताम्र लागि हनुमान्ज्यूको गती बन्द भो ।
कस्ले बन्द गऱ्यो गती भनि दिशा दस्मा तसै दृष्टि गो ॥ १४ ॥

देख्या तल् तिर दृष्टि दी कन तहाँ जस्सै नजर्मा परी ।
एकै चोट् दुइ लात् दिया र सहजै घुस्सुक्क ताहीं मरी ॥
ताहाँ देखि कुदी गया र हनुमान् पौंच्या जसै तीरमा ।
लङ्कापूरि तहाँ त्रिकूट गिरिका देख्या उपर् सीरमा ॥ १५ ॥

---

१ नेपाल—बसाइ ।

वरि परि तहिं तीरैमा पनी वृक्ष फल् फुल्[1] ।
भरि छ जउन वन्मा गर्दछन् पक्षिले गुल् ॥
भ्रमरहरु लताका फूलमा हल्लि हल्ली ।
घुतुनु घुनुनु गर्दै हिंड्दछन् वल्लि वल्ली ॥ १६ ॥

नजर वरि परीको[2] जो छ शोभा नजर् भो ।
त्रिकुट गिरि उपर्का[3] पूरिमा फेर् नजर् गो ॥
वरि परि परखाल् छन् बीच बिच्मा छ खावा ।
सहज त अरुले ता गर्न को सक्छ दावा ॥ १७ ॥

अति तखत पऱ्याको खुप् अगम् देखि लङ्का ।
यहि घडि पसि जाँ की राति जाँ येति शङ्का ॥
गरि कन ठहरांया[4] याहिं बस्छु रै[5] राती[6] ।
सहज सित म जाँला जान ता राति जाती ॥ १८ ॥

तहि बसि यति गम्ले बाँकि दिन् सब् बिताई ।
दिन बिति जब रात् भो जान पाऊ चलाई ॥
स्वरुप पनि ति सानू ली पस्याथ्या जसै ता ।
दगुरि नजिक आइन् लङ्किनी पो तसै ता ॥ १९ ॥

---

१ होमनाथ—वरि परि ताहिं तिर्मा वृक्ष फल् फुल् भरी छन् । जउन वन महाँ ता गर्दछन् पक्षि गुल् उन् ॥ नेपाल—गर्दछन् पक्षि गुल् गुल् । बनई—गर्दछन् पक्षिले भुन् ।
२ भारतजीवन (क)—वरि परिकी ।
३ भारतजीवन, नेपाल—उपर्को ।
४ होमनाथ—ठहराई ।
५ बनई—म ।
६ भारतजीवन (क) ताती—यो ता छापको भूल हो कि, स० ।

को हो आज मलाइ् केहि न गनी यो भित्र जान्या भनी।
चोरै हो भनि लात् उठाइ् रिसले एक् चोट् त हानिन् पनी ॥
जल्दी वाम मुठी उठाइ सहजै ठोक्का जमिन्मा परिन्।
छाडै ताहि रगत् गिराइ झटपट् उठेर विन्ती गरिन् ॥ २० ॥

लकापूरि त हुन् ति राक्षसि भई बस्थिन् सदा द्वारमा ।
जानिन् श्रीहनुमान् भनेर जब चोट् पाइन् चलिन् सारमा ॥
लङ्कीनी हुँ मलाइ् ता जिति गयौ[1] यस्ले सक्यो राज् गरी ।
रावण्को त मरण् हुन्या बखत भो आयो मरण्को घरी ॥ २१ ॥

ब्रह्माजी अघि भन्दथ्या प्रभुजिको हुन्या छ रामावतार् ।
हर्ला रावणले सिता र रघुनाथ् सुग्रीव थ्यैं मित्रचार् ॥
गर्नन् सुग्रिवले पनी दसदिशा सीताजिको खोज् खबर् ।
गर्नालाइ पठाउनन् विरहरू छानेर खुप् खुप् जबर् ॥ २२ ॥

तिन्मा एक् विर आउला र तिमिले लात् मारि थौली जसै ।
हान्ला वाम मुठी उठाइ रगतै छाडै गिरौली तसै ॥
रावण्को तहि सम्म आयु छ[2] भनी भन्थ्या र सो वात् सुनी ।
ब्रह्माको वचनै प्रमाण् गरि भन्याँ त्यो मर्छ रावण् पनी ॥ २३ ॥

---

१ होमनाथ—लियौ २ भारतजीवन—यो ।

जाऊ भेट सिताजिलाइ ति अगम् भीत्री बगैंचा महाँ ।
अश्शोक्का वनमा छ वृक्ष बढिया एक् शिंशपाको तहाँ ॥
ताहीं छन् प्रभुकी प्रिया वरिपरी छन् राक्षसीगण् पनी[1] ।
भेटी गै रघुनाथ थ्यैं भन तिमी यस्ता विपत् छन् भनी ॥ २४ ॥

धन्यै भयाँ म अहिले प्रभुको स्मरण् भो ।
संसारको भय छ जो उ त आज दुर् भो[2] ॥
जस्तो मिल्यो म कन सङ्ग र भक्ति ऐल्हे ।
यस्तै रहोस् यहि[3] म पाउँ न बिर्सुं कैल्हे ॥ २५ ॥

जस्सै श्रीहनुमान् पुग्या सहजमा लङ्का समुद्रै तरी ।
तस्सै जानकिको फुऱ्यो नजर वाम् हातै समेत् खुप् गरी ॥
रावण्को[4] पनि वाम हात् नजर वाम् फुऱ्यो रघूनाथको[5] ।
दक्षिण् अङ्ग फुऱ्यो तसै बखतमा खुस् मन् भयो नाथको[6] ॥ २६ ॥

सानू रूप लिई पसी सब सहर् हेर्दै विचार् खुप् गरी ।
रावण्को दरबार् विशेष् गरि ढुंड्या चोटा र कोठा गरी ॥
पायानन् र कता म जाँ भनि तहाँ मन्मा विचार् भो जसै ।
सम्झ्या लङ्किनिका वचन् र ति गया अश्शोक वन्मा तसै ॥ २७ ॥

---

१ नेपाल, भारतजीवन—पनी । अध्यात्म-रामायण—दृष्ट्वैव गच्छ त्वरितं राघवाय निवेदय ।
२ नेपाल, भारतजीवन—दुर् यो ।
३ नेपाल—हवस् ।
४ नेपाल, भारतजीवन—रावण्का ।
५ ऐजन—रघूनाथका ।
६ ऐजन—नाथका । बंबई—रामका ।

जो जो वृक्ष त इन्द्रका नगरिमा सो सो त सब् छन् तहीं ।
रत्नैका सिंढि साफ् असल् जल पनी यस्ता तलाऊ कहीं ॥
फल्फुल्ले अति भार् भयेर रुखका सब्का ति हाँगा पनी ।
लच्क्याका भ्रमरा र पंछि बहुतै रुख्मा बस्याका पनी ॥ २८ ॥

बिच् बिच्मा सुनका हवेलि पनि छन् उच्चा मणीको छ थाम् ।
जस्मा छन् कति गर्नु वर्णन जहाँ हेर्‍यो' तहाँ पक्कि काम् ॥
यस्तो सुन्दर वन् नजर् गरि सबै डुल्दै हनूमान् गया ।
देख्या सुन्दर शिंशपा र खुसि भै ताहीं ति दाखिल् भया ॥ २९ ॥

अधिक गभिर छाया सूर्यको ताप् न पस्न्या ।
उपर अति पहेँला बेस् चरा मात्र बस्न्या ॥
वरि परि पनि नाना राक्षसीको छ घेरा ।
रुख मनि तहिं सीता देखिइन् फेद नेरा ॥ ३० ॥

भोकी मैलि निन्याउरी न त कपाल्कोर्‍याकि सब् केश् उसै ।
लट्टा मात्र गर्‍याकि खालि भुमिमा रुँदै बस्याकी यसै ॥
राम् राम् राम् यति मात्र बोलि रहँदी देख्या र साना भई ।
पात्का अन्तरमा लुक्या ति हनुमान् रुख्का उपर्मा गई ॥ ३१ ॥

---

१ भाउदेवन—हेन्य ।

भन्छन् श्रीहनुमान् तहाँ मन मनै ऐल्हे कृतार्थ भयाँ ।
जो सीता कन देखि आज खुसिले सीता समिप्मा रह्याँ ॥
साध्याँ काम् पनि रामको भनि तहाँ खूसी भयाध्या जसै ।
अन्तःपूर् महाँ भयो र खलबल् त्यो शब्द सून्या तसै ॥ ३२ ॥

क्याको शब्द भयो भनेर हनुमान् लूक्या ति झन् पातमा ।
आयो रावण जल्दि ताहिँ नजिकै सब् स्त्री लिई साथमा ॥
कैल्हे मर्छु म राम देखि अझ तक् सीता हर्‍याँ ता पनी ।
आयेनन् रघुनाथ् भनेर रहँदा देखेछ स्वप्ना पनी ॥ ३३ ॥

राम्को दुत् अति वीर वानर अशोक् वन् भित्र आई पसी ।
सीताजी कन देखिन्या गरि तहीँ पात् भित्र लूकी बसी ॥
हेर्दा सुर् सब कामको खुसि भई स्वप्ना मिलेध्यो जसै ।
साँचै हो कि भनेर दौडि कन झट् आयो नजिक्मा तसै ॥ ३४ ॥

साँचै पो यदि हो भन्या असल भो दुर्वाच्य बोल्छु जसै ।
सीतालाइ यसो सुनेर रिसले जाला र भन्ला तसै ॥
मेरा दुष्ट वचन् सुनेर रघुनाथ् आयेर मार्नन् भनी ।
यस्तो निश्चय मन् गरी नजिक गै दुर्वाच्य बोल्यो पनी ॥ ३५ ॥

सीताजी पनि दुष्टलाइ नजिकै देखी अधोमुख् गरिन् ।
श्रीराम्का[1] चरणारविन्द मनले अन्तःकरण्मा धरिन् ॥
चुप् लागी[2] जननी रहिन् जब तहाँ सो देखि रावण् पनी ।
लाग्यो भन्न मलाइ देखि किन हे लायौ अधोमुख् भनी ॥ ३६ ॥

राम् मेरा पति हुन् भनेर तिमि पो भन्छौ उ भन्छन् कहाँ ।
मेरी हो यदि भन्दथ्या पनि भन्या आऊनु पर्थ्यो यहाँ ॥
माया छैन तिमी उपर् न बुझि क्या शोक् मात्र गर्छौ उसै ।
यौवन् व्यर्थ गयो विचार किन यो यौवन् अफाल्छौ यसै ॥ ३७ ॥

यौवन् व्यर्थ न फाल व्यर्थ[3] मनमा शोक गर्दछौ यो कती[4] ।
मैलाइ पति मान आज तिमिले हुन्छु म तिम्रो पती ॥
मेरी पत्नि भयौ भन्या त सबकी[5] मालिक् हुन्याछौ म ता ।
साहै प्रेम् गरि राखुँला बुझ अधिक् बैगूनि छन् राम ता ॥ ३८ ॥

मानी[6] मूर्ख कृतघ्न मानुष महाँ साहै अधम् जो त छन् ।
शक्तीका पनि कम् उ राम् पनि यहाँ आऊन क्या सक्तछन् ॥
तस्मात् छोड न राख राम् तिर बहुत् यस्तो भनेथ्यो जसै ।
लाल् लाल् नेत्र गराइ पूर्ण रिसले बोलिन् सिताजी तसै ॥ ३९ ॥

---

१ होमनाथ—राम्को ।
२ नेपाल, भारतजीवन—लागिन् ।
३ होमनाथ—आज ।
४ नेपाल, भारतजीवन—क्या तिमी ।
५ नेपाल—सबका ।
६ होमनाथ, नेपाल—मानिस । अध्यात्मरामायण—नि सत्त्वोनिभमो मानी मूढ पण्डितमानवान् । नराधम——————।

पाजी रावण ! बोल्दछस् कति बहुत दुर्वाच्य बक् बक् गरी ।
राघव् देखि डराइ छल्न भनि एक् सन्न्यासिको रुप् धरी ॥
जस्तै यज्ञ विषे हवी कुकुरले हर्छन् उसै चालले ।
राम लक्ष्मण् न हुँदा हरिस् तँ बुझिले मर्लास् यसै काललेे ॥ ४० ॥

सागर् शोषि कि साघुँलाइ रघुनाथ् आयेर घेरा दिई ।
तेरो वंश विनाश् गरेर पछि फेर् प्राण् खैंचि तेरो लिई ॥
लैजानन् रघुनाथ् मलाइ भनि झट् दीइन् जवाफ यो[1] जसै ।
लाल् लाल् नेत्र गराइ खड्ग पनि ली काट्नै तयार् भो तसै ॥ ४१ ॥

मन्दोदरी विनति गर्न अगाडि सर्दी ।
यो खड्ग टाढँ कसरी भनि चित्त धर्दी ॥
पाऊ परी कन बहुत् गरि विन्ति लाइन् ।
सब रिस् शमन् पनि गरायर खड्ग टारिन् ॥ ४२ ॥

हुकुम् रावणले तहाँ यति दियो हे राक्षसी ! ई[3] सीता ।
मैन्हा दुइ यसै बसुन् तब उपर् मेरा शयन्मा कि ता ॥
बस्निन् बस्तिन पो पनी भनि भन्या काटेर टुक् टुक् गरी ।
तर्कारी भुटुवा बनाउनु असल् मीठा मसाला धरी ॥ ४३ ॥

---

१ होमनाथ, नेपाल—तसै ।
२ बर्दई—ई ।
३ नेपाल, भारतजीवन—यो ।

मासू खाइ म छोड्ला अझ पनी चेताउ येती भनी ।
रावण् फर्कि गयो ति राक्षसिहरू एक् मुख् भया फेर् अनी[1] ॥
एक् भन्छे किन व्यर्थ यौवन सक्यौ रावण् गराऊ पती ।
दोस्री क्या भनि उठ्तछे कि कति वार् भन्छेस् तँ थाक्छेस् कती॥ ४४॥

काट्नै पर्छ न काटि हुन्न भनि बात् गर्दै थिई अर्कि तो[2] ।
हात्मा ली तरवार दौडि पनि गै भन्दै म काट्छु सिता ॥
आर्की घोर् मुख बाइ डर् दिन नजिक् धाई सिता थ्यै जसै ।
बूढी राक्षसि एक् थिइ र त्रिजटा तेस्ले हटाई तसै ॥ ४५ ॥

लागी भन्न अभागि दुष्टहरु हो ! क्या दुष्टको[3] झैं मती ।
गर्छौ छोडि[4] विरोध् न राख गर खुप् सीताजिको ता स्तुती ॥
पाऊमा पर दण्डवत् गर सबै मालिक् इनै हुन् भनी ।
मेरा[5] आज वचन् लियौ भनि भन्या खुप् हीत होला पनी ॥ ४६ ॥

स्वप्नाको सुन भन्छु लक्षण यहाँ श्रीराम् सिताका पती ।
ऐरावत् उपरी[7] चढेर सँगमा भाई लिई विर् अती ॥
याहाँ आइ रिसाइ भस्म सब यो लङ्कै गराई दिया ।
रावण् मारि सिता लियेर सँगमा पर्वत् उपर् पो थिया ॥ ४७ ॥

---

१ हामनाथ—पनी ।
२ पेजन—गई ति अर्की तहा ।
३ पेजन—च ।
४ पेजन—छैन ।
५ पेजन—मेरा ।
६ पेजन—यदि ।
७ बंबई—उपरै ।

रावण् गोमय कुण्डमा कुल समेत् खुप् तेल[1] मर्दन् गरी ।
बुड्थ्यो सब् मुड आफना उनि उसै मुड्को त माला धरी ॥
श्रीराम्का नजिकै विभीषण थिया भक्ती प्रभूको गरी ।
गर्‍थ्यौं खूप टहल् बहुत् खुसि हुँदै[2] तन् मन् वचन् एक् गरी ॥ ४८ ॥

राम्ले रावणलाइ आज सहजै मार्छन् कुलै साफ् गरी ।
रावण्को अब वृद्धि छैन यसको आयो मरण्को[3] घरी ॥
राम्का भक्त विभीपणै अब उपर् बस्नन् यहाँ राज् गरी ।
जस्तो हुन्छ हुकुम् सितापतिजिको सोही सिरोपर् धरी ॥ ४९ ॥

जस्तो स्वप्न भयो उँसब् भनि सक्याँ येती भनी चुप् जसै ।
लागीथी त्रिजटा ति बात् सुनि डऱ्या सब् राक्षसीगण् तसै ॥
निद्राका वशमा सबै परि गया सीता बहूतै रुँदी ।
आधार् कोहि न पाउँदी अधिक ताप् मानेर निष्फल् हुँदी ॥ ५० ॥

भोकी शोक् गरि भन्दछिन् अब यहाँ ऐल्हे कसोरी मरूँ ।
इन्का हात परेर मर्नु न निको आफैं म मर्छु बरू ॥
ताप्ले पूर्ण हुँदी उपाय अरु थोक् केही न जान्दी कचै ।
मन्मा स्वस्थ न पाउँदी विरहले देख्ती अँध्यारो सबै ॥ ५१ ॥

---

१ होमनाथ—तैल ।
२ ऐक्षन—ले ।
३ नेपाल, भारतजीवन—विपत् । अध्यात्म-रामायण—सर्वथा रावणं रामो हत्वा सकुलमंजसा । विभीषणायाधिपत्यं दत्त्वा···
४ नेपाल—र ।

राम्मा चित्त दियेर मर्नु बढिया मानेर सीता तहाँ ।
झुन्डीन्या मतलब् लिई खडि भइन् पक्रेर हाँगा महाँ ॥
राक्षस्का बिचमा बसी जिउनु धिग् मर्नू निको मर्दछु ।
चुल्ठो लामु छ झुण्डिना कन यहाँ डोरी त यै गर्दछु ॥ ५२ ॥

यस्तो निश्चय सुर् गरी कन सिता झुण्डीन आँटिन् जसै ।
काम् बित्ला भनि सानु बोलि झटपट् बोल्या हनूमान् तसै ॥
भारतवर्ष विषे मणी मुकुट झैं नाम् ता अयोध्या भनी ।
ठूलो एक सहर् थियो मणिमयी सुन्दर् बन्याको पनी ॥ ५३ ॥

इक्ष्वाकूका कुलैमा अति बलि दशरथ् विर् महाराज् रह्याछन् ।
तिन्का तिन् रानि मध्दे गुणि गुणि अति विर् चार् छोरा भया छन्॥
जेठा राम्जी ति चार्मा उहिं पछि त भरत्जी र लक्ष्मण् इ तीनै ।
भन्दा शत्रुघ्न कान्छा सकल गुण महाँ कम्ति छैनन् इ कूनै ॥५४॥

जेठा राम पिताजिका हुकुमले सब् राज्य छोडी दिई ।
वन्मा बस्न चल्या बहुत् खुसि हुँदै सीता र लक्ष्मण् लिई ॥
एक् दिन् पञ्चवटी गया प्रभु तहिं डेरा प्रभूको पर्‍यो ।
रावण्ले अति छल् गरी कन तहाँ सीताजिलाई हर्‍यो ॥ ५५ ॥

---

१ मर्द——वनि।

राम् लक्ष्मण् न हुँदा सिता पनि तहाँ चोरी जसै ता हऱ्यो[1] ।
चोरी आज सिता हऱ्यो भनि बहुत् खेद् रामलाई पऱ्यो ॥
जान्थ्या खोजि सिताजिलाइ वनमा फेला जटायू पऱ्या ।
तिन् माथी करुणा भयो प्रभुजिको ताहीं जटायू तऱ्या ॥ ५६ ॥

भेट् सुग्रिव् सित भो पछी प्रभुजिको लाया मित्यारी पनी ।
वाली मारि रजाजि बक्सनु भयो मित् हुन् इ मेरा भनी ॥
विर् विर् वानर छानि सुग्रिवजिले सीताजि खोज्नै भनी ।
हूकुम् बक्सनु भो र विर्हरु गया सीताजि खोज्नै पनी ॥ ५७ ॥

तिन्मा एक् विर ता म हूँ म त यहीं[2] आयाँ समुद्रै तरी ।
सम्पाती सित भेट् हुँदा खबर भै[3] उन्का वचन्ले गरी ॥
लङ्का दाखिल भै गयाँ छिन महाँ रामका प्रताप्ले गरी ।
फुतक्याँ लङ्किनि देखि निर्भय भई अश्शोक वन्मा परीं[4] ॥ ५८ ॥

देख्याँ सुन्दर वाटिका वरि परी रुख् वेस् लताले गरी ।
वेह्याका चहुँ ओर रत्न सरिका फल् फुल् फल्याको[5] भरी ॥
देख्याँ आज सिताजिलाइ र यहाँ आनन्द पायाँ भनी ।
येती विन्ति गरेर चुप् भइ रह्या ताहाँ हनूमान् पनी ॥ ५९ ॥

---

१ बबई—गऱ्यो ।
२ होमनाथ—यहीं ।
३ ऐबन—भो ।
४ बंबई—भरी ।
५ होमनाथ—फल्याका ।

सीताजिले जब इ वात् क्रमले सुनीथिन् ।
आश्चर्य भै कन वरीपरि हेरि एक् छिन् ॥
कोही न देखि ति सिता अरुलाइ ताहाँ ।
भन्छिन् कुरा इ कहन्या जनको छ याहाँ ॥ ६० ॥

भ्रम् हो भनू पनि भन्या सब चेत् छ मेरा ।
स्वप्ना कसो गरि भनू निद छैन मेरा ॥
जो हो इ वात कहन्या उ अगाडि आई ।
अम्रित् वचन् इ अति आज भनोस् मलाई ॥ ६१ ॥

सीताजिका यति वचन् जब सुन्न पाया ।
सानू स्वरुप् लि हनुमान्जि अगाडि आया[1] ॥
दर्शन् प्रणाम् पनि गऱ्या र सिताजिलाई ।
ताहीं खडा भइ रह्या अति हर्ष पाई ॥ ६२ ॥

लाल् मुख् पीत शरिर्[2] शरिर् पनि अधिक् सानू भडेरा सरी ।
धाऱ्याका हनुमान देखि मनले आफै ति शङ्का परी ॥
रावण्को छल हो कि यो भनि तहाँ लाइन् अधोमुख् जसै ।
शङ्का भो अब माइलाइ भनि झट् वोल्या हनूमान् तसै ॥ ६३ ॥

---

१ नेपाल—सानू स्वरुप् लि हनुमान अगाडि आए । २ नेपाल, हालनाथ, भारतवर्धन—मरी ।

हे माता[1] ! म त दास हूँ हजुरको राम्का हुकुम्ले गरी ।
आयाको छु हजूरका खबरमा गम्भिर् समुद्रै तरी ॥
राजा सुग्रिवको म[2] मन्त्रि पनि हूँ वायू पिता हुन् भनी[3] ।
येती बिन्ति गरेर चुप् भइ रह्या क्या हुन्छ मर्जी भनी ॥ ६४ ॥

सीताजी पनि भन्दछिन् कसरि यो जानू म मानिस् पनी ।
वानर् सीत मित्यारि लाउँछ कतै क्या हुन् कुरा को जनी ॥
येती बोलि सिताजि चुप् भइ रहिन् साँचो न मानी जसै ।
फेर् वृत्तान्त गरी सुनाइ सब बात् औंठी दिया पो तसै ॥ ६५ ॥

औंठी दी कन फेर् प्रणाम् पनि गरी जस्सै हनूमान् बस्या ।
देखिन् औंठि जसै तसै बखतमा हर्षाश्रुधारा खस्या ॥
बर् बर् आँसु खसाउँदै प्रभुजिको औंठी सिरोपर् धरिन् ।
साह्रै खुस् हनुमान् उपर् भइ तहाँ प्राण् झैं पियारो गरिन् ॥ ६६ ॥

हित गरि हनुमान्जीलाइ भन्छिन् ति माता ।
म कन तिमि भयौ खुप् प्राणका आज दाता ॥
तिमि सित रघुनाथ्ले खूप विश्वास मान्या ।
तब म सित पठाया येहि काम्ले त जान्याँ ॥ ६७ ॥

---

१ होमनाथ—मातर् ।

२ भारतजीवन, होमनाथ—त । अध्यात्मरामायण—सचिवोऽहं हरीन्द्रस्य सुग्रीवस्य शुभप्रदे ।

३ होमनाथ—पनी ।

४ भारतजीवन—वानर् ।

अब त तिमि हनूमान् जल्दि गै रामलाई ।
भन विपति पऱ्याको देखि हाल्यौ मलाई ॥
जति गरि म उपर् श्रीरामको हुन्छ माया ।
तति गरि तिमिले खुप् युक्तिले बिन्ति लाया ॥ ६८ ॥

जिन् तिन्[१] शरीर महिना दुइ ता म धर्छु ।
ताहाँ पछी त तिमि निश्चय जान मर्छु ॥
खान्या छ दुष्ट तरकारि बनाइ येही[२] ।
छैनन् यहाँ अरु सहाय मलाइ कोही ॥ ६९ ॥

तस्मात् अवश्य इ दुई महिना न जाई ।
सुग्रिव् समेत् सकल सैन्य लियेर आई ॥
यस् दुष्टलाइ सब वंश समेत मारुन् ।
यो दुःखसागर पऱ्या कि मलाइ तारुन् ॥ ७० ॥

सिप सित गरि विन्ती खुप् दयालू बनाया ।
जति छ फजिति मेरा यो सबै थोक् जनायाँ ॥
यति विनति गऱ्या लौं[५] पाउला धर्म धेरै ।
सकल भनि सक्याँ बात् क्या भनूं फेरफेरै ॥ ७१ ॥

---

१ भारतजीवन—जेन् फेन् ।
२ भारतजीवन (क)—योही ।
३ भारतजीवन—सहायश्च[illegible] ।
४ ऐजन—जयाथ ।
५ सोमनाथ—गर्नें ले । भारतजीवन—गऱ्येले ।
इ दुवै पाठ अशुद्ध र दोषपूर्ण छन् । सं०

बिन्ती श्रीहनुमानले पनि गऱ्या माता म सेवक् त हूँ ।
स्वामितका इ विपत् सबै म कहुँला धेर् बात् यहाँ क्या कहूँ ॥
राम् लक्ष्मण् दुइ भाइ सुग्रिव समेत् वानर्कि सेना लिई ।
वंशै रावणको विनाश् गरि दिनन् घेरा सहर्मा दिई ॥ ७२ ॥

स्वामित्लाइ लियेर फेर रघुनाथ् जानन् अयोध्या महाँ ।
आवैनन् रघुनाथ् भनेर मनमा शङ्कै न लागोस् यहाँ ॥
यो बिन्ती सुनि भन्द छिन् तर्हि सिता रामचन्द्रजी क्या गरी ।
सेना ली कन आउनन् अति गभिर् यस्तो समुद्रै तरी ॥ ७३ ॥

जननि कन बुझाया यो हुकुम् सूनि ताहाँ ।
मइछु[1] प्रभुजिको दास् बोकुँला पीठ माहाँ ॥
रघुपति दुइ भाईलाइ क्या दुःख पर्छन् ।
सकल अरु र सुग्रिव् कूदि आफैं ति तर्छन् ॥ ७४ ॥

जननि ! म त बिदा झट् पाउँ मर्जी त सून्याँ ।
अब त उहिं गया यो हुन्छ काम् जल्दि हून्या ॥
जउन चिज दिंदामा राम विश्वास मान्छन् ।
उहि चिज पनि पाऊँ जान्छु दिन् मात्र जान्छन् ॥ ७५ ॥

---

१ बर्दे—म त छु ।

यति मुनि अघि देखी केशपाश्मा धन्याको ।
मणि झिकि दिइ हालिन् रामका मन् पन्याको ॥
मणि दिइ फिरि भन्छिन् चित्रकुट्मा भयाको ।
शरण परि नजर् दी काग बाँची गयाको ॥ ७६ ॥

एक् दिन् हे हनुमन् ! म चित्रकुटमा राम्का नजिक्मा थियाँ ।
मेरा काख महाँ सुत्या र रघुनाथ् हात्को तकीया दियाँ ॥
मेरा लाल् दुइ पाउ देखि कन काग् आयो र ठुँग्यो जसै ।
मेरा इ दुइ पाउ देखि बहुतै आयो रगत् पो तसै ॥ ७७ ॥

उठी श्रीरघुनाथको[1] नजर भो वाहीं थियो काग् पनी ।
फ्याँक्या एक् तृण ली तहाँ प्रभुजिले यो काग मार्छु भनी ॥
त्यो काग् चौध भुवन् डुल्यो त पनि एक् पायेन आधार् जसै।
फेरी आइ शरण् परी नजर दी बाँची गयो काग् तसै ॥ ७८ ॥

मेरा आज शरण् पन्यो भनि दया आयो उ काग्मा पनी ।
मै माथी त दया कसो हुन गयो भन्थिन् भन्या यो पनी ॥
हात् जोरी कन विन्ति फेरि हनुमान् विर् गर्न लाग्या तहाँ ।
याहाँ छन् भनि यो खबर् न भइ पो[2] आऊन ढिल् भो यहाँ ॥ ७९॥

---

१ वर्दई— श्री रघुनाथले।   २ भारतजीवन—भो

रावण्‌ले हरि ली गयो भनि खबर् हुन्थ्यो त बाँच्थ्यो कहाँ।
आज् तक् रावणको[1] कुलै प्रभुजिले सब् भस्म गर्थ्या यहाँ ॥
देख्छु रूप त सानु मानु भङ्गिरा जत्रो कसोरी लडी।
राक्षस् नाश् तिमि गर्दछौ तिमि ठुला हुन्छौ स्वरुपकी बढी ॥ ८० ॥

तिम्रो रुप् अति सानु देख्छु अरु ता कत्रा हुनन् झन् भनी।
संझन्छू मनले र गम्छु मनमा आश्चर्य मान्छू पनी ॥
यस्तो मर्जि सिताजिको सुनि तहाँ पर्वत् सरीका भया।
मेरू तुल्य स्वरुप् गरेर हनुमान् साम्ने खडा भै रह्या ॥ ८१ ॥

जब त ति हनुमान्‌को रुप् ठुलो देखि लीइन्।
खुसि भइ तहिं बीदा माइले जल्दि दीइन् ॥
अब त तिमि हनूमन्! धृष्ट चाला छिपाऊ।
इनिहरु सब देख्छन् कूदि फेर् जाइ जाऊ ॥ ८२ ॥

यति सुनि हनुमान्‌ले फेरि बिन्ती लगाया।
सहज सित म जान्थ्याँ येति फल् खान पाया ॥
वरिपरि फल फुल् छन् मर्जि मात्रै म पाऊँ।
हुकुम बिनु कसोरी आज आफैं म खाऊँ ॥ ८३ ॥

---

[1] नेपाल—रावणका।

यति विनति गन्याथ्या[१] खानको मर्जि पाई ।
खुसि भइ फल खाई माइ थ्यैं जल्दि आई ॥
चरण परि बिदा भै क्यै गया दुर् जसै ता ।
अलिकति कछु[२] काम् फेर् गर्न आँख्या तसै ता ॥ ८४ ॥

आफ्नै मन् मन भन्दछन् ति हनुमान् जुन् वीर दुत् भै गई ।
जत्ती स्वामितको हुकुम् छ उतिमा मात्रै चनाखो भई ॥
उत्तीकाम् गरि फिर्छ पो पनि भन्या त्यो दुत् अधम् हो भनी ।
भन्छन् सब् दुनियाँ त भेटिकन जाँ कस्तो छ रावण् पनी ॥ ८५ ॥

यति गमि ति वर्षैचा फेंक्न मनसुब् चलाई ।
खुसि भइ ति महाविर् जल्दि फेर् फर्कि आई ॥
सकल वन उखेल्दै चौकि सम्पूर्ण मान्या ।
फगत जननि बस्न्या एक सिसौ शेष पान्या[३] ॥ ८६ ॥

जब त वन विनास्या राक्षसी जल्दि आई ।
पुगि नजिक सिताका[४] सोधि सीताजिलाई ॥
भन न तिमि सिताजी विर् क[५] हो क्यान आयो ।
अति असल वर्षैचा मासि मैदान् बनायो ॥ ८७ ॥

---

१ भारतजीवन—विनति यति गन्याथ्या
२ ऐजन—कुछ ।
३ भारतजीवन, नेपाल—राख्या ।
४ बम्बई—बस्याकी ।
५ सोमनाथ—क्यान ।

यति सुनि तहिँ सीता भन्दछिन् क्या म जानूँ ।
विपत परि रह्याकी छू म ता चानुमानू ॥
तिमि बुझ न सबै बात् हो क हो क्यान आयो ।
अति असल बघैँचा क्यान मैदान् बनायो ॥ ८८ ॥

सकल छल त हो यो राक्षसै गर्छ माया ।
जब त यति भनीथिन् राक्षसी सब् डराया ॥
कहन भनि गया सब् रावणैका हजुर्मा ।
पुगि कहन ति लाग्या वन् गयो जो बिसुर्मा ॥ ८९ ॥

ऐल्हे हे महाराज्! अधीक्र बलियो आयो र वानर् यहाँ ।
सीताजी सँग केहि बात्चित गरी कूद्यो बघैँचा महाँ ॥
सब् ती रुख् सहजै उखेलि कन साफ् मैदान् बनाई दियो ।
चौकी चूर्ण गरी हवेलि पनि सब् नासी वस्याको थियो ॥ ९० ॥

आयौँ हामि त बिन्ति गर्न भनि यो बिन्ती गऱ्याथ्या जसै ।
सून्यो जल्दि उठेर पक्रन भनी लश्कर् पठायो तसै ॥
हूकुम् पायर लाख लस्कर गयो पक्रेर ल्याऊँ भनी ।
एक् लाख् लस्करलाइ देखि हनुमान् अत्यन्त गर्ज्या पनी ॥ ९१ ॥

---

१ बवई—गराओ। श्लोक ८८ मुख्य होमनाथका संस्करणमा छैन। स०  २ होमनाथ—गया।

फेर् आर्को रथमा चढ़ेर[१] अब ता बाँध्छु म ऐल्हे भनी ।
फ्याँक्यो जल्दि र ब्रह्मपाश् ति हनुमान्जीलाई[२] बाँध्यो पनी ॥
बाँधी श्रीहनुमानलाइ सँग ली फर्क्यो र[३] दर्‌बार् गयो ।
बाँध्याका हनुमान देखि सहरै सम्पूर्ण खूसी भयो ॥१००॥

जुन् राम्‌को चरणै स्मरण् गरि सहज् अज्ञान पाश् नाश् गरी ।
वैकुण्ठै सब पुग्दछन् भनि भन्या तेस् ब्रह्मपाश्‌मा परी ॥
बाँधिन्थ्या हनुमान् कहाँ तर पनि बन्धन् पऱ्या झैं भया ।
रावण् भेटि त जाँ भनेर हनुमान् चुप्‌चाप लागी गया ॥१०१॥

जस्सै इन्द्रजितै गयो र[४] हनुमान्जीलाइ बाँधी तहाँ ।
फर्केथ्यो घर जाँ भनी तब तहीं आयेर रस्ता महाँ ॥
रिस् फेऱ्या पुरवासिले पनि मुठी उठाइ हान्दा भया ।
रिस् फेर्छन् भुसुना भनेर हनुमान् चुप्‌चाप लागी गया ॥१०२॥

पैल्हे ता ब्रह्मपाश्‌मा परि कन क्षण भर् बाँधिनू काम थीयो ।
ब्रह्माको वाक्य साँचो गरि कन पछि ता पाशले छाडि दीयो ॥
बन्धन् देखी त खुस्‌क्या तर पनि हनुमान् भेट्‌न मन्‌सुब् धऱ्याको[५] ।
पौंच्या रावण् छ जाहाँ खुसि भइ अरु ता मान्दछन् कर् पऱ्याका ॥

---

१ भारतजीवन—चढ्यो र।
२ होमनाथ—ब्रह्मपाश हनुमान्‌जिलाई।
३ पेजन—फर्केर।
४ पेजन—पुग्यो र।
५ पेजन—गरेका।

रावण् विर् पनि मन्त्रिवर्ग सँग ली भारी सभामा थियो ।
पौंच्यो ताहिं र इन्द्रजित् ति हनुमान्‌जीलाइ सुम्पी दियो ॥
हात् जोरी विनती गर्‍यो अति हरिप् वानर् छ सेना पनी ।
घेरै नाश गरेछ आज मइ गै[1] ल्यायाँ खुनी हो भनी ॥१०४॥

जो[2] गर्नू अब पर्छ मन्त्रि सँगको सल्लाह बातचित्[3] गरी ।
यस्‌को आज ठिकान् लगाउनु हजुर्‌स् मन्‌मा विचार् खुप् गरी ॥
येती बिन्ति सुन्यो र[4] इन्द्रजितका हेर्‍यो नजर्‌ले पनी ।
लाग्यो सोध्‌न प्रहस्तलाइ किन यो आयेछ लौ सोध् भनी ॥ १०५॥

अस्सल्‌मा पनि क्या भनू अति असल् मेरो बचैंचा पनी ।
नास्यो विर् पनि नाश् गर्‍यो म कन ता मानू भुसूनू[5] गनी ॥
हूकुम् यो सुनि त्यो प्रहस्त हनुमान्‌जीका अगाडी गई ।
लाग्यो सोध्न सबै कुरा पनि बहुत् आधार दीन्या भई ॥१०६॥

यै बिच्‌मा न डराइ रावण उपर् साम्‌ने नजर् दी तहाँ ।
बोल्या श्री हनुमानले तँ बुझिले काम्‌ले त आयाँ यहाँ ॥
भार्‍यो जस्‌कि हरिस् उनै जगतनाथ् राम्‌को म दास् हूँ मती ।
तेरो नष्ट भयो र अति दिन यो आयाँ न ले यो मती ॥१०७॥

---

१ होमनाथ—मइले ।
२ भारतजीवन, नेपाल—ज्या ।
३ होमनाथ—चोरै ।
४ पेजन—सुनेर ।
५ नेपाल, भारतजीवन—भुसनो ।

आया राम मतङ्ग पर्वत विषे लक्ष्मण् सहित् भै जसै ।
लाया सुग्रिवले मित्यारि खुसि भै रामचन्द्रजी थ्यैं तसै ॥
वाली मारि रजाइँ बक्सनु भयो सुग्रीव राजा भया ।
सीता खोज्न हुकुम् हुँदा विरहरु फेर् दस् दिशामा गया[1] ॥१०८॥

एक् विर् ता मइ हूँ हुकुम् सिर उपर् लीयेर आयाँ यहाँ ।
पायाँ देख्न सिताजिलाइ दुत हूँ रामको छलिन्थ्याँ कहाँ ॥
वानर् हूँ र उखेलि साफ् गरि दियाँ तेरो बगैंचा पनी ।
आया मार्न मलाइ जो अघि सरी उन्लाइँ मार्याँ पनी ॥१०९॥

यो इन्द्रजित् गइ यसै बिचमा मलाई ।
बाँधेर ल्याइ कन आज दियो तँलाई ॥
बन्धन् पर्‍यो भनि न ठान् तँ दियाँ जनाई ।
खूला छु अर्ति पनि दिन्छु म सुन् तँलाई ॥११०॥

लोकको गती सब विचार् गरि आज तैंले ।
यो राक्षसी मति न ले हित भन्छु[3] मैले ॥
ब्राह्मण् तँ होस् ऋषि पुलस्त्यजिको त नाती ।
राक्षस् कसो गरि तँ होस् बुझिले न भाँती ॥१११॥

---

१ सोमनाथ—चारै दिशामा गया । अध्यात्म-रामायण—सचोदितास्तेन महाहरीश्वरा ...
२ नेपाल—इन्लाइ ।
३ "तँ" पाठ भये पनी अनुकूल हुन्थ्यो । सं०

आत्मा स्वरूप उ त झन् छ स्वरूप काहाँ ।
जाती र वर्ण लिङ्ग भन्न सकिन्छ याहाँ ॥
सो आत्म रूप भनि नित्य विचार गर्नू ।
आनन्दमा रहुँ भन्या मति येहि धर्नू ॥११२॥

जो यो लोक विषे प्रपञ्च छ सबै जान्[1] स्वप्न जस्तो भनी ।
तूतुनुज्याल् सपना छ सत्य उठि ता लाग्दैन साँचो पनी ॥
तस्तै ज्ञान् तभयो भन्या त्रिभुवनै एक् देख्छ आत्मा फगत् ।
अज्ञान् रुप् निदमा पऱ्यो पनि भन्या देखिन्छ नाना जगत् ॥११३॥

आत्मा सत्य म हूँ भनेर बुझिले यस् देहलाई पनी ।
झूटो जान् पृथिवी र जल्हरु मिली झुट्टै[2] बन्याको भनी ॥
तर्लास् यो मनमा लिइस् पनि भन्या[3] तार्न्या उनै विष्णु छन् ।
जो हो विष्णु उ राम हुन् शरण पर् रिस् उठ्छ तेरा त झन् ॥११४॥

यस्तो मूर्खपना तँ छोड्[4] लियर जा सीता शरण्मा तँ पर् ।
खुस् हूनन् रघुनाथ् शरण् परि गया यो दुष्ट चाला न गर् ॥
राम्को भक्ति गरैन ता कसरि यो संसार तर्लो उसै ।
पर्लो जन्मनु मर्नु यै फजितिमा छुट्तैन यो ताप् कसै[5] ॥११५॥

---

१ नेपाल, भारतजीवन—अन ।
२ होमनाथ—झूटो ।
३ ऐजन—भने ।
४ ऐजन—छाड ।
५ ऐजन— छुट्तैन यो ता कसै ।

यो जानी कन भक्ति गर् शरण पर् राम्का हजुर्मा गई ।
आफ्नू आत्म नरक विषे न लइजा यसतो तं जान्या भई ॥
सीताराम् सितको विरोध् गरि तँ हेर् गिलोस् नरक्मा परी[१] ।
फेर् उत्तीर्ण हुनू कठिन् छ बुझिले अर्ती दियाँ यो पनी[२] ॥११६॥

यस्ता बात् हनुमानका जब सुन्यो रावण् रिसायो तहाँ ।
लाल् लाल् नेत्र गराइ भन्छ रिसले सूनाइ साभा महाँ ॥
मेरो डर् रति भर् न राखि बहुतै क्या बोल्दछस् रे यहाँ ।
राम् लक्ष्मण् दुइ भाइलाइ सहजै मार्छु म छोड्छु कहाँ ॥११७॥

सुग्रिव्लाइ तँलाइ मार्छु पछि फेर् मार्छु सिताजी पनी ।
राम् लक्ष्मण् सित क्या डराउँछु र की मार्नन् मलाई भनी ॥
तिन्का वानर सैन्यको पनि विनाश् गर्न्या छु[४] येती जसै ।
बोल्यो रावणले इ बात् सुनि तहाँ बोल्या हनूमान् तसै ॥११८॥

यसरि किन बहूतै गर्दछस् सेखि धेरै ।
प्रभु कन त परै राख् जोरि छैनस् तँ मेरै ॥
अधि सरुँ तँ तँ जस्ता कोटि रावण् म मारूँ ।
हुकुम त न भयाको मार्न पो[६] आज क्यारूँ ॥११९॥

---

१ होमनाथ—व। ( न ? ) स०
२ देवन—भनी।
३ 'परी' र 'पनी' को अनुप्रास मिल्दैन। स०
४ होमनाथ—गर्नेछु।
५ नेपाल, भारतजीवन—अघि सरि व।
६ देवन—मानको।

यस्ता बात् हनुमानका सुनि तहाँ रावण् रिसायो अती ।
साँचा हुन्‌इ कुरा हुँदां कन त हो लिन्थ्यो कहाँ दुर्मती ॥
यो वानर् कन काटि टुक् गर भनी यस्तो हुकुम् पो दियो ।
हातमा बेस् हतियार् लिई अघि सन्यो जुन् विर् नजिक्‌मा थियो १ २ ०

यस् बिच्‌मा त विभीषणै अघि सरी हात् जोरि बिन्ती गऱ्या ।
दुत् हो यो महाराज् ! कुरा पनि वहाँ लै जान्छ को यो मऱ्या ॥
चिह्न केहि लगाइ छोड् दिनु हवस् जावस् र विस्तार् गरोस् ।
येसै वानरका कुरा सुनि यहाँ आउन् ति सङ्ग्राम् परोस् ॥१२१॥

साँचो भन्यो भनि बुझी कपडा मगायो ।
तेल् घीउले मुछि पुछर् भरि बेर्न लायो ॥
हूकुम् दियो अब जलायर बाँधि लेऊ ।
सारा सहर् पनि घुमायर छाडि देऊ ॥१२२॥

जावस् ठुटो पुछर ली कन फर्कि वाहीं ।
पुच्छर् डढी न सकि छोडनु छैन काहीं ॥
यस्तो हुकुम् जब दियो तब बाँधि लीया ।
आगो पनी पुछर तीर लगाइ दीया ॥१२३॥

---

१ ववई—हुँना ।

बॉध्याका हनुमान् लियेर खुसि मै मेरी अगाडी फुकी ।
लाग्या घुम्न सहर् ति राक्षसहरू चोर् हो भनी खुप् भुकी ॥
चुप् लागी हनुमान् पनी खुरु खुरू गम् हेरि हिंड्दै गया ।
ढोका पश्चिममा पुगी सहरको ताहीं ति साना भया ॥१२४॥

बन्धन् देखि त खुस्कि सूक्ष्म रुपले पर्वत् सरीका भया ।
ठूलो[1] स्तम्भ उठाइ राक्षस अनेक् मान्या र कुदै गया ॥
बल्दो लामु पुछर् लियेर घर घर् कुदै सहर्मा डुली ।
पोल्या सब् सहरै छुटेन कहिं घर् बॉकी कतै एक् भुली ॥१२५॥

लाग्यो बल्न सहर् जल्या र सब घर् सब् वन्द रस्ता भई ।
भागी जान न पाउँदा हुँदि अनेक् राक्षस् अटाली गई ॥
फाल् हाली कन अग्निमा परि मर्‍या यो चाल् सहर्मा भयो ।
पोल्यानन् घर एक् विभीषणजिको त्यो[2] मात्र बॉकी रह्यो ॥१२६॥

येती काम गरी सकी पुछरको आगो निभाऊँ भनी ।
कूदी जल्दि समुद्रमा पुगि पुछर् चोभी निभाया पनी ॥
अग्नीले पनि मित्रपुत्र भनि ताप् केही गर्‍यानन् तहाँ ।
सीताको पनि प्रार्थना हुन गयो डढ्थ्या हनूमान् कहाँ ॥१२७॥

---

१ नेपाल, भारतजीवन—ढोका पश्चिम जुन् थियो सहरमा ताहीं ति साना भया। अध्यात्मरामायण—'कृत्वा तु पश्चिमद्वारसंनिपत्य मारुतिः'।

२ नेपाल—ठोढ। अध्यात्मरामायण—तदैवं स्तम्भमादाय हत्वा तान् रक्षिण क्षणात्।

३ होमनाथ—त्यै।

रामका फगत् सरणले पनि दुःख छुट्छन्[1] ।
आध्यात्मिकादिहरु ताप् पनि जल्दि छुट्छन्[2] ॥
साक्षात् उनै प्रभुजिका दुत भै गयाका ।
उद्ध्या कहाँ ति हनुमान् अति हित् भयाका ॥१२८॥

फिर्न्या मन्सुब ली[3] बिदा हुन सिताजी थ्यैं हनूमान् गया ।
बीदा खूसि भयेर बक्सनु हवस् जान्छु म भन्दै[4] भया ॥
आउँछन् रघुनाथ् अवश्य भनि यो बिन्ती गर्न्याथ्या जसै ।
साहै शोक् मनमा धरी कन सिता क्यै भन्न लागिन् तसै ॥१२९॥

तिमि कन नजिकैमा देखि खुप् खूसि हुन्थ्याँ ।
घडि घडि रघुनाथ्का मिष्ट वार्ता म सुन्थ्याँ ॥
अब कसरि म यस्ता दुःखले प्राण धर्छु ।
तिमि पनि फिरि जान्या फेरि ताप्मा म पर्छु ॥१३०॥

सीताका इ बचन्[5] सुनेर् झटपट् हात जोरि बिन्ती गर्न्या ।
यस्तो[6] शोक् अब छोडि बक्सनु हवस् आपत्ति साहै भया[7] ॥
ऐल्हे दाखिल गर्छु रामचरणमा बोकी हुकुम् लौ हवस् ।
धेरै शोक् किन गर्नु हुन्छ मनमा यो शोक् दुरैमा रहोस्[8] ॥१३१॥

---

१ बम्बई—हर्छन् ।
२ होमनाथ—अध्यात्मिकाधिहरुको पनि ताप छुट्छन् ।
३ ऐजन—ले ।
४ ऐजन—भन्दा ।
५ होमनाथ—कुरा ।
६ ऐजन—यस्तो ।
७ बम्बई—भन्या ।
८ होमनाथ—यो शोक दूरै रहोस् ।

सीताजी पनि भन्दछिन् म त न जाँ जाऊ तिमी मात्र गै ।
विस्तार् विन्ति गरेर जल्दि रघुनाथ् लीयेर आऊ सँगै ॥
राम् आई कन दुष्टलाइ सहजै मारी मलाई सँगै ।
लैजानन् रघुनाथ् त कीर्ति रहला क्या हुन्छ येसै म गै ॥१३२॥

सीताको जब यो हुकुम् हुन गयो बीदा हनूमान् भया ।
तिन् बेर् जल्दि परिक्रमा गरि प्रणाम् गर्दा छँदा ती गया ॥
पर्वत् माथि चढेर रुप् पनि ठुलो पर्वत् सरीको धन्या ।
आकाश्मार्ग लिई कुदेर खुसिले खुप् शब्द ठूलो गर्न्या ॥१३३॥

सून्यां शब्द ति अङ्गदादिहरुले बोल्या परस्पर् पनी ।
शब्दैले बुझियो अवश्य सहजै भेटेर आया भनी ॥
यस्ता बात् तिरमा बसेर सब विर् गर्दै थिया खुस् भई ।
पौंच्या श्रीहनुमान् तहीं तिर महाँ आनन्द खूसी रही ॥१३४॥

भेट् भो अङ्गद विरहरू सित तहाँ विस्तार् कुरा सब् गर्न्या ।
अङ्गद् विरहरु खुस् भई पुछरमा पक्रेर चुम्बन् गर्न्या ॥
नाच्या कोहि खुसी भयेर यहि रित् गर्दै ति राम् थ्यैं गया ।
सुग्रिव्को मधुवन् मिल्यो नजिकमा साह्रै खुसी ती भया ॥१३५॥

---

१ होमनाथ—के हुन्छ ।
२ भारतजीवन—परिक्रमे ।
३ होमनाथ—सुने ।
४ ऐजन—तहाँ ।
५ भारतजीवन—नाच्या कोहि त खुस् ।

बिन्ती अङ्गद ध्यैं गर्न्या पनि तहाँ खाऊँ इ फल् फुल् भनी ।
अङ्गद्ले पनि खाउ जाइ हनुमान्जीका प्रसाद्ले भनी ॥
दीया मर्जि र खाउँ फल् फुल भनी वानर् गयाथ्या जसै ।
चौकी वानर जो थिया सब तहाँ आया र रोक्या तसै ॥१३६॥

रोक्न्या वानरलाइ लात् दिइ पिया मीठो मधूरस् तहाँ ।
यो चुग्ली दधिवक्त्रले लिइ गया सुग्रीवजी छन् जहाँ ॥
सब् विस्तार् दधिमूखले जब गर्न्या लुट्या मधूवन् भनी ।
लुट्पिट्को समचार् सुन्या र पनि रिस् ऊठेन कत्ती पनी ॥१३७॥

भेट्याछन् बुझियो सिता कन न ता लुट्थ्या मधूवन् कहाँ ।
ई बात सुग्रिव गर्दथ्या प्रभुजिले सून्या र सोध्या तहाँ ॥
सीताको पनि नाम् लियेर तिमिले क्या बोल्दछौ बात् भनी ।
सोधी बक्सनु भो र सुग्रिवजिले बिन्ती गर्न्या बात् पनी ॥१३८॥

हे नाथ् ! श्रीमधुवन् थियो अति असल् मेरो बगैंचा तहाँ ।
- ऐल्हे ता हनुमान्हरू बलजफत् आयेर एक् क्षण् महाँ ॥
लूट्याछन् मधुरस् अनेक् तरहका चोकी कुट्याछन् पनी ।
आया आज फिराद गर्न मधुवन् लूट्या र कूट्या भनी ॥१३९॥

---

१ भारतजीवन—खाउ लौ इ । २ भारतजीवन—त ।
होमनाथ—खाउ जाउ ।

सोही बात म गर्दछु रघुपते ! इन्ले सिताजी पनी ।
भेट्याछन् तब पो लुट्या र मधुवन् रोक्ता कुट्याको भनी ॥
यो बिन्ती गरि जल्दि सुग्रिवजिले ती चौकिलाई तहाँ ।
दीया हूकुम जल्दि फर्कि कन गै चॉडै पठाऊ यहाँ ॥१४०॥

आउन्[1] श्रीहनुमान्हरू अब यहीं[2] चॉडो भनी यो जसै ।
दीया निर्भय दी हुकुम् उहि बखत् फर्क्या[3] र दौड्या तसै ॥
मामा सुग्रिवका गया र दधिमुख् हूकुम् सुनाई दिया ।
खूसी भै हनुमान्हरू पनि गया जाहाँ रघूनाथ् थिया ॥१४१॥

राम् सुग्रिव् कन दण्डवत् गरि लिया साम्ने जमिन्मा परी ।
सब् विस्तार् हनुमानले तहिं गऱ्या वृत्तान्त एक् एक् गरी ॥
भेट्याँ आज सिताजिलाइ रघुनाथ् लङ्कापुरीमा गई ।
जस्तै देखि लियाँ सिता कन तसै सानू स्वरुप्को भई ॥१४२॥

पातका अन्तरमा लुकी जननिका साम्ने नजिक्मा रह्याँ ।
जो वृत्तान्त थियो सबै हजुरको त्यै सूक्ष्म रुप्ले कह्याँ ॥
भोकी दुब्लि हजूर दूर रहँदा संझेर साह्रै रुँदी ।
राम् राम् बोल्दि अनाथ् भई कन बहुत् विव्हल् निरन्तर् हुँदी ॥१४३॥

---

१ भारतजीवन—आउनन् ।
२ सोमनाथ—यहाँ ।
३ भारतजीवन—फर्केर ।

अशोक्का वनमा सिसौ पनि छ एक् त्यै वृक्षका बीचमा ।
झुन्डीन्या मतलब् लिई खडि भइन् सुनिन् उसै बीचमा ॥
यो वृत्तान्त सुनी हुकुम् पनि भयो को होस् तँ बोल्छस् कहाँ ।
क्या लूकी कन बोल्दछस् अब न लुक् आईज साम्ने महाँ ॥१४४॥

पायाँ येहि हुकुम् जसै जननिको वानरस्वरुपले गयाँ ।
को होस् भन् भनि सोधि बक्सनु भयो फेर् बिन्ति गर्दो भयाँ ॥
फेर् वृत्तान्त गरी सक्याँ हजुरको औंठी दियाँथ्याँ जसै ।
बर् बर् आँसु खसालनू पनि भयो विश्वास लाग्यो तसै ॥१४५॥

आफ्नु दुःख हवाल् सबै कहनु भो यसता विपत् छन् भनी ।
आउँछन् रघुनाथ् भनेर बहुतै मैले बुझायाँ पनी ॥
.... .... ....
.... .... .... ॥१४६॥

बातचित् गरी जब यता तिर फिर्न लाग्याँ ।
विश्वास पार्न जननी सित चीज माग्याँ ॥
चूडामणी दिनु भयो सिरमा रह्याको ।
कागको कुरो कहनु भो अघि जो भयाको ॥१४७॥

---

१ होमनाथ—यहाँ ।
२ यो श्लोकका अन्तिम दुई चरण कुनै पुस्तकमा पनी दिइयेका छैनन् । सं०

लक्ष्मणलाइ अवाच्य बात् भनि बहुत् बोल्याँ कछु[1] ता पनी ।
त्यो रिस् लक्ष्मणले कदापि न लिउन् येसो भनीथिन् भनी ॥
हात् जोरी कन बिन्ति खुप् गरि दिया येती हुकुम् भो जसै ।
सब् वृत्तान्त सुनी विदा पनि भयाँ फर्केर आयाँ तसै ॥१४८॥

माई सीत विदा भई जब फिर्याँ मन्‌मा लहड् यो गयो ।
रावण्‌लाइ न भेटि जाँ म कसरी भन्न्या विचार् यो भयो ॥
भेटी रावणलाइ अर्ति पनि दी फिर्नू असल् हो भनी ।
फर्की ध्वस्त गर्‍याँ अशोक वनको मार्‍याँ अनेक विर् पनी ॥१४९॥

कान्छो रावणपुत्र अक्षयकुमार् मार्‍याँ र रावण् जहाँ ।
थीयो ताहि गयाँ भन्न्याँ हित वचन् टेरेन केही तहाँ ॥
गर्थ्यो बक्‌बक बात् अनेक् तरहका मैले सुसूनै गनी ।
रावण् कै अघि खाग् गरी सकि दियाँ पोलेर लङ्का पनी ॥१५०॥

येती कर्म[3] गरी यहाँ हजुरमा आयाँ म ऐल्हे भनी ।
येती बिन्ति गरी खडा भइ रह्या ताहाँ ति सेवक् पनी ॥
श्रीराम्‌ले पनि काखमा लिनु भयो सर्वस्व दिन्छु भनी ।
बात्‌ले चित्त बुझाइ बक्सनु भयो सर्वस्व यै हो भनी ॥१५१॥

---

१ होमनाथ—बोल्याकि छ ।　　३ कर्म—बनी ।
२ टेरेन—थाम् ।

मैले खुस् भइ काख् दियाँ पनि भन्या फेर् दीनु बाँकी रती ।
केही चिज् रहँदैन सब् मिलि गयो यो बात् बताऊँ कती ॥
काख्मा राखि हुकुम् भयो यति जसै खूसी हनूमान् भया ।
आनन्दाश्रु गिराइ भक्तिरसले हाजिर् हजुर्मा रह्या ॥१५२॥

धन्य हुन् इ हनुमान् इ सरीको ।
कोहि छैन अरु भक्त हरीको ॥
भक्ति खुप् गरि त काख् पनि पाया ।
लोकमा अधिक धन्य कहाया ॥१५३॥

जस्को पुजा तुलसिपत्र चढाइ गर्छन् ।
उस्ता पनी त भवसागर पार तर्छन् ॥
ई ता उनै प्रभुजिका दुत हुन् त काहाँ ।
सक्नू छ वर्णन गरी इनको त याहाँ ॥१५४॥

## इति श्रीसुन्दरकाण्ड

---

१ भारतजीवन, नेपाल—मात्र । अध्यात्म-रामायण—सत्पादपद्मयुगलं तुलसीदलाद्यैः सम्पूज्य विष्णुपदवीमतुलां प्रयान्ति । २ होमनाथ—पारि ।

# श्रीयुद्धकाण्ड

लङ्कापुरी सकल खाग् गरि सैन्य मारी ।
फेरी समुद्र सहजै तरि आइ वारी ॥
सीताजिको जव सबै समचार् बताया ।
श्रीरामले ति हनुमान् कन खुप् सहाया ॥ १ ॥

भन्छन् श्रीरघुनाथ अहोइ हनुमान्ले खुप् ठुलो काम् गऱ्या ।
एक्लै गै कन रावणादि विरको सेखी इनैले हऱ्या ॥
यस्तो क्षार समुद्र कूदि कन फेर् खाग् गर्नु लङ्का अनी ।
को सक्ला सव डर्दछन् इ जति छन् इन्द्रादि यौता पनी ॥ २ ॥

सुग्रिव्का सव मन्त्रिमा ई सरि को होला न कोही भयो[1][2] ।
छोरो रावणको निभाइ कन तौ साम्ने उसैका गयो[3] ॥
सेवक्ले जति गर्नु पर्छ तति सव् सेवा इनैले गऱ्या ।
सीताको समचार् वतायर यहाँ हाम्रो ठुलो ताप् हऱ्या ॥ ३ ॥

---

१ सबै पुस्तकमा "मन्त्रि भाइ" भन्ने पाठ छ तर सो पाठ निरर्थक हुँदा माथीको पाठ दिएको । स०

२ नेपाल—भया ।

३ मवई—ये ।

४ नेपाल—गया ।

सुग्रिव्का इ वचन् सुनी हुकुम भो श्रीरामजीको तहाँ ।
जुन् पाठ्ले तरिइन्छ सो गरियला कस्तो छ लङ्का महाँ ॥
लङ्काको अकबाल्[1] सुनौं त पहिले कस्तो छ तेस्को तखत् ।
सब् बूझी कन पो गया जितियला यै हो विचार्को बखत् ॥ ८ ॥

ठाकुर्का इ वचन् सुनेर हनुमान् ताहाँ अगाडी सरी ।
भक्तीले गरि अञ्जली पनि बहुत् नूहेर सिर्मा धरी ॥
गर्छन् बिन्ति जगत्पते ! रघुपते ! लङ्कापुरी सुन्दरी ।
देखिन्छे जति देख्तछन् ति सबको लिन्छे सबै मन् हरी ॥ ९ ॥

त्रीकुट् पर्वतका उपर् छ सुनको पर्खाल् छ चारौं तरफ् ।
थामै छन् मणिका जउन् घर महाँ देखिन्छ तिन्को हरफ् ॥
एक् खावा त समुद्र भो अरु नजिक् अर्को खन्याको पनी ।
पर्खाल्का नजिकै छ वेस् वरिपरी वैरी न आउन् भनी ॥ १० ॥

घर पनि सुन कै छन् गल्लि जो छन् सुनैका ।
मणिजडित हुनाले झन् असल् छन् कुनैका ॥
घुमि घुमि कन हेर्‍याँ सब् बर्ँचा तलाऊ ।
सहज सित कसैको केहि लाग्दैन दाऊ ॥ ११ ॥

---

१ नैपाल—अहवाल् ।
२ बर्ई—दीयेर

ढोका छन् चार् सहर्का तहिँ विरहरुको फौज् छ ठूलो बस्याको ।
जो ताहाँ पख्न जाला उ सित तहिँ लडी मर्न कम्मर् कस्याको ॥
एक् अर्बुद् पूर्व ढोका तिर अति बलवान् जङ्गि पाले बस्याका[1] ।
राक्षस् छन् हात्ति घोडा रथ अरु खजना ली खडा भै रह्याका ॥ १ २ ॥

ढोका पीछे यसै रित् सित्त खडि पहरा छन् सदा नित्य ताहाँ ।
येती जम्मा छ फौज् सब् भनि कन त खबर् पाइ सक्नू छ काहाँ ॥
यस्तो मजबूतिको फौज् छ त पनि उहि फौज् ध्वस्त चौथाइ पार्‍याँ ।
लङ्का पोलेर सब् खाग् गरि कन सहजै वैरिको[2] सेखि झार्‍याँ ॥ १ ३ ॥

यहिं ढिल किन स्वामित् ! जाउँ सागर् छ जाहाँ ।
कछु ढिल तहिँ होला तर्नु पर्‍यो छ ताहाँ ॥
यति विनति हनूमान्ले गर्‍याथ्या जसै ता ।
हुकुम पनि ति सुग्रिव्लाइ भै गो तसै ता ॥ १ ४ ॥

हे सुग्रीव सखे ! असल् विजय यो[3] मुहूर्त ऐल्हे पर्‍यो ।
येस् सायेत महाँ मुहूर्त न चुकी जसले त साइत् गर्‍यो ॥
तेसले जित्छ अवश्य यै बखतमा सायेत् इ फौज्ले गरुन् ।
मेरो दक्षिण नेत्र फुर्छ बढिया लक्षण् छ धिर् मन् धरुन् ॥ १ ५ ॥

---

१ नेपाल, भारतजीवन—भयाका । अध्यात्मरामायण—तिष्ठन्त्यर्बुदसंख्याकाः आज्ञामपि तथैव च ।

२ नेपाल, भारतजीवन—वीरको ।

३ होमनाथ—विजयको । अध्यात्मरामायण—इदानीमेव विजयो मुहूर्तः परिवर्तते ।

रावण्लाइ कुलै समेत् क्षय गरी ल्याइन्छ सीता पनी ।
वानर्को जति फौज् छ सब् अब चलोस् लीयेर लङ्का भनी[1] ॥
लक्ष्मण् अङ्गदमा चढुन् दुइ जना हामी हनूमान् महाँ ।
सुग्रिव्लाइ यती हुकुम् पनि गर्‍या प्रस्थान् प्रभूले तहाँ ॥ १६ ॥

राम् सुग्रिव् हनुमान् महाँ चढि चल्या लक्ष्मण्जि अङ्गद् महाँ ।
वानर्को सब फौज् चल्यो पृथिवि सब् छोपेर हिड्दा तहाँ ॥
चाहींदेन रसद् सबै विरहरू खान्छन् फलै फुल् फगत् ।
गर्जन्छन् सब विर्हरू तस बखत् सब् काम्न लाग्यो जगत् ॥ १७ ॥

रात्दिन् फौज चल्यो टिकेन बिचमा कोही[2] कतै एक् घरी ।
विन्ध्याचल्[3] कन नाघि फेरि मलयाचल् नाघि यस्तै[4] गरी ॥
पोंच्या क्षार समुद्रका तिर महाँ डेरा प्रभूको पर्‍यो ।
वानर्को त्यति फौजले खचित भै सारा किनारा भर्‍यो ॥ १८ ॥

वानर्को सब फोज् तहाँ हुकुमले तिर्मा जसै ता बस्यो ।
सागर् तर्न उपाय केहि न हुँदा मन्मा ठुलै[5] ताप् पस्यो ॥
भन्छन् विर्हरु यो कसो गरि तरौं साहै कठिन् भो यहाँ ।
यो सागर् न तरी त जान न हुन्या हीँडेर लङ्का महाँ ॥ १९ ॥

---

१ नेपाल—छायेर लङ्का बनी । भारतजीवन—छायेर कालन् बनी । शुद्ध पाठ ता छायेर कालै बनी हो कि ? स०

२ नेपाल, भारतजीवन—कही । अध्यात्म रामायण—गता चमूर्दिवारात्र क्वचिन्नासज्जत क्षणम् ।
अध्यात्मरामायण मा सह्याद्रि तथा मलयाचल छुट गयेको कुरा छ । गत्वा चमूर्दिवारात्र क्वचिन्नासज्जत क्षणम् ॥ काननानि विचित्राणि परयन्मलयसह्ययो । यो कारणले सह्याचल पाठ हुनु उपयुक्त छ । स०

४ होमनाथ—यस्तो ।

५ ऐजन—ठुलो ।

सब् राक्षस् कन मार्दथ्यौं यहि बखत् सागर् तरी पार् गया ।
आपस्मा यति बात् परस्पर गरी जम्मा प्रभू थ्यैं भया ॥
सीताजी कन संझि संझि रघुनाथ् ज्ञानस्वरूपी पनी ।
लाग्या गर्न विलाप् अनेक् तरहले सीते ! कहाँ छौ भनी ॥ २० ॥

राम्को नाम फगत् लिन्या कन पनी सब् दुःख ताप् टर्दछन् ।
आफैं श्रीरघुनाथलाइ पनि क्या सन्ताप् कतैं पर्दछन् ॥
सच्चित् रुप् परिपूर्ण अद्वितिय एक् आत्मा स्वरूपी पनी ।
गर्छन् मानुष भै[1] लिला पनि अनेक् सूखी[2] र दुःखी बनी ॥२१॥

कुदि कुदि सब लङ्का पोलि फेर् पुत्र मारी ।
बहुत विरहरूको सैन्य खुप् ध्वस्त पारी ॥
गरि कन सब भेट्घाट् फेर् हनूमान् फिर्याको ।
सुनि कन तहिं रावण् भै गयो नुर् गिर्याको ॥ २२ ॥

उहि बखत महाँ त्यो मन्त्रणा गर्नलाई ।
सब विर कन ताहाँ डाक्न जल्दी पठाई ॥
वरि परि सब राखी मन्त्रि थ्यैं भन्न लाग्यो ।
कसरि सहज उस्की त्यो हनूमान भाग्यो ॥ २३ ॥

---

१ सोमनाथ—भै । २ नेपाल, भारतजीवन—सुखी ।

अब त जसरि मेरो' हुन्छ सो हित् चिताऊ ।
बुझि कन सबले एक् मन्त्रणा लौ बताऊ ॥
तिमि सब कन नाघी काम सिद्ध्याइ भाग्यो ।
म कन त हनुमान्‌का कामले लाज लाग्यो ॥ २४ ॥

यति हुकुम सुनी सब् घोचिया झैं ति जाग्या ।
अघि सरि सरि बिन्ती सेखिका गर्न लाग्या ॥
किन बहुत हजुर्‌को तेहि राम् देखि शङ्का ।
कसरि सहज जित्‌ला रामले आज लङ्का ॥ २५ ॥

कति विनति गरौं घेर् इन्द्रजित् पुत्र जस्‌को ।
छ त कसरि ति जित्छन् पुग्छ जोर् आज कस्‌को ॥
फगत हजुरका एक् पुत्रले इन्द्र जीत्या ।
यहि बुझि अरु दिग्पाल्‌का समेत् सेखि बीत्या ॥ २६ ॥

अधिपति मय हुन् सब् दैत्यका सो डरैले ।
खुरु खुरु यहिं आई छोरि सुम्प्या करैले ॥
अरु अब कहिं छन् क्या विर् हजूरै सरीका ।
सब विर वश मै छन् ई तिनै लोक् भरीका ॥ २७ ॥

अलिकति हनुमान्‌ले जो यहाँ वीर मान्यो ।
कुदि कुदि सब लङ्का पोलि जो ध्वस्त पान्यो ॥
उ त फगत यसैले गर्न क्या सक्छ मन्दा ।
चुकि दिइ गरि हाल्यो फेरिको क्या छ धन्दा ॥ २८ ॥

हुकुम दिनु हवस् लौ दस् दिशा वीर जाऔं ।
जति जति अघि सर्छन् मारि तिन्लाइ आऔं ॥
सकल पृथिविमाका वानरै छुट्टि गर्छौं ।
सकल हजुरको ताप् एक् क्षणैमा त हर्छौं ॥ २९॥

येती गर्व गरी सबै ति विरले विन्ती गर्‍याको सुनी ।
मेरो मत् पनि बिन्ति गर्दछु भनी आफ्ना मनैले गुनी ॥
गर्छन् बिन्ति ति कुम्भकर्ण विरले हे नाथ् ! लियौ क्या मती ।
सीता क्यान हर्‍यौ चुक्यौ तिमि यहाँ कुन् हुन्छ तिम्रो गती ॥३०॥

श्रीराम्चन्द्रजिले अवश्य अघि नै देख्थ्या त एक् बाण् धरी ।
तिम्रो प्राण लिन्या थिया तहिँ[1] कहाँ बाँच्थ्यौ तिमी एक् घरी ॥
सीता चोरि हर्‍यौ र पो तिमि बच्यौ को टिक्छ साम्ने परी ।
तेस्को फल् अब पाउँछौ[2] अब भन्या मार्छन् कुलै साफ् गरी ॥३१॥

राम् जो हुन् प्रभु हुन् अनन्त अधिनाथ् चौधै भुवन्का धनी ।
लक्ष्मी हुन् जगदम्बिका इ[3] इनकी पत्नी सिताजी पनी ॥
सब् राक्षसहरु नाश् गराउन यहाँ सीता तिमीले हर्‍यौ ।
साँचो हुन् इ कुरा अवश्य तिमिले आफ्नै बहुत् नाश् गर्‍यौ ॥३२॥

---

१ सोमनाथ—नाहिं ।
२ पेजन—तिमि भोग्दछौ ।
३ पेजन—त ।
४ नेपाल—साचै ।

जुन्[1] काम् गर्नु उचित् थियेन उहि काम् ऐल्हे गर्‍यौ ता पनी
सब् हाम्रा भरले गर्‍यौ अधिक विर् छन् भाइ छोरा भनी
लड्छौं निश्चय भाइवर्ग पनि सब् हामी जती छौं यहाँ
स्वस्थै भै रहनू हवस् हजुरले शोक् गर्नु पर्लो कहाँ ॥३३

तेस् कुम्भकर्ण विरले सब यो भन्याको ।
श्रीरामलाइ परमेश्वरमा गन्याको ॥
सून्यो र इन्द्रजित भन्छ हुकुम् म पाऊँ ।
सेना समेत् सहज राम् कन मारि आऊँ ॥ ३४ ॥

यसतै तहाँ विरहरू सब बिन्ति पार्थ्या ।
केवल् गफै गरि मुखै तरवार मार्थ्या ॥
श्रीरामभक्त ति विभीषण तहिं आई ।
बिन्ती गर्‍या बहुत हित् मनले चिताई ॥ ३५ ॥

श्रीरामजी सित विरोध् किन हो गर्‍याको ।
सीताजिलाइ तिमिले किन हो हर्‍याको ॥
श्रीरामचन्द्र कन सक्तछ जिल कस्ले ।
मार्‍या खर त्रिशिर दूषण वीर जस्ले ॥ ३६ ॥

---

१ नेपाल—जुन्। २ ऐजन—जुन्।

ठूला भन्नु इ कुम्भकर्ण विर हुन् क्या चल्छ इन्को पनी ।
सेखी गर्दछ इन्द्रजित् न बुझि यो राम्लाइ मार्छु भनी ॥
सेखी गर्नु जती छ सब् यहिँ गरुन् को टिक्छ साम्ने परी ।
सब् राक्षसहरु नाश् हुनन् जब तहाँ चेत्लन् चुक्याको घरी ॥ ३७ ॥

सीताजी ग्रह तुल्य भै कन सबै खाग् गर्न आँटिन् यहाँ ।
यो प्राणान्त बखत् भयो अझ पनी चेत् छैन चेत् गो कहाँ ॥
बाँच्नाको यदि मन् छ पो त महाराज् ! श्रीरामजी थ्यैं गई ।
सीता सुम्पि दिनू यही बखतमा सोझो र साम्ने भई ॥ ३८ ॥

श्रीराम्चन्द्रजि फौज् लिई कन यहाँ आई न लड्दै गया ।
आयो आज शरण् पऱ्यो भनि बहुत् गर्नन् प्रभूले दया ॥
चाँडै आज सिताजि सुम्पनु हवस् सीताजि लङ्का रही ।
बाँची सक्नु कदापि छैन अरु थ्यैं काहीं शरण्मा गई ॥ ३९ ॥

हित् अम्रित् सरिको विभीषणजिको सून्यो वचन् यो जसै ।
लिन्थ्यो त्यो इ कुरा कहाँ अधिक झन् रावण् रिसायो तसै ॥
लाग्यो भन्न रिसाइ आज सुन यो शत्रू सरीको भयो ।
मेरा शत्रु ति रामचन्द्र सित खुप् प्रित् बस्न यस्को गयो ॥ ४० ॥

आफ्नू ज्ञाति बढ्यो भन्या अरु सबै ज्ञाती गिरोस् यो भनी ।
भन्छन् निश्चय भन्दथ्या उहि छटा यस्ले जनायो पनी ॥
ऐल्हे मारि दिन्या थियाँ अरु भया भाई भयो क्या गरू ।
राक्षस्का कुलमा अधम् यहि भयो धिक्कार दिन्छु बरू ॥ ४१ ॥

मेरा आज नजीकमा रहनको लायेक् तँ छैनस् भनी ।
धिक्कार् हो तँ अधम् भइस् भनि बहुत् धिक्कार दीयो पनी ॥
धिक्कार्को यति बात् सुन्या र झटपट् श्रीराममा मन् दिई[1] ।
आकाश्मा झटपट् कुदी कन गया चार् मन्त्रि साथ्मा लिई॥ ४२ ॥

लाग्या रावणलाइ भन्न महाराज् ! हीतै भन्याँ ता पनी ।
धिक्कार पो तिमिले गर्‍यौ न बुझि झन् शत्रू त हो यो भनी ॥
दाज्यू हौ पितुतुल्य छौ यति सही ऐल्हे फरक् लौ भयाँ ।
खूसी भै तिमि राज् गर्‍या म त उनै राम्का शरणमा गयाँ ॥ ४३ ॥

काली हुन् जगदम्बिका भगवती सीताजि राम् काल हुन् ।
भूभार् हर्न निमित्त यो छ अवतार् बाँच्न्या छ पापी कउन् ॥
श्रीराम्को मतलब् छ मार्न तब पो फिर्दैन तिम्रो मती ।
काल् रुप् श्रीरघुनाथको अरु यहाँ को बुझ्न सक्छन् गती ॥ ४४ ॥

सब् राक्षस्कुलको हुन्या छ अब नाश् छोड्छन् प्रभूले कहाँ ।
तिम्रो नाश् कसरी म देखुँ म त लौ जान्छु प्रभू छन् जहाँ ॥
खूसी भै चिरकाल तक् गर यहाँ राज् खुप् चिरायू भया ।
येती बिन्ति गरी बिभीषण सबै छाडेर राम् ध्यैं गया ॥ ४५ ॥

---

१ भारतजीवन—धिक्कार हो तँ अधम् भइस् भनि बहुत् श्री राममा मन् दिई ॥ २ नेपाल, हेमनाथ—धिन् ।

चार् मन्त्री सँग ली विभीषण गया श्रीरामका पासमा ।
वाहाँ जान डराइ सम्मुख भया टाढै ति आकाशमा ॥
हे नाथ ! आज शरण् पऱ्याँ चरणमा आयाँ म सेवक् भनी ।
उच्चा शब्द गरी गऱ्या विनति खुप् वृत्तान्त आफ्नू पनी ॥ ४६ ॥

हे राम् ! रावण कुम्भकर्ण विरको भाई विभीषण् म हूँ ।
रावण् आज अधम् भयो हजुरमा विस्तार् कहाँ तक कहूँ ॥
सीता क्यान हऱ्यौ फिराउ भनि खुप् हीतै भन्या ता पनी ।
झन् धिक्कार् गरि खड्ग ली कन उठ्यो काटछु तँलाई भनी ॥ ४७ ॥

यस्तो रावणले गऱ्यो र रघुनाथ् ! आयाँ हजुरमा म ता ।
संसार् पार् सहजै उतार्छ जसले सो छोडि जानू कता ॥
यस्तो विन्ति सुन्या विभीषणजिको सुग्रीवजीले जसै ।
रावण् कै छल झैं बुझ्या र झटपट् विन्ती गऱ्या यो तसै ॥ ४८ ॥

विश्वास् न मान्नु रघुनाथ् इ त दुष्ट पो हुन् ।
गर्नन् इ औसर पऱ्या हुँदि जीयमा खुन् ॥
मर्जी हवस् इ सब पकडि निभाइ हालुम् ।
भाई म हुँ पनि भन्यो उ छँदै छ मालुम् ॥ ४९ ॥

विश्वास् कत्ति न मानि बक्सनु हवस् सब् दुष्ट पो हुन् इ ता ।
रावण् कै यदि भाइ हो त किन ढिल् मार्नो न मन्छू म ता ॥
जैले पर्दछ छिद्र उस् बखतमा मार्नन् इ दागा गरी ।
मार्नोलाइ हुकुम् हवस् सहजमा मारिन्छ येसै घरी ॥ ५० ॥

मेरो मत् विनती गर्‍याँ हजुरको क्या मत् छ स्वामित् ! भनी।
सुग्रिव्‌को विनती सुनेर रघुनाथ् हाँसेर बोल्या पनी ॥
हे सुग्रीव सखे ! म आँटु त सबै लोक् ध्वस्त ऐल्हे गरी।
फेर् सृष्टी क्षणमा गरूँ सहजमा लाग्दैन एक् काल् घरी ॥ ५१ ॥

तस्मात् भक्त बुझेर निर्भय दियाँ आउन् ति ल्याऊ यहाँ।
उस्[1] माथी पनि शत्रुदल् यदि भया माग्याँ म छोड्‌थ्याँ कहाँ॥
शत्रूका इ त ओरि[2] हुन् तर पनी आया शरण्‌मा यहाँ।
मेरा आज शरण् पर्‍या पनि भन्या तिन्‌लाइ छोड्छु कहाँ ॥ ५२ ॥

एकै बखत्[3] पनि शरण् भनि जो मलाई।
संझेर पर्दछ शरण् त म तेसलाई॥
लिन्छु शरण् यदि उ शत्रु हवस् दयेले।
मेरो व्रतै छ यहि छोड्छु कसोरि ऐले ॥ ५३ ॥

श्रीराम्‌चन्द्रजिको हुकुम् यति हुँदा ल्याया विभीषण् पनी।
पौंचाया रघुनाथका हजुरमा ल्याई[4] इनै हुन् भनी॥
श्रीराम्‌चन्द्रजिको विभीषणजिले पाया र दर्शन् तहाँ।
खुप् साष्टाङ्ग गरी प्रणाम् पनि गर्‍या पस्रेर पृथ्वी महाँ ॥ ५४ ॥

---

१ भारतजीवन, नेपाल—उर।  २ बाई—बेर।
३ देखन—भेट।  ४ नेपाल, भारतजीवन—भएपछ।

दर्शन् श्रीरघुनाथको जब मिल्यो खूसी विभीषण् भया ।
जो ती[१] दुःख थिये[२] विभीषणजिका ताहीं तुरुन्तै गया ॥
सर्वात्मा रघुनाथको स्तुति गऱ्या ईश्वर् इनै हुन् भनी ।
सर्वात्मा रघुनाथ् स्तुती सुनि बहुत् खूसी हुनू भो पनी ॥ ५५ ॥

क्या माग्छौ वर माग दिन्छु म भनी हूकुम् भयेथ्यो जसै ।
भक्ती मात्र थियो वहाँ मन महाँ त्यो भक्ति माग्या तसै ॥
हे नाथ् ! भक्ति रहोस् सदा हजुरमा कैले न विग्रोस् मती ।
छोटै मान्छु म भक्ति देखि अरु चिज् यस्[३] सृष्टिमा छन् जती॥ ५६ ॥

तस्मात् कर्मविनाश गर्न कन एक ध्यान् मात्र तिम्रो हवस् ।
येतीले म कृतार्थ छु विषयसुख् सम्पूर्ण दूरै रहोस् ॥
केवल् भक्ति मिल्या प्रसन्न छु भनी बिन्ती गऱ्याथ्या जसै ।
होला लौ तिमिलाइ भक्ति भनि त्यो दीनू भयो वर् तसै ॥ ५७ ॥

जस्ले यो तिमिले गऱ्यौ स्तुति जती मेरो यती पाठ् गरोस् ।
तेस्लाई[४] यति वर् म दिन्छु सहजै संसारसागर् तरोस् ॥
येती भक्त विभीषणै सित हुकुम् भो फेरि लङ्का महाँ ।
राज् दिन्छू अहिले भनी कन लहड् आयो र मन्मा तहाँ ॥ ५८ ॥

---

१ हीमनाथ—जो ।
२ ऐजन—थियो ( थिया ? )
३ ऐजन—यै ।
४ नेपाल, भारतजीवन—तस्लाई ।

भाई लक्ष्मणलाइ मर्जि पनि भो हे भाइ ! लङ्का महाँ ।
राज् गर्नन् पछि ता पनी म अभिषेक् दीनु छ दिन्छु यहाँ ॥
ल्याऊ जल् तिमि जाउ सागर भनी हुकुम् भयेथ्यो जसै ।
दौडी सागरमा गई क्षण महाँ ल्याई दिया जल् तसै ॥ ५९ ॥

राजा भै तिमिले रहू[१] अब उपर् लङ्कापुरीको भनी ।
श्रीरामचन्द्रजिले विभीषण उपर् दीया अभीषेक् पनी ॥
लङ्काका अधिराज् विभीषण हुँदा सुग्रिवहरू खुस् भया ।
ताहीं सुग्रिवजी विभीषणजिका साम्ने नजिक्मा गया ॥ ६० ॥

खुसी भै कन अङ्कमाल् पनि गरी सुग्रीव भन्छन् तहाँ ।
सेवक् हौं सब रामका तर तिमी छौ मुख्य सब्मा यहाँ ॥
यस् रावण् कन मार्नलाइ महराज् ! साहाय देऊ भनी ।
सुग्रिव्ले यति बात् गऱ्या जब तहाँ बोल्या विभीषण् पनी ॥ ६१ ॥

हे सुग्रिव् महराज् ! सहाय दिनको क्या शक्ति मेरो यहाँ ।
तिन् लोकका अधिनाथ् परात्म रघुनाथ् आफैं खडा छन् जहाँ ॥
दास् हूँ श्रीरघुनाथको म गरुँला सेवा तँ भर्सक् गरी ।
यस् तैं बात्चित गर्दथ्या दुत तहीं आये अगाडी सरी ॥ ६२ ॥

---

१ नेपाल, भारतजीवन—छ ।
२ हीरानाथ—रहँ ।
३ हीरानाथ—भइ बा । अध्यात्मरामायण—
[illegible]

रावणको शुक दूत त्यो अघि सरी सुग्रीव साम्ने भई ।
वाहीं जान त डर् भयो र डरले आकाश बिच्मा रही ॥
लाग्यो सुग्रिवलाइ भन्न महराज् सुग्रिव् ! खराबी भयो[1] ।
राम् लक्ष्मण् सितको मिलाप् म सितको वैरी हुन्या मन् गयो[2] ॥६३॥

भाई हो[3] मितको[4] जनाउनु असल् सम्झा तँ जा लौ भनी ।
हुकुम् रावणको भयो र अहिले याहाँ म आयाँ पनी ॥
तस्मात् रावणको हुकुम् सुन[5] तिमी क्या काम आयौ यहाँ ।
सब् लस्कर् लिइ फर्कि जाउ तिमिले फेर् राजधानी महाँ ॥६४॥

लङ्का यो जिति सक्नु छैन अहिले इन्द्रादिले ता पनी ।
वानर् पो तिमि हौ त क्या गरुँ कुरा यो स्थान् जितौला भनी ॥
सीता जो[6] अहिले हर्‍याँ त मइले श्रीरामकी पो हर्‍याँ[7] ।
भाई हौ मितका विरोध् न गर यो तिम्रो विराम् क्या गर्‍याँ[8] ॥६५॥

मेरै[9] भाइ समान हौ भनि बहुत् हित् जानि अर्ती दियाँ ।
जो गर्छौ तर फर्कि जाउ म त हित् गर्दैछु गर्दै थियाँ ॥
यसतो रावणको हुकुम् छ महराज् ! येती भनेथ्यो जसै ।
पक्र्या वानरले तँ खैंचि कन खुप् हान्या मुठीले तसै ॥६६॥

---

१ बबई—भयौ ।
२ भारतजीवन, नेपाल—गन्यो । बबई—गन्यौ ।
३ होमनाथ—हौ ।
४ ऐजन—मितवा ।
५ नेपाल, भारतजीवन—सुनि ।
६ ऐजन—सीताजी ।
७ ऐजन—हरें ।
८ ऐजन—गरें ।
९ नेपाल, भारतजीवन—मेरो ।
१० होमनाथ—र ।

वानर्ले बहुतै फजित् जब गऱ्या हे राम्! मऱ्याँ लौ भनी।
श्रीराम्चन्द्र सुनुन् भनेर शुकले साह्रै करायो पनी॥
दुत् हूँ मार्न उचित् त होइन प्रभो[1]! बिन्ती गरेथ्यो जसै।
कुट्नू छैन भनी हुकुम् हुन गयो सून्या र[2] छोड्या तसै॥६७॥

वानर् देखि छुट्यो जसै उहि वखत् कूदेर आकाश् गयो।
क्या उत्तर् दिनु हुन्छ पाउँ म जवाफ् जान्छु म भन्दो भयो॥
यस्को सुग्रिवले जवाफ् तहि दिया मित् दाज्यु होस् ता पनी।
वाली झैं गरि मारुँला अधम होस् भन्दीन दाज्यू पनी॥६८॥

श्रीराम्चन्द्रजिकी सिता हरि कहाँ उम्केर जालास् उसै।
यस्तै रावण ध्यैं भन्यास् भनि भन्या सुग्रीवजीले तसै॥
यस्तो सुग्रिवले जवाफ् जब दिया राम्को हुकुम् भो तहाँ।
पक्डुन् वानरले न छोड[3] अहिले क्यै दिन् रहोस् यो यहाँ॥६९॥

श्रीराम्चन्द्रजिको हुकुम् यति हुँदा त्यो शूक वन्धन् पऱ्यो।
यस् भन्दा अघि आइ शार्दुल फिऱ्यो विस्तार् यसैले गऱ्यो॥
विस्तार् शार्दुल देखि रामवलको सून्यो र रावण् पनी।
चिन्तामा परि गै गयो अति ठुलो आयेछ लस्कर् भनी॥७०॥

---

१ नेवल—दूत् हूँ मार्न उचित् त होइन भनी। २ सोमनाथ—सुनेर।
अध्यात्मरामायण—न छुट्न् भनि पक्रन्द ३ पैसन—छाड।
बानरन् बाश्य भयो।

यै बिच्मा रघुनाथ् रिसाउनु भयो आयेन सागर् भनी ।
लाल् लाल् नेत्र गराइ लक्ष्मणजिका साम्ने हुकुम् भो पनी ॥
हे भाई ! तिमि हामिलाइ यसले सामान्य मानिस् गनी ।
भेटै आज गरेन हेर तिमिले यस्को तमासा भनी ॥ ७१ ॥

सागरशोषण गर्नलाइ धनु ली बाण् खैंचनू भो जसै ।
कामिन् भूमि पनी भयङ्कर स्वरुप् राम्लाइ देख्ती[1] तसै ॥
चार् कोस् तक् त समुद्रको जल पुग्यो दस् दिक् अध्याँरा भया ।
जो जन्तू जलमा थिया ति पनि ता सब् खल्बलाई गया ॥ ७२ ॥

यस्तो देखि डराइ सागर तहाँ सुन्दर् स्वरुप् एक् धरी ।
भेटी खातिरलाइ रत्नहरु बेस् लीयेर झटपट् गरी ॥
श्रीराम्चन्द्रजिका गया शरणमा भेटी अगाडी धरी ।
पाऊमा परि दण्डवत् पनि गऱ्या सब् सेखि सान् दुर् गरी ॥ ७३ ॥

हात् जोरी स्तुति बिन्ति धिर्[2] गरि गऱ्या हे नाथ् ! म हूँ जड्[3] यसै ।
सीतानाथ् प्रभुलाइ जानु कसरी क्यै चेत् न पाई उसै ॥
चेत् ऐले प्रभुले दिंदा हजुरमा आई शरण्मा पऱ्याँ ।
रस्ता दिन्छु दया रहोस् म छु अनाथ् हात् जोरि बिन्ती गऱ्याँ॥ ७४ ॥

---

१ सोमनाथ—देखिन् ।
२ धेर (?) सं०
३ नेपाल—जल् । भारतजीवन—म हुन् ज्याल् ।

अध्यात्मरामायण—जडोऽहं राम ते सृष्टः सृजता निखिलं जगत् ।

सागर्‌का इ वचन् सुनी हुकुम भो साँचो भन्यौ ता पनी ।
बाण्‌को थान् त खटाउनाकन पर्‍यो यस्‌लाइ लौ हान् भनी ॥
मेरो[1] बाण् त अवश्य काम न गरी फिर्दैन ऐल्हे यसै[2] ।
ज्यान् राख्छौं[3] त अवश्य देउ बदला टर्दैन यो बाण् कसै ॥ ७५ ॥

श्रीराम्‌चन्द्रजिको हुकुम् यति सुनी हात् जोरि बिन्ती गर्‍या ।
पापी छन् द्रुमकुल्यमा अहिर हुन् उत्तर् दिशामा पर्‍या ॥
ठाकुर्‌का यहि बाणले जति ति छन् पापी सबै नाश् गरोस् ।
यस् कामले म अनाथ् गरिब् हजुरका दास्‌को सबै ताप् हरोस्॥ ७६ ॥

यति विनति गर्‍याको सूनि खुप् हर्ष मानी ।
सकल हरि दिनू भो तेहि बाण् जल्दि हानी ॥
रिस सित गइ बाण्‌ले पापिको नाश् गराई ।
सकि कन फिरि ठोक्रैमा पर्‍यो बाण आई ॥ ७७ ॥

यै बिच्‌मा ति समुद्रले चरणमा पसेर बिन्ती गर्‍या ।
कीर्ती खुप् रहन्याछ सेतु बलियो हालेर लस्कर् तर्‍या ॥
सेतू बाँधनमा समर्थ नल छन् इन्‌ले त वर्‌दान् पनी ।
पायाको छ इ विश्वकर्मसुत हुन् बाँधुन् इ सेतू भनी ॥ ७८ ॥

---

१ नेपाल, भारतजीवन—मेरा ।
२ बम्बई—उसै ।
३ भारतजीवन—राखू ।

येती बिन्ती गरेर पाउ परि फेर् सागर् अदृश्यै भया ।
सागरको विनती सुनी नल पनी रामका हजुरमा गया ॥
हुकुम् भो नललाइ सेतु तिमिले चॉडै बनाऊ भनी ।
लस्कर् साथ लिया र जल्दि नलले सेतू बनाया पनी ॥७९॥

खुसि भइ नलले सब् वीरको तेज् जगाई ।
वरि परि जति छन् सब् वृक्ष पर्वत् मगाई ॥
अधि सरि कन सेतू बॉध्न लाग्या जसै ता ।
शिव भनि रघुनाथ्ले मूर्त्ति थाप्या तसै ता ॥ ८० ॥

रामेश्वर् भनि नाम् चलोस् अब उपर् सङ्कल्प याहॉ लिई ।
गङ्गाजल् लिन काशि गै कन उ जल् ल्याई नुहाई दिई ॥
फ्यॉकला कामरु त्यो समुद्रजलमा जस्ले बगोस् यो भन ।
त्यो जन् मुक्त हवस् भनेर रघुनाथ्को यो हुकुम् भो पनी ॥८१॥

बॉध्या सेतु छपन्न कोस पहिले दिन् दोसरा दिन् असी[४] ।
कोस् चौरासि सक्या तृतीय दिनमा कम्मर् सबैले कसी ॥
कोस् अठ्ठासि सक्या चतुर्थ दिनमा बॉकी बयानब्बे कोस् ।
पॉचौ दीन महॉ सक्या नजर भो निस्केन एक् कॉहि दोष् ॥८२॥

---

१ बबई—बनाये ।
२ होमनाथ—पनि ।
३ नेपाल—दिई ।
४ होमनाथ—दिन् दोसरामा असी ।

तेही मार्ग गरेर फौज् सब तर्‍यो ढाक्यो त्रिकुट् पर्वतै।
टापू ढाकि दियो रहेन बिचमा खाली भन्याको कतै॥
भाईलाइ चढाइ अङ्गद महाँ आफू हनूमान् महाँ।
चढ्नू भो रघुनाथ् र जानु पनि भो थियो जगा उच् जहाँ[1] ॥८३॥

ताहीँ गै कन त्यो विचित्र नगरी लङ्कै[2] नजर् भो जसै।
त्यो रावण् पनि कौसिमा गइ तमास् हेर्थ्यो नजर् भो तसै॥
यै बिच्मा शुकलाइ छोडि दिनु भो दौडेर त्यो शुक् गयो।
रावण् सीत तुरन्त गै कन सबै विस्तार गर्दो भयो॥८४॥

ऐह्ले हे महराज् ! गयाँ हजुरको हूकुम् हुनाले तहाँ।
बाँध्या वानरले पर्‍याँ सकसमा आऊँ कसोरी यहाँ॥
ऐह्ले पो रघुनाथका हुकुमले छोडी दिया जा भनी।
बाँच्या बल्ल भनेर हर्ष सित खुप् दौडेर आयाँ पनी॥८५॥

आयो फौज् रघुनाथको अति ठुलो याहीँ समुद्रै तरी।
जीती सक्नु कठिन् हुन्या छ बलले ऐह्ले लडाइँ गरी॥
सीताजी लगि रामका शरणमा की आज पर्नू हवस्।
लड्नै मन् छ भन्या तुरन्त अब लौ सङ्ग्राम गर्नू हवस्॥८६॥

---

१ नेपाल, भारतजीवन—थियो जगा उँचमा। २ होमनाथ—लङ्का।

रामको एक् समचार् म भन्दछु हरिस् सीता कउन् मत् लिई ।
सङ्ग्राम् गर्न अगाडि सर् बखत भो साम्ने मुहुँडा दिई ॥
भोली ध्वस्त गराउँछू अघि खबर् दीयाँ उचित् हो भनी ।
हाँकी भन्छु तँलाइ छोडिन यसै मैले न मारी पनी ॥ ८७ ॥

रावण्लाइ सुनाउनू यति थियो हे शुक ! सुनाईं दियास् ।
तैं जान्छस् त पठाउँ को अरु तहाँ तैंले मनैमा लियास् ॥
यसतो श्रीरघुनाथको हुकुम भो भन्नू समाचार् भनी ।
साँचो बिन्ति गरी सक्याँ उ समचार् मैले हजुर्मा पनी ॥ ८८ ॥

मेरो[2] बुद्धि म बिन्ति गर्छु अहिले राम् हुन् जगत्का पती ।
जीती सक्नु कदापि छैन अरुले क्या भो हजुर्को मती ॥
सीता आज लगेर सुम्पनु हवस् राम्का चरणमा[3] परी ।
बाँच्न्या येति उपाय देख्छु नहिं ता आयो मरण्को घरी ॥ ८९ ॥

यो बिन्ती शुकले गऱ्यो र सुनि खुप् रावण् रिसायो तहाँ ।
लाग्यो भन्न मलाइ पाजि शुक यो अर्ती दिन्या भो यहाँ ॥
औरै कोहि भया त निश्चय यहाँ मारी दिन्या पो थियाँ ।
यसका गुण् अघिका थियाँ[4] र गुणले बाँचिस्[5] बिदा जा दियाँ॥ ९० ॥

---

१ नेपाल—अधि ।
२ नेपाल, भारतजीवन—मेरी ।
३ नेपाल—शरणमा । अध्यात्मरामायण—
सीतां समर्प्य रामाय तत्पादानुचरो भव ।
४ होमनाथ—यसको गुण् अघिको थियो ।
५ भारतजीवन—बाँच्यो ।

रावण्ले शुक्लाइ जा भनि तहाँ बीदा जसै ता दियो ।
त्यो शुक् ब्राह्मण होअघी पछि सराप् पर्दा तहाँ त्यो थियो ॥
राक्षस् हूनु सराप् पनी तहिं छुट्यो बीदा तुरुन्तै भयो ।
रावण् देखि बिदा भयो र पछि ता शुक् ब्राह्मणै भै गयो ॥ ९१ ॥

ब्राह्मण हुन् घरमा थिया शुक ऋषी एक् दिन् अगस्ती गया ।
भोजन् दिन्छु अगस्तिलाइ म भनी निम्ता ति गर्दा भया ॥
स्नान्पानी गरि आउँछु तब भनी हींड्या अगस्ती जसै ।
आयो राक्षस वज्रदंष्ट्र रिसले पायो र अन्तर् तसै ॥ ९२ ॥

जस्तो रुप् छ अगस्तिको उहि स्वरुप् धान्यो र बोल्यो पनी ।
मासू खान मलाइ देउ तिमिले इच्छा छ मेरो भनी ॥
यस्तो छल् पहिले गन्यो र पछि फेर् खान्या वखत्मा पनी ।
मासू मानिसको लगी मिसि दियो ठिक् शुक्कि पत्नी बनी ॥ ९३ ॥

भाग् देख्ता ति अगस्तिका रिस उठ्यो दीया सरापै पनी ।
मासू मानिसको दिइस् तँ त भयास् राक्षस् अवश्यै भनी ॥
शुक्ले चिन्ति सच्चा खबर् हुन भयो यो छल् पचाक्को जसै ।
चाँडै छुट्टि हुन्या अगस्ति ऋपिले वेला बताया तसै ॥ ९४ ॥

---

१ होमन्दछ—भदेर ।

हे शुक ! राम् अवतार् हुन्या छ बस लौ रावण् कहाँ गै तहीं ।
राम्को दर्शन पाउला तहिं सराप् छुट्ला न जाऊ कहीं ॥
यस्तो अति अगस्तिको सुनि उसै माफिक् गऱ्याका थिया ।
राम्का दर्शनले सराप् छुटि गयो फेर् वृत्ति आफ्नै लिया ॥ ९५ ॥

रावण्की महतारिको पनि पिता हूँ हित् म भन्छु भनी ।
रावण्का नजिकै गई कन भन्यो हित् माल्यवान्ले पनी ॥
राम् नारायण हुन् सिता पनि उनै लक्ष्मी पनी ज्ञानले ।
सीता सुम्पि दि हाल राख मनमा पूजा गरी ध्यानले ॥ ९६ ॥

उल्का हुन्छ अनेक् अनेक् सहरमा उत्सव् भन्याको'रती ।
काँहीं छैन बताउँ यो म महराज् ! याहाँ हजुर्मा कती ॥
तस्मात् बिन्ति छ यो बहुत् हजुरमा हित् जानि लीनू हवस् ।
सीतानाथ् कन ईश्वरै बुझि सिता सुम्पेर दीनू हवस् ॥ ९७ ॥

यो बिन्ती सुनि माल्यवान् सित बहुत् रावण् रिसायो तहाँ ।
लाग्यो भन्न रिसाइ आज तिमि क्या बोल्छौ बुढा भै यहाँ ॥
क्याले राम् परमेश्वरै भनि भन्यौ मानिस् त हुन् ती पनी ।
लिन्छन् वानरको सहाय कसरी जानूँ त ईश्वर् भनी ॥ ९८ ॥

---

१ भारतजीवन—भयाको । २ सोमनाथ—ति ।

तिम्रा' बात् सुनि चित्त पोल्छ तिमि ता जाऊ घरैमा भनी ।
मन्त्रीवर्ग लगाइ साथ घरमा जल्दी पठायो पनी ॥
रावण् उच्च अटालिमा बसि कती आया बडा विर् भनी ।
हेर्दै लड्न खतम् गरी कन हुकुम् दिन्थ्यो लड्न् विर् भनी ॥ ९९

देख्नू भो रघुनाथले र तहि बाण् छोडी दिनू भो जसै ।
तेस् बाण्ले दस छत्र दस् मुकुट सब् काटी खसाल्यो तसै ॥
आफ्ना छत्र र दस् मुकुट् जब गिऱ्यो लाज् मानि रावण् पनी ।
ओर्ल्यो जल्दि अटालि देखि र गयो हाम्रन् इ फेरी भनी ॥१००

दर्बार् भित्र पसी हुकुम् पनि दियो लौ लड्न जाऊ भनी ।
निस्क्या लड्न भनी प्रहस्तहरु विर् छोपेर भूमी पनी ॥
रॉगा उँट् गदहा र सिंहहरुमा विर् विर् सवारी भया ।
नाना शस्त्र र अस्त्र ली कन अनेक् विर् लड्न जल्दी गया॥१०१॥

चार् ढोका तिर बाट निस्कि कन फौज् साम्ने भयेथ्यो जसै ।
वानर्ले नजिकै गई कन जगा घेरी लिया सब् तसै ॥
रावण्को सब फौज निस्कन तहॉ पायेन ठाउँ पनी ।
गर्जन्छन् सब वीर वानरहरू राम्चन्द्र जित्छन् भनी ॥१०२॥

यस्तै रित् सित घेरि हान्न पनि सब् लाग्या ति वानर्हरू ।
राक्षस्को पनि फौज् हटेन डरले प्राण् त्यज्न लाग्यो बरू ॥
सङ्ग्राम् यस् रितले जसै हुन गयो ताहाँ ति वानर् भन्या ।
श्रीराम्को करुणाकटाक्ष हुन गो[१] अत्यन्त योद्धा बन्या ॥१०३॥

राक्षस् तर्फ भन्या घट्यो बल सबै ठूला ठुला विर् मन्या ।
मान्या वानरले ति राक्षस सबै चौथाइ बाँकी गन्या ॥
आफ्नू फौज् सब नष्ट देखि कन विर् साहै लडाकी सुरो ।
आयो इन्द्रजितै म लड्दछु भनी सर्वास्त्रमाको पुरो ॥१०४॥

वानर्का सब फौजलाइ हतियार् छाडेर मर्दन् गन्यो ।
श्रीराम्ले पनि ब्रह्मपाश् अति ठुलो जान्नै र[२] मान्नै पन्यो ॥
एक् छिन्[३] चुप् रहनू भयो र रघुनाथ् फेरी तयारी भई ।
ऐले मार्दछु मेघनाद् कन भनी साम्ने उसैका गई ॥१०५॥

माग्नू भो धनु देउ लक्ष्मण भनी श्रीरामजीले जसै ।
मार्छन् की भनि मेघनाद डरले फर्केर भाग्यो तसै ॥
भाग्दामा प्रभुजी मुसुक्क मनले हाँसेर भन्छन् अनी ।
यो बच्या पनि जोरि खोज्न म कनै चाहन्छे[५] कच्चा भनी ॥१०६॥

---

१ होमनाथ—छोड्न ।
२ ऐजन—नै ।
३ ऐजन—थनेर ।
४ नेपाल, भारतजैवन—दिन् । अध्यात्मरामायण—
क्षण तूष्णीमुवासाथ ददर्श पतितं बलम् ।
वानराणां रघुश्रेष्ठस्तुकोपानलसन्निभ ॥
५ नेपाल—आउँछ ।

पृथिवितल गिऱ्याका[1] विर् बचाऊनलाईं ।
हुकुम प्रभुजिको भो विर् हनूमानलाई ॥
ढिल न गर हनूमन् ! क्षीर सागर् छ जाऊ ।
तहिं छ अगम पर्वत् द्रोण लीयेर आऊ ॥१०७॥

वखति तहिं छ तेही ख्वाइ यो फौज् बचाऊ ।
यति गरि शुभ कीर्ति दस् दिशामा नचाऊ[2] ॥
हुकुम सुनि तुरुन्तै द्रोण लीयेर आया ।
पृथिवितल[3] गिऱ्याका वीरलाई बचाया ॥१०८॥

यति गरि हनुमान्ले कीर्तिले लोक छाया ।
फिरि लगि उहि पर्वत् द्रोण राखेर आया ॥
जब त वखति पाई होस भो वानरैका[4] ।
तब त भइ खुसालु नाच्न लाग्या सबै ता ॥१०९॥

लाग्यो[5] वानरसैन्य गर्जन यसै बिच्मा र रावण् तहाँ ।
लाग्यो भन्न मलाइ मार्न वलवान् यो शत्रु आयो यहाँ ॥
जाऊ लौ अतिकाय विर्हरु तहाँ खुप् लड्न कम्मर् कस्या ।
मान्यौं छ तिमिलाइ निश्चय न गै याहीं घरैमा बस्या ॥११०॥

---

१ होमनाथ—गिरेका ।
२ पेजन—बचाऊ ।
३ भारतजेवन—वखति लिइ ।
४ हास्तनाथ—वानरै का ।
५ पेजन—लाग्या ।
६ पेजन—यहाँ ।

हूकुम् यो अतिकाय वीरहरुले सून्या र कम्मर् कसी ।
पौच्या वानर सैन्य मार्न हतियार् छोड्या अगाडी बसी[1] ॥
वानर्ले पनि वृक्ष पर्वत मुठी दाह्रा नखैले गरी ।
रावण्का बलको विनाश् गरि दिया ताहाँ[2] अगाडी सरी ॥१११॥

मार्नु भो रघुनाथले कति तहाँ सुग्रीवजीले कती ।
अङ्गद् श्रीहनुमान लक्ष्मण इनै विर्ले गिराया कती ॥
श्रीराम्को करुणाकटाक्ष[3] हुन गै वानर् बलीया भया ।
राक्षस्मा करुणा भयेन र तहाँ राक्षस् मरी गै गया ॥११२॥

सर्वेश्वर् सर्वरूपी प्रभु कन यसरी लड्न पो क्यान पर्थ्यो ।
वाग्वाण् एक् छोडि दीया[4] पनि त ति रिपुको नाश् उसैले त गर्थ्यो ॥
मायाले सच्चिदात्मा नर भइ नरका शुद्ध लीलादि गर्छन् ।
जुन् लीलाले त पापी अधम पतितका पाप सन्ताप हर्छन् ॥११३॥

रावण्ले अतिकाय वीरहरुको[5] फौज् मारियाको जसै ।
सून्यो दुःख पर्‍यो र पूर्ण रिसले खुप् लड्न ऑट्यो[6] तसै ॥
सुन्दर् एक् रथमा चढ्यो र हतियार् शस्त्रास्त्र सब् थोक् लिई ।
लङ्कारक्षण गर्नु इन्द्रजितले भन्न्या हुकुम् यो दिई ॥११४॥

---

१ होमनाथ—पसी ।
२ ऐजन—ताँही ।
३ ऐजन—श्रीरामचन्द्रको कटाक्ष ।
यो पाठ छन्द भङ्ग छ । स०
४ ऐजन—दीदा ।
५ ऐजन—को ।
६ नेपाल—आयो ।

केही फौज् पनि साथमा लिइ गयो श्रीरामजी छन् जहाँ ।
रोक्या वानरसैन्यले र रिसले मार्‍यो अनेक् विर् तहाँ ॥
सुग्रीवादि बडा बडा जति थिया विर् विर् तिनैले पनी ।
जीती सक्नु भयेन सब् कन जित्यो पार्‍यो[1] जमिन्‌मा पनी ॥११५॥

देख्यो विभीषणजिलाइ गदा लियाका ।
श्रीरामका चरणमा दृढ मन् दियाका ॥
झन् मुख्य शत्रु त यहीं छ भनेर ठान्यो ।
साह्रै रिसाइ कन शक्ति उठाइ हान्यो ॥११६॥

आयो शक्ति तहाँ विभीषणजिको प्राण् खैंचन्याँ[2] सुर् गरी ।
लक्ष्मण्‌ले तहिं झट् बचाउनु भयो आफू अगाडी सरी ॥
शक्ती लक्ष्मणलाइ बज्रन गयो[3] लक्ष्मण्‌जि मूर्छा पर्‍या ।
मूर्छा पर्नु कहाँ थियो प्रभुजिले चेष्टा नरैको गर्‍या ॥११७॥

लक्ष्मण्‌लाइ उठाउना कन तहाँ दौडेर रावण् गयो ।
सक्थ्यो रावणले उठाउन कहाँ आश्चर्य मान्दो भयो ॥
लक्ष्मण्‌लाइ उठाउन्याँ वखतमा देख्या उठ्यो रिस् पनी ।
यै बिच्‌मा हनुमान् गया नजिकमा रावण् गिराऊँ भनी ॥११८॥

---

१ नेपाल, भारतजीवन—मार्‍यो । अध्यात्म-रामायण—पातयामास सुग्रीवप्रमुखान्यूथ-नायकान् ।
२ होमनाथ—खैंचने ।
३ ऐजन—गई ।
४ ऐजन—उठाउने ।

हान्या वज्र समानको[1] र मुठिले बज्र्यो मुठी त्यो जसै ।
रावण् हो बलवान् तथापि रगतै छादै गिर्‍यो पो तसै ॥
लक्ष्मण् श्रीहनुमान देखि खुसि भै साहै हलूका भया ।
लक्ष्मणलाइ उठाइ जल्दि हनुमान् रामचन्द्रजी थ्यैं गया ॥११९॥

लक्ष्मण् नारायणै हुन् भनि बुझि डर भै शक्तिले छाडि[2] दीयो ।
रावण् मूर्छा पर्‍याको पनि उठि उ बखत् फेर् धनुर्बाण लीयो ॥
सीतानाथ् श्रीजगन्नाथ् प्रभु पनि हनुमान् वीरका पीठ माहाँ ।
चढ्नू भो लड्न मनसुब् गरि कन लिनु भो फेर् धनुर्बाण ताहाँ ॥१२०॥

टङ्कार् खुप् धनुको गरी हुकुम भो उम्केर जालास् कहाँ ।
तेरा बन्धु निभाइ यो रण महाँ माछ्रे तँलाई यहाँ ॥
रावणले इ वचन् सुन्यो र[3] विजवाफ् भै रिस् मनैमा लियो ।
हान्यो श्रीहनुमानलाइ शरले घाऊ लगाई दियो ॥१२१॥

घाऊ श्रीहनुमानका शरिरमा देख्नू भयेथ्यो जसै ।
साहै रिस् उठि काल रुद्र सरिका ठाकुर् हुनू भो तसै ॥
घोडा रथ् ध्वज सूत शस्त्र धनु सब् छत्रै पताकै पनी ।
काटी रावणलाइ हान्नु पनि भो मूर्छा परोस् यो भनी ॥१२२॥

---

१ भारतजीवन—का ।
२ होमनाथ—छोडि ।
३ पेजन—सुनेर ।

लाग्यो वाण् रघुनाथको र तहिं त्यो मूर्छा तुरुन्तै पऱ्यो ।
हातैमा धनु थाम्न शक्ति न हुँदा हात् देखि भैंमा झऱ्यो ॥
यै बिच्मा सिरको किरीट शरले काटी खसाली दिया ।
रावणका सब सेखि सान् प्रभुजिले खैंचेर ताहीं लिया ॥१२३॥

बाधा रावणलाइ् खुप् सित भयो बीदा प्रभूले पनी ।
ऐल्हे जा घरमा भनी दिनु भयो भोली लडौंला भनी ॥
सेखी सान् रति भर् तहाँ न रहँदा रावण् मऱ्या झैं भयो ।
लाज् मानी कन लड्न शक्ति न हुँदा फर्कैर लङ्का गयो ॥१२४॥

लक्ष्मण् मूर्छित झैं भया र रघुनाथ् शोक् गर्न लाग्या हरी ।
जस्तो मानिस गर्छ सोहि रितका चेष्टा अनेकै गरी ॥
लक्ष्मण्लाइ् बचाउ फेरि हनुमन् ! ली आउ औषध् भनी ।
हुकुम् यो रघुनाथको तहिं हुँदा दौड्या हनूमान् पनी ॥१२५॥

औषध् लीन गया जसै त हनुमान् चाल् पाइ् रावण् पनी ।
रात्रीमा उठि कालनेमि सित गो क्यै विघ्न पारूँ भनी ॥
राजा रावणलाइ् रात्रि बिचमा देख्यो अकस्मात् जसै ।
सम्मान् खुप् गरि ताहिं हाजिर रह्यो त्यो कालनेमी तसै ॥१२६॥

---

१ रोक्नाथ—परस्ले ।

मैले क्या गरुँ कीन आउनु भयो यो राति एक्लै यहाँ ।
यो विन्ती सुनि कालनेमि सित सब् विस्तार् बतायो तहाँ ॥
यस्तो भो सुन कालनेमि अहिले लक्ष्मण् गिऱ्याका थिया ।
तिन्लाई पनि फेर् वचाउँन[1] ठुलो राम्चन्द्रले सुर् लिया ॥१२७॥

औषध् लीन भनेर आज हनुमान् द्रोणाचलैमा गयो ।
औषध् ल्याउन विघ्न पार तिमिले लौ जाउ वेला भयो ॥
मायाले मुनि वेष् धरेर हनुमान्लाई भुलाऊ गई ।
सक्न्या छौ तिमिले भुलाउँन[2] ठुलो[3] योगी सरीका भई ॥१२८॥

यस्तो रावणले हुकुम जब दियो लौ विघ्न गर् जा भनी ।
राम् ईश्वर् बुझि कालनेमि विरले क्यै बिन्ति पाऱ्यो पनी ॥
येती हित् बुझि बिन्ति गर्छु अधिराज् ! हीतै भन्यो यो भनी ।
मेरो बिन्ति सधाइ बक्सनु हवस् होला ठुलो हित् पनी ॥१२९॥

ज्यान्को आस् पनि कत्ति छैन अधिराज् ! दीन्यै छु यो ज्यान् पनी।
जीतीन्या तर छैन जान इ त हुन् चौधै भुवन्का धनी ॥
भाई बन्धु मराइ बाँचि कन पो क्या सोख् छ राजा भई ।
ईश्वर् हुन् पर रामका शरणमा ऐल्है तुरुन्तै गई ॥१३०॥

---

१ नेपाल, भारतजीवन—बचाउनु ।
२ ऐजन—भुलाउनु ।
३ होमनाथ—ठुलो ।

सीता सुम्पि दि हाल राज्य पनि यो देऊ विभीषण् गरुन् ।
खुसी भै कन आज देखि रघुनाथ् तिम्रा विपत्ती हरुन् ॥
जाऊ लौ वनमा र लेउ मनमा आत्मै विचार्‌को मती ।
मायाले त भुलाउँछिन् जगतमा यस्तै छ तिन्‌को गती ॥१३१॥

आत्मा चिन्न अवश्य पर्छ महाराज् ! एकाग्र भै ध्यान् गरी ।
आत्मा चिन्न समर्थ होइ न सक्या राम् भज्नु एक् मन् गरी ॥
कौस्तुभ् हार किरीट केयुर अनेक् भूषण् शरिर्‌मा धरी ।
आफ्ना यै हृदयारविन्द बिचमा राखेर खुप् ध्यान् गरी ॥१३२॥

सीताराम् कन भज्नु पर्छ अधिराज् ! राम् हुन जगत्‌का पती ।
ईश्वर् जानि अवश्य छोड तिमिले यस्तो विरोध्‌को मती ॥
येती विन्ति गरेर चुप् भइ रह्यो त्यो कालनेमी तहाँ ।
अम्रित् तुल्य वचन् सुन्यो त पनि त्यो लिन्थ्यो अधम्‌ले कहाँ॥१३३॥

रावण्‌ले त रिसाइ तेस् कन तहाँ झन् मार्न मन्सुब् धऱ्यो ।
मार्न्यै मन् बुझि कालनेमि विरले फेर् विन्ति ताहाँ गऱ्यो ॥
यस्तो क्यान रिसानि हुन्छ अधिराज् ! ऐल्हे तहाँ मै गई ।
सर्कार्‌को सब काम बन्दछ भन्या जान्छु तयारी भई ॥१३४॥

---

१ सोमनाथ—तिम्रा । नेपाल—फेर् बिन्ति पान्था पनी ।
२ भारतवेगन—फेर ताहिं विन्ती गऱ्या ।

येती बिन्ति गरेर तेहि बिचमा ऊठेर दौड्यो पनी ।
लाग्यो गर्न उपाय फेरि हनुमान् फिर्नै न पाउन् भनी ॥
रस्तामा गइ एक् तपोवन असल् तेस्ले तयारी गऱ्यो ।
मायाले फुलका र फल् सहितका वृक्षादिले वन् भऱ्यो ॥१३५॥

एक् आश्रम् पनि कल्पना तहिं गऱ्यो आफू मुनीश्वर् बनी ।
तेसै आश्रममा बस्यो म हनुमान्लाई छलूँला भनी ॥
तेस्का शिष्य अनेक् थिया वरिपरी ताहीं हनूमान् गया ।
क्या देख्याँ अघि आश्रमै पनि यहाँ थीयेन भन्दा भया ॥१३६॥

कस्को आश्रम हो बुझी जल पिई जॉला म जल्दी भनी ।
बुझ्नै खातिर तेहि आश्रम विषे पौंच्या हनूमान् पनी ॥
योगी झैं भइ कालनेमि शिवको पूजा विधान्ले गरी ।
कुन् रित्ले हनुमानलाइ ठगुँला भन्न्या इरादा धरी ॥१३७॥

थीयो आश्रम भित्र दर्शन गरूँ भन्न्या इरादा धऱ्या ।
योगेश्वर् बुझि भक्ति राखि हनुमान्ज्यूले नमस्कार् गऱ्या ॥
दुत् हूँ श्रीरघुनाथको म हनुमान् भन्छन् मलाई पनी ।
औषध् ल्याउनको हुकुम् प्रभुजिको हूँदा म आयाँ भनी ॥१३८॥

सब् वृत्तान्त गऱ्या र जल् पिउनको इच्छा बहूतै थियो ।
खोज्या जल् हनुमानले र खुसि भै तेस्ले तहाँ जल् दियो ॥
आऊ फल् फुल खाउ पीउ हनुमन् ! ठण्डा छ यो जल् पनी ।
साहै हतपत गर्न छैन तिमिले कैल्है म जाँला भनी ॥

योगी हूँ सब जान्दछु म अहिले रामले नजर् खुप् गरी ।
लक्ष्मण्लाइ बचाइ बक्सनु भयो सम्पूर्ण बाधा हरी ॥
वानर्को पनि फौज् खडा सब भयो येती भनेथ्यो जसै ।
तिर्खा मेटिइन्या न देखि जलले बोल्या हनूमान् तसै ॥१४०॥

तिर्खा ज्यादि छ जल् कमी छ यतिले मेट्तैन् तिर्खा पनी ।
घेरै जल् छ कहाँ बताउनु हवस् वाहाँ म खाँला भनी ॥
सून्यो श्रीहनुमानका र इ वचन् कै एक् तलाऊ थियो ।
त्यो देखाउनलाइ एक अगुवा शिष्यै पठाई दियो ॥१४१॥

ऐल्हे जाउ र जल् पियेर हनुमन्! फर्केर आऊ यहाँ ।
केही मन्त्र म दिन्छु त्यो सुनि गया मिल्न्या छ औषध् तहाँ ॥
सून्या श्रीहनुमानले र इ वचन् बेस् हो हवस् लौ भनी ।
पौंच्या जल्दि तलाउमा र हनुमान् विर्ले पिया जल् पनी ॥१४२॥

ताहाँ तेहि तलाउ भित्र मकरी कै एक् बस्याकी थिई ।
खैंची श्रीहनुमानलाइ निलुँला भन्न्या ठुलो सुर् लिई ॥
च्यापू च्याति पछारि ताहिं मकरीलाई निभाया जसै ।
स्त्रीको सुन्दर रुप् बन्यो र विनती त्यो गर्न लागी तसै ॥१४३॥

---

१ यथेष्ट जल पिउन् भन्दैनन्, स्नान् गर्छन् । सं०

स्वर्गैमा म त अप्सरा अधि थियाँ नाम् धान्यमाली थियो ।
ब्राह्मण्का[1] त सरापले मकरिको रूप् यो बनाई दियो ॥
तेसै रूप् कन मारि बक्सनु हुँदा आपत्ति मेरी गई ।
जान्छु स्वर्ग विषे म फेरि हनुमन् ! जस्ता कि तस्ती भई ॥१४४॥

अर्को बिन्ति म गर्छु अर्ति सरिको त्यो हो हजुर्को खुनी ।
जस्लाई मुनि भन्नु हुन्छ हनुमन् ! थीयो कहाँ त्यो मुनी ॥
औषध् लीन गयेछ आज हनुमान् लौ विघ्न गर् जा भनी ।
रावण्ले उपदेश् दियो र बलवान् त्यो कालनेमी पनी ॥१४५॥

विघ्नै गर्न भनेर आइ अहिले त्यो चाल तेस्ले गऱ्यो ।
तेस्लाई तहिं मार औषधि पनी ली[2] जाउ बेला पऱ्यो ॥
यो बिन्ती गरि इन्द्रका हजुरमा त्यो धान्यमाली गई ।
आश्रम्मा हनुमान् फिऱ्या उहि बखत् केही न जान्न्या भई ॥१४६॥

देख्यो श्रीहनुमानलाइ नजिकै आई पुग्याका जसै ।
मेरो काम् अब सिद्ध गर्दछु भनी त्यो बोल्न लाग्यो तसै ॥
ऐल्हे दिन्छु म सिद्ध मन्त्र हनुमन् ! यो मन्त्र लेऊ पनी ।
देऊ लौ गुरुदक्षिणा पनि ठुला मेरा गुरू हौ भनी ॥१४७॥

---

१ होमनाथ—ब्राह्मण्को ।   २ ऐजन—लै ।

छल्छाम्का इ वचन् सुन्या र हनुमान् विर्का उठ्यो रिस् पनी ।
हान्या मुड्कि उठाइ तेहि बिचमा लौ दक्षिणा ले भनी ॥
पायो चोट् तहिं मुड्किको र मुनिभेष् तेस्को तुरुन्तै गयो ।
जस्तो राक्षसको स्वरुप् अघि थियो सोही स्वरुप्को भयो ॥१४८॥

माया राक्षसका अनेक् तरहका त्यो गर्न लाग्यो जसै ।
हान्या मुड्कि उठाइ फेरि सिरमा ताहीं मर्‍यो त्यो तसै ॥
येती कर्म गरेर जल्दि हनुमान् द्रोणाचलैमा गया ।
पर्वत् बोकि तुरन्त फर्कि सहजै दाखिल् प्रभू ध्यैं भया ॥१४९॥

खूसी खुप् रघुनाथ् तहाँ हुनु भयो औषध् सुषेण्ले गर्‍या ।
बाधा लक्ष्मणका सबै जति थिया त्यै औषधीले हर्‍या ॥
रावण् माथि दगा घरेर सहजै लक्ष्मण् उठ्याथ्या जसै ।
बाँच्या भाइ दया गर्‍यौ[1] र हनुमन् ! भन्न्या हुकुम् भो तसै ॥१५०॥

सङ्ग्राम्को मतलब् गरेर हनुमान् साम्ने हुनू भो तहाँ ।
वानर्को पनि फौज् सबै अघि सर्‍यो[2] ऊ झन् रहन्थ्यो कहाँ ॥
जस्तै सर्प गिराउँछन् गरुडले सोही तमासा गरी ।
रावण्लाइ गिराइ वक्सनु हुँदा गीरेर मूर्छा परी ॥१५१॥

---

१ नेपाल, भारतजीवन—गर्‍या ।                भिन्नुच्य भूत्वा पयु सर्वे उत्सव ।

२ देजन—उर्हो । अध्यात्मरामायण—उत्साय

ऊठी दुःख बहुत पाइ मनले हारी गयाको थियो ।
श्रीरामचन्द्रजिको प्रचण्ड बल सब् बूझी लहड् खुप् लियो ॥
बेस् सिंहासनमा बसी सकल विर् राखी सभा खुप् गरी ।
लाग्यो भन्न म मर्छु हेर विर हो ! रामका अगाडी परी ॥१५२॥

राम् नारायण हुन् अवश्य बुझियो चौधै भुवन्का धनी ।
मानिस्को अवतार लिया[1] प्रभुजिले मार्छन् मलाई पनी ॥
मानिस् देखि त मर्न पर्छ मइले[2] ब्रह्माजिको वर् छ यो ।
मानिस् भै रघुनाथ् सन्या अवि भन्या काल् टार्न सकन्या छ को १५३

राजा विर् अनरण्य सूर्यकुलमा कै एक् महात्मा थिया ।
मैले व्यर्थ विरोध् गर्‍याँ र उ बखत् तिन्ले सराप् पो दिया ॥
मेरा वंश महाँ अवश्य अवतार् नारायणैले लिनन् ।
तेरो राक्षसवंश मारि सहजै तैंलाइ मारी दिनन् ॥१५४॥

दीया येति सराप् र तेस् बखतमा राजा बिती पो गया ।
सोही पूर्ण गराउना कन यहाँ श्रीराम् तयारी भया ॥
आया श्रीरघुनाथ् मलाइ अहिले मार्ने इरादा धरी ।
मार्छन् निश्चय आज मर्छु सहजै रामका अगाडी परी ॥१५५॥

---

१ नेपाल, भरतजीवन—गर्‍या ।   २ होमनाथ—तैंले ।

भाई मूर्ख छ कुम्भकर्ण अझ तक् यस्तो पन्यो ता पनी ।
सूतेको छ उठाइ ल्याउ अहिले चाँडो हुकुम् भो भनी ॥
हुकुम् पाइ बडा बडा विर गया ल्याऔं उठाई भनी ।
पौंची जल्दि उठाइ झट् हजुरमा ल्याई पुऱ्याया पनी ॥१५६॥

पाऊमा परि कुम्भकर्ण बलवान् साम्ने बसेथ्यो जसै ।
रावणले पनि दिन् वचन् गरि सबै विस्तार् सुनायो तसै ॥
हे भाई ! सुन कुम्भकर्ण ! अहिले आपत् मलाई पऱ्या ।
छोरा नाति समेत् बडा विरहरू ऐल्हे बहुतै मऱ्या ॥१५७॥

प्राणको अन्त्य हुने वखत् भइ गयो बाँच्न्या उपाये[1] कहू ।
राम् शत्रू बलवान् बुझिन्छ तिमि लौ साहै चनाखा रहू ॥
गम्भिर् येहि समुद्रमा पनि सहज् साँघू लगाई तऱ्या ।
वानर्को सब फौज् समेत् तरि यहाँ घेर् वीरको नाश् गऱ्या ॥१५८॥

वानर् देख्छु म विर् अनेक् तरहका सूरा लडाकी बडा ।
हाम्रा लस्करमा अनेक् विर मऱ्या वानर् सबै छन् खडा ॥
तिन्को नाश् गरि सक्नु देख्तिन यहाँ कोनै उपाई गरी[3] ।
नाश् तिन्को तिमिले गराउ अहिले चाँडो अगाडी सरी ॥१५९॥

---

१ नेपाल, भारतजीवन—उपाई ।
२ नेपाल, होमनाथ—वानरले ।
३ नेपाल—देखितिन यहाँ कोनै उपाउ गरी ।

रावण्ले इ वचन् विलाप सरिका बोली सकेथ्यो जसै ।
हाँस्यो खुप् सित कुम्भकर्ण र तहाँ बिन्ती गऱ्यो साफ् तसै ॥
मैले क्या गरूँ बिन्ति आज अधिराज् ! पैल्हे गऱ्याथ्यौं पनी ।
राम् नारायण हुन् सिता प्रभुजिकी हुन् योगमाया भनी ॥१६०॥

मेरो बिन्ति सुनेन उस् बखतमा झन् खुप् रिसानी भयो ।
तेसैको फल हो अवश्य अधिराज् ! जो मन्त्रिको[1] ज्यान् गयो ॥
एक् दिन् पर्वतका उपर् शिखरमा थीयौं म रात्री महाँ ।
नारद्जी कन मध्य रात्रि बिचमा[2] देख्यौं अकस्मात् तहाँ ॥१६१॥

सोध्यौं आउनु भो हजुर् किन यहाँ जानू छ काहाँ भनी ।
मेरो बिन्ति सुनेर सब् ति ऋषिले विस्तार् बताया पनी ॥
विस्तार् लौ सुन कुम्भकर्ण ! अहिले जीतेर सब् लोक् लियौ ।
इन्द्रादीहरुलाइ दुःख तिमिले अत्यन्त साहै दियौ ॥१६२॥

सब् इन्द्रादि ति विष्णुका हजुरमा पौंची शरण्मा पऱ्या ।
यस्[3] रावण् कन मारि देउ भगवन् ! भन्न्यात बिन्ती गऱ्या ॥
ब्रह्माको वरदान् छ मर्नु तइँले मानीस देखी भनी ।
मानिस् भै कन मारि बक्सनु हवस् मन्याँ छ रावण् पनी॥१६३॥

---

१ नेपाल—मन्त्रिवा ।
२ नेपाल, भारतजीवन—मध्य बीच बनमा ।
अध्यात्मरामायण—एकदाह वने सानौ विशाल्यया स्थितो निशि ।
३ होमनाथ—यै ।

येती बिन्ति गरेर देवगण सब् पाऊ पऱ्याथ्या जसै ।
सोही रित् सित मारुँला भनि हुकुम् श्रीविष्णुको भो तसै ॥
सोही बात् परिपूर्ण गर्न रघुनाथ् ऐल्हे तयारी भया ।
मान्यैँछन् तिमिलाइ निश्चय भनी ऊठेर नारद् गया ॥१६४॥

तस्मात् अवश्य रघुनाथ् कन देवं जानी ।
ई वैरि हुन् भनि यहाँ रति भर् न मानी ॥
यो वैरभाव तिमिले अब छोडि[2] देऊ ।
भक्ती गरी कन भजन् गरि आज लेऊ ॥१६५॥

भक्ती मुख्य छ सर्व साधन महाँ भक्ती छ सब् ज्ञान् दिन्या ।
भक्तीले सब मुक्त हुन्छ दुनियाँ यो नित्य् जानी लिन्या ॥
भक्तीहिन् भइ कर्म गर्दछ भन्या यो निष्फलै हो भनी ।
जानी श्रीरघुनाथका चरणमा भक्ती लगाऊ पनी ॥१६६॥

हज्जारन् अवतार छन् प्रभुजिका रामावतार्ले सरी ।
आर्को छैन भजन् गऱ्यो भनि भन्या जस्का भजन्ले गरी ॥
जालैं दुःख कतै न पाइ सहजै संसारसागर् तरी ।
सोही ठाम् पुगि जान्छ पूर्ण रुपले जाहाँ रहन्छन् हरी ॥१६७॥

---

१ होम्नाथ, नेपाल—दैव ।
२ भारतजीवन—छाडि ।
३ नेपाल, भारतजीवन—तर्दा ।

जो रामचन्द्र तिर रात् दिन चित्त धर्छन् ।
राम् कै चरित्र पढि खुप् सित मग्न पर्छन् ॥
तिन्का ति कर्मवशका सब पाप छुट्छन् ।
वैकुण्ठका सकल सौख्य तिनै त लुट्छन् ॥१६८॥

सून्यो बिन्ति र कुम्भकर्ण विरको साह्रै रिसायो पनी ।
लाग्यो भन्न तँलाइ डाकिन यहाँ ज्ञान् सुन्न देलास् भनी ॥
जस्तो भन्छु म सोहि मान्नु छ भन्या गर् युद्ध साम्ने सरी ।
सुत्नाको मतलब् छ पो पनि भन्या जा सुत् पलङ्मा परी ॥१६९॥

रावण्का इ वचन् सुनेर अहिले साह्रै रिसाया भनी ।
क्यै उत्तर् न गरी उठी कन गयो खुप् लड्न आँट्यो पनी ॥
पर्खाल् नाघि गयो र लड्न कन सुर् बाँधी करायो जसै ।
कालै तुल्य बुझेर वानरहरू साह्रै डराया तसै ॥१७०॥

विर् विर् वानरलाइ पक्डि मुखमा हाल्दै र निल्दै गयो ।
प्वाँख् लागी कन पर्वतै उडि तहाँ आई गया झैं भयो ॥
सक्ध्यो "कुन् अघि टिक्न तेस् बखतमा तेस्का अगाडी परी"।
वानर्को सब फोज् तहाँ हटि गयो साह्रै सकस्मा परी ॥१७१॥

---

१ भारतजीवन—मन् त ।
२ पैजन—फर्न सवक ।
३ नेपाल—टाकि कन क्या ।
४ पैजन—पर ।
५ होमनाथ—सक्थ्या ।
६ पैजन—सरी ।

दाज्यू भनी तहिं विभीषण भेट्न आया ।
पाऊ परी कन वहुत् गरि बिन्ति लाया ॥
कान्छो विभीषण म हूँ करुणा म पाऊँ ।
लङ्का महाँ म कन बस्न मिलेन ठाऊँ ॥१७२॥

सीता न' राख घरमा तिमि सुम्पि देऊ ।
राम्चन्द्रलाइ परमेश्वर जानि लेऊ ॥
बिन्ती गर्‍याँ यति र लात पनि मारि लीया ।
निक्लेर जा भनि मलाइ निकालि दीया ॥१७३॥

चार् मन्त्रि साथ लिइ निक्लि म याहिं आयाँ ।
श्रीरामका शरणमा परि बिन्ति लायाँ ॥
ठूलो दया गरि लिया प्रभुले मलाई ।
आजकाल् खुसी छु रघुनाथ् सित वस्न पाई ॥१७४॥

बिन्ती विभीषणजिको जब सूनि लीयो ।
भाई चिन्ही कन खुसी भइ काख लीयो ॥
भाई ! चिरञ्जिवि रह्या तिमि दैव जानी ।
राम्चन्द्रको गर भजन् अति हर्ष मानी ॥१७५॥

---

१ भेटक—कम ।

खुप् भक्त छन्[1] बुझि लियाँ[2] तिमि भाइलाई ।
भन्थ्याँ[3] चिन्हेर अघि नारदले मलाई ॥
साँचै[4] भयो ति ऋषिले जति हो भन्याको ।
प्रत्यक्ष देख्छु तिमि भक्त बडा बन्याको ॥१७६॥

भाई विभीषण ! परै रहु जल्दि जाऊ ।
सङ्ग्रामको[5] बखतमा नजिकै न आऊ ॥
यसता वचन् सुनि बिदा भइ फर्कि आया ।
थामी न सक्नु भइ आँसु पनी खसाया ॥१७७॥

बीदा भै जब ता विभीषण फिऱ्या यो फौज् गिरायो पनी ।
लाग्यो युद्ध र कुम्भकर्ण विरले धेर् फौज् गिराऊँ भनी ॥
वानर्को[6] सब फौजलाइ बलले थिच्तै र मिच्तै गयो ।
कुन्[7] सक्थ्यो अघि टिक्न तेस् बखतमा खुप् ध्वस्त गर्दो भयो १७८

मुद्गर हात लियेर येहि रितले त्यो युद्ध लाग्यो जसै ।
फौज्को नाश् बहुतै[8] गऱ्यो र रघुनाथ् साह्रै रिसाया तसै ॥
वायव्यास्त्र उठाइ मुद्गर समेत् हातै खसाल्छु भनी ।
हान्या श्रीरघुनाथले र सहजै काटी खसाल्या पनी ॥१७९॥

---

१ होमनाथ—छौ ।
२ पेजन—लियाँ ।
३ पेजन—भन्थे ।
४ पेजन—साँचो ।
५ पेजन—सङ्ग्रामको ।
६ नेपाल, भारतजीवन—वानर्क्ष ।
७ होमनाथ—को ।
८ पेजन—नाश बहुत् ।

गीऱ्यो हात् जब कुम्भकर्ण विरको मुद्‌गर् सहित्‌को तहाँ ।
ठूलो शब्द गरेर फेरि रिसले धायो प्रभू छन् जहाँ ॥
साल्‌को वृक्ष उखेलि हान्न भनि त्यो आयो नजिक्‌मा जसै ।
तेही हात् पनि काटि बक्सनु भयो वानर् भया खुस् तसै ॥१८०॥

हातै गिऱ्या जब दुवै तब खुप् करायो ।
साहै रिसाइ रघुनाथ् तिर दौडि आयो ॥
फेर् अर्धचन्द्र सरिका दुइ बाण लीया ।
गोडै पनी सहज काटि खसालि दीया ॥१८१॥

हात् पाउ केहि न हुँदा अति दुःख पायो ।
मुख् बाइ राम् कन निलूँ भनि घस्रि आयो ॥
राम्‌चन्द्रले पनि मुखै भरि बाण हान्या ।
त्यो देखि फौजहरुले अति हर्ष मान्या ॥१८२॥

यै रित् गरेर अघि बाट थला बसाया ।
फेर् हानि ऐन्द्रशरले त सिरै खसाया ॥
ढोका थुन्यो सहरको सिरले तं ताहाँ ।
गिंड्[२] उफ्रि गै कन पऱ्यो र समुद्र माहाँ ॥१८३॥

---

१ होमनाथ—र।     २ नेपाल—दाद्

ग्राहादि जन्तु मिचि नाश् बहुतै गरायो ।
इन्द्रादि देवगणको[1] पनि ताप् हरायो ॥
खुप् पुष्पवृष्टि रघुनाथ उपर् खसाया[2] ।
राम्‌लाइ भेट्‌न भनि नारद ताहिं आया ॥१८४॥

नारद्‌ले स्तुति खुप् गऱ्या प्रभुजिको नारायणै हुन् भनी ।
भोली देखि हुन्या कुरा जति थिया सो सब् बताया पनी ॥
हे नाथ ! विर् यहि कुम्भकर्ण विर हो यो विर् सहज्‌मा गयो ।
खूपै[3] विर् अब इन्द्रजित् छ उसको[4] लौ भोलि वेला भयो ॥१८५॥

भोली मर्दछ इन्द्रजित् पनि यहाँ लक्ष्मण्‌जिका हात् परी ।
आफैं मार्नु हुन्या छ रावण भन्या[5] पर्सी लडाईं गरी ॥
देख्न्यै छन् मुनिदेवसिद्धगणले त्यो सब् तमासा भनी ।
नारद् ताँहि बिदा भई गईं[6] गया त्यो ब्रह्मलोक्‌मा पनी ॥१८६॥

रावण्‌ले पनि कुम्भकर्ण त मऱ्यो भन्न्या सुनेथ्यो जसै ।
साह्रै दुःख परी विलाप् पर्नि गरी मूर्छा[7] पऱ्यो खुप् तसै ॥
रावण्‌लाइ बुझाउना कन अघी त्यो इन्द्रजित् विर् सऱ्यो ।
जल्दी विन्ति गऱ्यो खडै छु म छँदै कुन्[8] ताप् हजुर्‌मा पऱ्यो ॥१८७॥

---

१ होमनाथ—देवगणको ।
२ ऐजन—गिराया ।
३ ऐजन—फूलो ।
४ नेपाल, भारतजीवन—उसका ।
५ होमनाथ—मने
६ नेपाल—कन ।
७ होमनाथ—गो ।
८ नेपाल—कन।

शत्रूको भय आज कत्ति न रहोस् ई शत्रु मै मारुँला ।
सब् शत्रूहरु मारि ताप् हजुरको चाँडै सहज् टारुँला ॥
होम् गर्छु म निकुम्भिला स्थल महाँ ऐल्हे तुरुन्तै गई ।
होम् सम्पूर्ण गऱ्या मलाइ अहिले अग्नी प्रसन्नै भई ॥१८८॥

दीन्याछन् हतियार् तिनै लिइ गई सङ्ग्राम गर्छु जसै ।
कुन् साम्ने भइ टिक्छ तेस् बखतमा सब् ध्वस्त हुन्छन् तसै॥
येती बिन्ति गऱ्यो र होम् गरुँ भनी ऊठेर जल्दी गयो ।
भक्ती राखि निकुम्भिला स्थल महाँ होम् गर्न लाग्दो भयो ॥१८९॥

सून्या त्यो समचार् विभीषणजिले होम् गर्न लाग्यो भनी ।
सो विस्तार् रघुनाथका हजुरमा गै बिन्ति पाऱ्या पनी ॥
ऐल्हे हे रघुनाथ ! इन्द्रजितले होम् गर्न लाग्यो भनी ।
सून्याँ यो सुनि बिन्ति गर्न अहिले आयाँ हजुरमा पनी ॥१९०॥

होम्को विघ्न त गर्नु पर्छ अधिराज ! होम् सिद्ध पाऱ्यो भन्या ।
राक्षसगण् जिति सक्नु छैन कहिले ई सब् अजेयै बन्या ॥
लक्ष्मणलाइ मलाइ बक्सनु हवस् हूकुम् म जान्छू तहाँ ।
मार्छन् लक्ष्मणले अवश्य अहिले त्यो बाँच्न सक्ला कहाँ ॥१९१॥

---

१ सबै पुस्तकमा "होम् गर्छु भनि कुम्भिलास्थल महाँ" भन्ने पाठ छ । तर सो स्थानको नाम निकुम्भिला हो । अध्यात्मरामायण—गत्वा निकुम्भिला सचस्थापयित्वा हुताशनम् । अतएव माथी दियेको पाठ हुनु पर्छ । सं०

२ होमनाथ—सब ।

येती बिन्ति सुनी हुकुम् हुन गयो मै जान्छु माछूं भनी ।
फेरी बिन्ति विभीषणै सरि गर्‍या यस्तो छ यो विर् भनी ॥
खाँदै कत्ति न खाइ कत्ति न सुती रात् दिन् नियम् खुप् गरी ।
जस्को[1] वर्त छ बाह्र वर्ष उ पुरुष् तेरा अगाडी सरी ॥१९२॥

तेरो प्राण लिन्या छ यो छ वरदान् यस्तो हुनाले गरी ।
मारी सक्नु कदापि छैन अहिले कोही अगाडी सरी ॥
रात् दिन् कत्ति न खाइ कत्ति न सुती तेस्तो[2] रह्याको यहाँ ।
लक्ष्मण् छन् अब लौ हुकुम् दिनु हवस् तेस्लाइ मारुन् तहाँ ॥१९३॥

ईश्वर् तिमी ह्वौ रघुनाथ् इ भाई[3] ।
लक्ष्मण् त शेष् हुन् करुणा जनाई ॥
भूभार हर्ना कन जन्म लीयौ ।
यो रुप् भजन् गर्न बनाइ दीयौ ॥१९४॥

साँचो[4] बिन्ति गर्‍यौ म जान्दछु सबै यो विर् छ यस्तो भनी ।
हिँड्दै देखि न खाइ कत्ति न सुती लक्ष्मण् रह्याका पनी ॥
जानी जानि म चुप् रह्याँ किन भन्या लाग्न्यैछ यो काम् पनी ।
उत्तर् येति तहाँ विभीषणजिका साम्ने हुकुम् भो पनी ॥१९५॥

---

१ होमनाथ—जसको ।
२ रामनाथ—येती । भारतजीवन—चेती । नेपाल—चेतो ( तेस्तो ? )
३ होमनाथ—रघुनाथ भाई । अध्यात्मरामायण—त्वमेव साक्षाज्जगतामधीशो नारायणो लक्ष्मण एव शेषः ।
४ ऐजन—साचै ।

लक्ष्मण्‌लाइ पनी हुकुम् तहिं भयो भाई ! तयारी भयाँ ।
केही फौज् पनि साथमा लिइ तहाँ ऐल्हे[2] तुरुन्तै गयाँ ॥
चाँडै प्राण् लिइ हाल इन्द्रजितको जान्छन् विभीषण् पनी ।
सब्‌को छिद्र बताउनन् बखतमा यस्‌तो छ याहाँ भनी ॥१९६॥

हूकुम् यो रघुनाथको सुनि धनू लीई तयारी भया ।
राम्‌को[3] पाउ समाइ लक्ष्मण तहाँ क्यै बोल्न लागी गया ॥
मेरा बाण् अब इन्द्रजीत विरको प्राण्‌लाइ जल्दी हरी ।
पाताल् भोगवती महाँ पुगि तहाँ निर्मल् हुनन् स्नान् गरी ॥१९७॥

येती बिन्ति गरी घुमी वरिपरी लक्ष्मण् चरण्‌मा पऱ्या ।
बीदा भै रघुनाथका हुकुमले साइत् तुरुन्तै गऱ्या ॥
केहीफौज् लिइ जाम्बवान् र हनुमान् अङ्गद् इ साथ्‌मा गया ।
पौंच्या जल्दि र इन्द्रजीत विरका फौज्‌लाइ देख्ता भया ॥१९८॥

हूकुम् सिरोपर धरी कन जल्दि पौंची[5] ।
लक्ष्मण् अघी जब सऱ्या धनुलाइ खैंची ॥
लस्कर्‌हरू पनि अगाडि सरेर धाया ।
ताहाँ विभीषण अघी सरि बिन्ति लाया ॥१९९॥

---

१ होमनाथ—गई ।
२ ऐजन—गई ।
३ ऐजन—रामको ।
४ ऐजन—विरको ।
५ नेपाल, भारतजीवन—पौंचि जल्दी ।
६—ऐजन—लक्ष्मणहरू ।

कालो मण्डल देखिइन्छ अघि जो त्यो फौज हो वीरको ।
टुक् टुक् पारि गिराइ वक्सनु हवस् सब् वीरका सीरको ॥
ऐल्हे जल्दि न हानि वक्सनु भया होम् सिद्ध गर्न्या छ यो ।
होम्को सिद्ध गर्न्यो भन्या हुँदि कसै जीती न सक्नू छ यो[1] ॥२००॥

तेस् फौज्लाइ गिराइ वक्सनु भया त्यो इन्द्रजित् विर् पनी ।
होम् छोडीकन लड्न आउँछ यहाँ त्यो फौज् गिरायो भनी ॥
येही युक्ति तहाँ विभीषणजिले विन्ती गर्न्याथ्या जसै ।
लक्ष्मण्ले पनि सैन्य माथि शरको वृष्टी गराया[2] तसै ॥२०१॥

वानर्ले पनि वृक्ष पर्वत शिला फौज् माथि फेंक्या जसै ।
राक्षस्को पनि फौज् अघी सरि सरी खुप् लड्न लाग्यो तसै ॥
लक्ष्मण्ले शरले अनेक् तरहले मार्‍या र नास्यो[3] भनी ।
साह्रै क्रोध गरेर इन्द्रजित विर् होम् छोडि आयो पनी ॥२०२॥

पक्का बेस् रथमा चढी धनु लिई सामने अगाडी सरी ।
लाग्यो लक्ष्मणलाइ भन्न अब हेर्[4] मेरा अगाडी परी ॥
आँटिस् मर्न भन्यो र ताहिं नजिकै थीया विभीषण् पनी ।
तिन्लाई पनि खुप् भन्यो तँ कुलको शत्रू अधम् होस् भनी ॥२०३॥

---

१ होमनाथ—जीती न सक्नू भयो ।
२ सबै पुस्तकमा "गिराया" भन्ने पाठ छ तर "गराया" भन्ने पाठ भये राम्रो हुँदो हो । स०
३ नेपाल—नास्या ।
४ बम्बई—हे ।

येती भन्यो र रिसले रथमा बस्याको ।
सब्लाइ् जित्न भनि कम्मर-खुप् कस्याको ॥
केही न टेरि अरु वानरलाइ् हेला ।
साहै गराइ् कन भन्छ परे इ् फेला'[1] ॥ २०४ ॥

प्राण् बाण हानि सबको[2] म हरेर लिन्छु ।
तिम्रो शरिर् पृथिविमा म गिराइ् दिन्छु ॥
यस्ता वचन् सुनि ति लक्ष्मण्जी रिसाया ।
हान्या र बाण् तहिं तुरुन्त थला बसाया ॥ २०५ ॥

मूर्छा पर्‍यो दुइ् घरी र जुरुक्क ऊठ्यो ।
लाल् लाल् नजर् गरि रिसाइ् अगाडि छुट्यो ॥
मेरो पराक्रम रती न बुझेर पैल्हे ।
हानिस् पराक्रम तँ[3] लौ बुझिले न ऐल्हे ॥ २०६ ॥

येती भन्यो र मनले अति वीर मानी ।
लक्ष्मण्जिलाइ् तहि सात् शर जल्दि हानी ॥
दस् बाणले त हनुमान् विरलाइ् हान्यो ।
झन् मुख्य शत्रु त विभीषणलाइ् मान्यो[4] ॥ २०७ ॥

---

१ नेपाल—पर्‍यौ नि फेल्‍ा ।
२ पेजन—सबका ।
३ नेपाल, भारतजीवन—त। अध्यात्मरामायण—
यदि ते प्रथमे युद्धे न दृष्टो मे पराक्रम ।
अद्य त्वां दर्शयिष्यामि तिष्ठेदानीं व्यवस्थित ॥
४ वर्ई —ठायो ।

हान्यो फेर् सय शर् विभीषण उपर् येती गरेथ्यो जसै ।
हान्या लक्ष्मणले कवच् शरिरको काटी दिया पो तसै ॥
हज्जार् शर् कन हानि लक्ष्मणजिका गाथ्का कवच्को पनी ।
टुक् पारेर[1] गिराउँदो तहिं भयो मेरो गिरायो भनी ॥२०८॥

लक्ष्मण्ले पनि फेरि पाँच शरले घोडा र रथ् सुत् धनू ।
काटी बक्सनु भो उसै बखतमा आर्को उठायो धनू ॥
फेर् तेसै धनुलाइ काटि दिनु भो तिन् बाणले फेर् धनू ।
लीयो लक्ष्मणलाइ घेर शरले हान्यो छिटो क्या भनू ॥२०९॥

बाणैले गरि सब् भन्यो दस दिशा वानर् सकस्मा पन्या ।
लक्ष्मण्ले पनि इन्द्रजीत विरको प्राण् लीन मन्सुब् धन्या ॥
जुन् इन्द्रास्त्र थियो उही धनु महाँ लाई अगाडी सन्या ।
चिन्तन् श्रीरघुनाथको गरि तहाँ जल्दी प्रतिज्ञा गन्या ॥२१०॥

धर्मात्मा यदि सत्य दाशरथि छन् हुन् नाथ् जगत्का धनी ।
साँचै ता अब इन्द्रजित् यहिं मरोस् येसै शरैले भनी ॥
छोड्या बाण र इन्द्रजीत विरको सीरै खसाया जसै ।
इन्द्रादीहरु पुष्पवृष्टि खुसि भै खुप् गर्न लाग्या तसै ॥२११॥

---

१ सोमनाथ—टुक् टुक् पारि ।

हे नाथ् ! हजुर् गुरु भई पनि दुःख पर्न्या ।
क्या भो मलाइ कसरी. अब चित्त धर्न्या ॥
यस् रामले सकल बन्धु र पुत्र मार्‍यो ।
सूरा अनेक् विरहरू पनि छुट्टि पार्‍यो ॥ २२० ॥

रावणको विनती सुन्या र गुरुले पायेछ आपत् भनी ।
गर्नो सम्म गरोस् भनेर उपदेश् दीया गुरूले पनी ॥
हे रावण् ! सुन मन्त्र दिन्छु अब गै होम् गर्नु खुप् ध्यान् धरी ।
होम् सम्पूर्ण गर्‍यौ भन्या त हतियार् मिल्नन् तिनैले गरी ॥२२१॥

जित्न्या छौ सब वीरलाई भनि यो आज्ञा गुरूको जसै ।
पायेथ्यो खुसि भै उठी घर गई होम् गर्न आँट्यो तसै ॥
पाताल् तुल्य गुफा खनी तहिं बस्यो होम् गर्नलाई पनी ।
ढोका बन्द गर्‍यो सबै सहरको कोही न आउन् भनी ॥२२२॥

लूक्यो रावण येहि रित् सित र खुप् होम् गर्न लाग्यो तहाँ ।
लूक्यो रावण ता पनी तर धुवाँ लूकी रहन्थ्यो कहाँ ॥
देख्या तेहि धुवाँ-विभीषणजिले होम् गर्न लाग्यो भनी ।
पायाँ भेद् भनि रामका हजुरमा गै विन्ति पार्‍या पनी ॥२२३॥

---

१ भारतजीवन—वैरि ।

लाग्यो रावण होम गर्न महराज् ! होम् सिद्ध पान्यो भन्या ।
साँचो बिन्ति म गर्दछु हजुरमा ई सब् अजेयै बन्या ॥
हूकुम् वानरलाइ बक्सनु हवस् विर् विर् अगाडी सरी ।
जल्दी गै कन यज्ञ नाश् गरि दिउन् हूकुम् सिरोपर् धरी ॥२२४॥

बिन्ती येति गन्या विभीषणजिले हूकुम् प्रभूको भयो ।
अङ्गद् विर् हनुमान् दुवै इ खटिया दस् कोटिको फौज् गयो ॥
पर्खाल् नाघि गया रे तेस् सहरमा दर्बार् पुग्याध्या जसै ।
चौकी रावणका थिया जति तहाँ तिन्लाइ मान्या तसै ॥२२५॥

रानी हुन् सरमा विभीषणजिकी लङ्कै सहर्मा थिइन् ।
रावण् लूकि रहेछ ताहिं छ भनी तिन्ले इसारा दिइन् ॥
गूफाका मुखमा त पत्थर ठुलो लायेर[1] पक्का गरी ।
होम् गर्थ्यो तहिं भित्र रावण उहीं पौंच्या ठुलो वेग् गरी ॥२२६॥

त्यो पत्थर् कन लात्ति अङ्गदजिले दीया धुलै[2] भै खस्यो ।
होम्को विघ्न गराउना कन तहाँ क्यै फौज भीत्रै पस्यो ॥
रावण् येति हुँदा पनी दृढ भई ध्यान् गर्न लाग्यो जसै ।
विर् विर् वानरले अनेक् तरहले त्यो यज्ञ नास्या तसै ॥२२७॥

---

१ भारतजीवन—त्या र । होमनाथ—गयेर । २ होमनाथ—धुलो।

रावण्ले तहिं होम गर्न भनि एक् सूरो लियाको पनी ।
खोस्या श्रीहनुमानले र रिसले हान्या उठोस् यो भनी ॥
ध्यानैमा दृढ मन् गरी अचल भै रावण् बसेथ्यो जसै ।
ल्याया अङ्गदले त खैंचि नजिकै मन्दोदरी पो तसै ॥२२८॥

ती मन्दोदरिलाइ रावण नजिक् पौंचाइ हुर्मत् लियो ।
चोलो खोलि अफालि फेरि कटिको सारी खसाली दियो ॥
लायाका गहना समेत् शरिरका वस्त्रै अफाल्या जसै ।
रूँदै रावणका नजीक रहँदी विन्ती गरिन् यो तसै ॥२२९॥

हे नाथ् ! आज कता गयो हजुरको लज्जा अनाथ् क्या गरूँ ।
पत्नीका इ विलाप् सुनी जिउनु धिक् मर्नू निको हो वरू ॥
येती विन्ति गरिन् र पुत्र कन खुप् संझेर लागिन् रुनै ।
आर्को कोहि थियेन ताहिं तिनका साहाय हून्या कुनै ॥२३०॥

भर्ताले पनि बाँचुला भनि यहाँ लज्जै समेत् त्याग् गऱ्या ।
तेरो ध्यान् अघि गै गयो गरुँ कसो ऐल्हे विपत्ती पऱ्या ॥
ती मन्दोदरि रानिको अति विलाप् साम्ने सुनेथ्यो जसै ।
उठ्यो खड्ग लियेर अङ्गदजिका हान्यो कटीमा तसै ॥२३१॥

---

१ [illegible]—[illegible] ।
२ नेवार—[illegible] ।
३ नेवार, [illegible]—[illegible] ।

होम्को नाश गराइ अङ्गदहरू दौडेर राम् थ्यैं गया ।
ती मन्दोदरि रानि रावण इनैका बात् तहाँ खुप् भया ॥
लाग्यो रावण भन्न रानि ! अहिले बॉच्नु असल् हो भनी ।
बाँच्नै खातिर ता म चुप् भइ रह्याँ येती हुँदामा पनी ॥२३२॥

बॉचे[1] देखि त देखिइन्छ सब थोक् यस्तो[2] बुझी ज्ञानले ।
यो शोक् दुर् गरि हाल हुन्छ अब क्या यस्तो असत् ध्यानले॥
अज्ञानै छ भुलाउन्या शरिरमा यो देह मै हूँ भनी ।
त्यै अज्ञान् बलवान् भयो भनि भन्या फैलिन्छ संसार् पनी ॥२३३॥

आत्मज्ञान स्वरुप् बुझेर मनले अज्ञानको नाश् गरी ।
स्वस्थै भै रहु शोक् न मान तिमिले क्या हुन्छ यो शोक् गरी॥
हे मन्दोदरि ! मार्छु राम् कन सहज् सङ्ग्राम ठूलो गरी ।
रामैले यदि मार्दछन् त पनि बेस् जान्या छु संसार् तरी ॥२३४॥

सङ्ग्राम्मा मरि गै गयाँ पनि भन्या मार्नू र सीता यहाँ ।
अग्नीमा तिमिले प्रवेश् तब गरी आया म जान्छु जहाँ ॥
रावण्का इ वचन् सुनेर अति ताप् मान्दी ति मन्दोदरी ।
साँचो बिन्ति म गर्छु आज महराज् ! भन्दै अगाडी सरी ॥२३५॥

---

१ नेपाल—बाच्या । २ होमनाथ—यस्तो ।

विन्ती रावण थ्यैं गरिन् पनि तहाँ राम् हुन् जगन्नाथ् हरी ।
जीती सक्नु कदापि छैन अरुले कसतै लडाइँ गरी ॥
वैवस्वत् मनुलाइ मत्स्यरूपले जस्ले त रक्षा गऱ्यो ।
फेरी कूर्म भयेर मन्दर पनी जस्ले पिठैमा धऱ्यो ॥२३६॥

प्राण् खैंचेर लिया वराहरुपले जस्ले हिरण्याक्षको ।
बाँची कोहि फिरेन लड्दछु भनी साम्ने गयाको छ जो ॥
ठूलो दैत्य थियो हिरण्यकशिपू माऱ्या नृसिंहै भई ।
राज्यै खैंचि लिया छलेर बलिको वामन् स्वरुप्ले गई ॥२३७॥

थीया क्षत्रिय पृथ्विमा परशुराम् भै नाश् सबैको गऱ्या ।
तिम्रोप्राण् लिनलाइ आज पनि नाथ् राम् भै अगाडी सऱ्या॥
सीता हर्नु थियेन हेलन गरी सीताजि हर्नू भयो ।
यै काम्ले इ विपत् पऱ्या हजुरमा ज्यान् इन्द्रजित्को गयो ॥२३८॥

सीता सुम्पनु पर्छ आज अधिराज् ! राम्चन्द्रजी थ्यैं गई ।
लङ्कामा पनि राज् विभीषण गरुन् राम्कै पियारा भई ॥
सब् छोडी कन आज जाउँ वनमा येती भनीथिन् जसै ।
रावण्ले पनि ई वचन् सुनि जवाफ् खुप् दीन लाग्यो तसै ॥२३९॥

---

१ मेघनाद, भारादेखिन—हजुरमा।

हे मन्दोदरि ! इन्द्रजित् पनि मऱ्यो ठूला ठुला विर् मऱ्या ।
कुम्भैकर्ण मऱ्यो अनेक् अरु पनी सङ्ग्राममा विर पऱ्या ॥
येती सम्म भया पछी कसरि फेर् लन्नेर पाऊ परू ।
शत्रू थ्यैं गइ लत्रि बाँच्नु न निको प्राण् आज जावस् बरू ॥२४०॥

विष्णू हुन् रघुनाथ् सिता पनि इनै लक्ष्मी भनी जान्दछू ।
जानी जानि सिता हऱ्याँ त म उसै क्या आज डर् मान्दछू ॥
राम्का हात परी मरूँ भनि तँ[1] हेर्[2] सीताजिलाई हऱ्याँ ।
राम्का हात परी मऱ्याँ पनि भन्या संसार् सहज्मा तऱ्याँ ॥२४१॥

फेरी तुरुन्त रघुनाथ् सित लड्न जान्छू ।
मार्नन् मलाइ रघुनाथ् तब खूसि मान्छू ॥
संसारका सकल ताप्हरूलाइ तोडी ।
जान्याछु पारि तिमिलाइ त वारि छोडी ॥२४२॥

राग् द्वेष्को[3] भेल चल्छन् भँवरि सरि इ युग् घुम्दछन् बीच माहाँ ।
पुत्रादी मत्स्य झैं छन् रिस पनि वडवानल् सरीको छ ताहाँ ॥
कामैको जाल् छ ठूलो छ त पनि चलियो[4] तेहि जाल्लाइ फारी ।
संसार्सागर् सहज्मा तरि कन हरि थ्यैं बस्न जान्याछु पारी ॥२४३॥

---

१ होमनाथ—तँ ।
२ बम्बई—भनि तहाँ । भारतजीवन—हे ।
३ भारतजीवन, होमनाथ—राग् दोष्का ।
४ होमनाथ—चलियो ।

मन्दोदरी सित यती भनि लड्नलाई ।
कम्मर् कसेर बलियो रथ यक् मगाई ॥
रथमा चढेर रघुनाथ् सित जान आयो ।
राम्चन्द्रको सकल वानरफौज् डरायो ॥२४४॥

त्यो रावण् रणभूमिमा जब पुग्यो साम्ने हनूमान् गया ।
मूर्छा पारि गिराउँ यस् कन भनी एक् मुड्कि हान्दा भया ॥
छातीमा जब मुड्कि बज्रन गयो खुप् वज्र तुल्यै गरी ।
घूँडा टेकि गिर्‍यो पनी दुइ घडी मूर्छा तुरुन्तै परी ॥२४५॥

मूर्छा देखि उठ्यो र रावण तहाँ[2] स्याबास् तँ होस् विर् भनी ।
ठूलो[3] विर् हनुमानलाइ बुझि खुप् साहै सह्रायो पनी ॥
रावण्ले हनुमानको सहनि खुप् ताहाँ गरेथ्यो जसै ।
रावण्को[4] सब सेखि तोड्न हनुमान् विर् बोल्न लाग्या तसै ॥२४६॥

हे रावण् ! किन गर्दछस् सहनि यो धिक्कार् म मान्छु बरू ।
मेरो मुड्कि पर्‍या पछी पनि बचिस् बोल्छस् यहाँ क्या गरू ॥
एक् चोट् हान् तँ पनी मलाइ म पनी फेर् हान्छु छाती महाँ ।
एक् मुड्की अब हानुला तँ न मरी उम्केर जालास् कहाँ॥२४७॥

---

१ मबई—लड्न ।
२ होमनाथ—उँही ।
३ पैजन—ठुलो ।
४ पैजन—रावण्को ।

ई बात् श्रीहनुमानले जब गऱ्या वेसै भन्यो हों भनी ।
एक् चोट् श्रीहनुमानका हृदयमा ताकेर हान्यो पनी ॥
फेरी श्रीहनुमान् सऱ्या अघि तहाँ मुड्की उठाई जसै ।
रावण् टिक्न सकेन एक् क्षण पनी अन्यत्र भाग्यो तसै ॥२४८॥

रावणका सँग चार् जना विर थिया मन्त्री लड़ाकी पनी ।
ई चार् विर् कन चार् जना अघि सरी ऐल्हे निभाऊँ भनी ॥
अङ्गद् श्रीहनुमान नील नल ई चार् वीर कूदी गया ।
रावण्का सँगका ति चार् विर सहज् मारेर फिर्दा भया ॥२४९॥

ती चार् जना जब मऱ्या तब झन् रिसायो ।
राम्का उपर् अघि सरी कन बाण् खसायो ॥
वाङ्का बुँदै सरि ति शर् जब खस्न आया ।
खुप् वानरादि विरले पनि दुःख पाया ॥२५०॥

यो चाल् वानरको बुझी रघुपती साम्ने अगाडी सरी ।
लाग्या लड्न तहाँ अनेक् तरहले त्रैलोक्यका नाथ् हरी ॥
त्यो रावण् रथमा थियो रघुपती खाली जमिन्मा थिया ।
*राम्का खातिर इन्द्रले अति असल् एक् रथ् पठाई दिया* ॥२५१॥

---

१ होमनाथ—यो ।

जल्दी मातलि सारथी रथ लिई रामका हजुरमा गया ।
हात् जोरी कन रामका हजुरमा क्यै बिन्ति गर्दा भया ॥
हे नाथ ! रथ् लिइ इन्द्रका हुकुमले आयाँ खडा छू पनी ।
ये रथ्मा चढि बक्सियोस् हजुरले येस् बिन्ति पार्‍यो भनी ॥२५२॥

यो बिन्ती गरि मातली अघि सर्‍या स्वामित् सितानाथ् पनी ।
तेस् रथ्लाइ परिक्रमा गरि चढ्या चढ्नै उचित् हो भनी ॥
ताहाँ देखि त मच्चियो अधिक झन् सङ्ग्राम् निरन्तर् गरी ।
जुन् बाण् रावणले त छोड्छ उहि बाण् काट्छन् रमानाथ् हरी॥२५३॥

यस्तो रित् सित शस्त्र अस्त्र सब थोक् काट्या प्रभूले जसै ।
रावण्ले पनि राक्षसास्त्र लिइ रुप् फेर् हान्न लाग्यो तसै ॥
रावण् हान्दछ बाण् जती जति तहाँ सब् सर्प रुप् भै रह्या ।
हान्या बाण् रघुनाथले पनि र ती बाण् तो गरुड् भै रह्या ॥२५४॥

काट्या सर्प पनी सबै गरुडले पक्रेर टुक् टुक् गरी ।
तेस् बिच्मा शरवृष्टि गुप् नित गर्‍यो रामका अगाडी सरी ॥
धक्का फेरि दियो प्रभू कन तहाँ फेरी गिराऊँ भनी ।
हान्यो मातलिलाइ बाण् र पछि फेर् केतू खसाल्यो पनी ॥२५५॥

---

घोडैलाई पनी अनेक शरले खुप् हान्न लाग्यो जसै ।
आश्चर्यै भइ देवपीतृऋषिगण् खेद् मान्न लाग्या तसै ॥
लीलाले रघुनाथ् पनी जब तहाँ दुःखी सरीका भया ।
वानर्को सब फौज् विभीषण समेत् साहै डराई गया ॥२५६॥

बिस् बाहु दस सिर् भयङ्कर स्वरुप् मैनाक् सरीको भई ।
लड्थ्यो रावण रामका हजुरमा साम्ने नजीकै गई ॥
ऊठ्यो रिस् प्रभुको र तेहि बिचमा कालाग्नि जस्ता बनी ।
रावण्का दस सिर् गिराउन लिया जल्दी धनुर्बाण् पनी ॥२५७॥

कालाग्नी सरिको भयङ्कर स्वरुप् राम्को बनेथ्यो जसै ।
कामिन् पृथ्वि पनी भयङ्कर स्वरुप् देखिन् र राम्को तसै ॥
रावण्का पनि चित्तमा भय पऱ्यो उल्का बहुतै भयो ।
क्या गर्छन् प्रभुले यहाँ भनि तहाँ सब् लोक् डराई गयो ॥२५८॥

आकाश्मा बसि हेर्दथ्या जति थिया सब् देवतागण् पनी ।
कस्ता रित् सित मर्छ रावण यहाँ हेरौं तमासा भनी ॥
राम्को रावणको परस्पर तहाँ खुप् युद्ध ठूलो भयो ।
रात्रीको दिनको प्रकाश न भइ काल् धेर् युद्ध हूँदा गयो ॥२५९॥

---

१ होमनाथ—घोडा ।
२ बबई—धनुष् बाण् ।
३ सरिको ( ? )
४ होमनाथ—भयो ।
५ ऐजन—गया ।

रावण्को सिर काट्नलाइ जब बाण् फेंक्या प्रभूले तहाँ ।
तालैका फल झैं गिऱ्या त पनि सिर् गीरेन पृथ्वी महाँ ॥
एकोत्तर सयं सिर् गिऱ्या जति गिरुन् सब् बन्नं लाग्या जसै ।
क्या भो आज भनी प्रभू कन पनी आश्चर्य लाग्यो तसै ॥२६०॥

ठूला दैत्य बडा बडा विर पनी जुन् बाणले मारिया ।
सोही बाण् पनि आज रावण उपर् ताकेर खुप् मारियाँ ॥
काट्छन् सिर् पनि बाणले र दस सिर् भैंमा खसाल्छन् पनी ।
फेर् ज्यूँका तिउँ सिर् हुन्या गरु कसो क्या भो यहाँ को जनी ॥२६१॥

यो चिन्ता रघुनाथका जब पऱ्यो साम्ने विभीषण् गया ।
यो हेतू छ भनेर हेतु जति हो सब् बिन्ति गर्दा भया ॥
ब्रह्माको वरदान् छ सिर् खसि गया फेर् उम्रनन् सिर् भनी ।
फेर् अम्रित् पनि नाभिमा छ तब यो मर्दैन काट्या पनी ॥२६२॥

त्यो अम्रित् सब सोसि वक्सनु हवस् सब् सुकछ अम्रित् जसै ।
चाँडै त्यो मरि जान्छ तेस् बखतमा उठ्तैन फेरी कसै ॥
हात् जोरेर जसै विभीषणजिले यो गुह्य खोली दिया ।
ठाकुर्ले पनि अग्निबाण झटपट् हानेर सोसी लिया ॥२६३॥

---

१ भरतजीवन—सब । अध्यात्मरामायण—
भुजमेकोत्तरं छिन्नं शिरसां चैकवर्चसाम् ।

२ देवन—बन्न ।

३ गर्दा—हानिया ।

त्यो अग्नित् जब सोसि बक्सनु भयो यो दिन्छ अर्ती भनी ।
रिसले शक्ति लिईं विभीषण उपर् ताकेर हान्यो पनी ॥
रामले शक्ति र सिर् दसै छिनि दिया फेर् एक सिर्को भई ।
नाना शस्त्र लियेर खुप् सित लड्यो रामका अगाडी गई ॥२६४॥

तेस् बिचमा पनि मातली अघि सरी हात् जोरि बिन्ती गऱ्या ।
हे नाथ् ! रावण लड्छ यो अझ भन्या फेर् शस्त्र हान्नै पऱ्या ॥
ब्रह्मास्त्रै अब छोडि बक्सनु हवस् खुप् मर्म तोड्न्या गरी ।
मान्यों युक्ति त एक् यही छ नहिं ता मर्दैन काट्या पनी[3] ॥२६५॥

बिन्ती मातलिको सुनी प्रभुजिले एक् बाण् तुरुन्तै लिया ।
जसमा अग्नि र वायु सूर्य्य इ समेत् लोकपाल् बस्याका थिया ॥
मन्त्री वेदविधानले र धनुमा त्यो बाण् लगाया जसै ।
प्राणीलाइ पनी बहुत् भय भयो खुप् भूमि कामिन् पनी[4] ॥२६६॥

रावणको तहिं छाति ताकि कन बाण् छोड्या मरोस् यो भनी ।
तेस् बाणले त तहाँ सहज् मरि गयो घूमेर लोट्यो पनी ॥
बाँकी राक्षस जो थिया ति पनि सब् दौडेर भागी गया ।
जित् भो श्रीरघुनाथको भनि तहाँ सम्पूर्ण खुसी भया ॥२६७॥

---

१ होमनाथ—कन ।
२ देवन—मर्ने युक्ति छ देक बेहि ।
३ सर्व—मदन कम्ते गरी ।
४ यो श्लोक नेपालका संस्करणमा छैन तर यसमा भनेका कुरा मूलरामायणका अनुकूल छन् ।

तेस् बिच्मा नगरा बज्या प्रभु उपर् खुप् पुष्पवृष्टी भयो ।
नाच्या अप्सरगण् ऋषी खुसि भया सम्पूर्णको ताप् गयो ॥
रावण्को[1] पनि देह देखि तहिं तेज् निस्क्यो र सूर्य्यैं सरी ।
श्रीराम्चन्द्रजिमा मिली पनि गयो संसारसागर् तरी ॥२६८॥

विष्णूद्वेषि[2] परस्त्रिमा रत हुन्या यो ब्रह्मघाती पनी ।
श्रीराम्चन्द्रजिमा मिल्यो कसरि यो आश्चर्य लाग्यो भनी ॥
गर्थ्या बात् सबै देवतागणहरू नारद्जि ताहीं गया ।
जेले[3] रावण राममा मिलि गयो त्यो तॉहि भन्दा भया ॥२६९॥

साँचो भन्छु म आज देवगण हो ! यस्ले बहुत् ध्यान् गर्‍यो ।
सीतानाथ् प्रभुको र यो[4] तब सहज् संसारसागर् तर्‍यो ॥
भक्तीले भयले अवर् तरहले कौनै प्रकार्ले गरी ।
ध्यान् सीतापतिको गर्‍यो पनि भन्या जाइन्छ संसार् तरी ॥२७०॥

रावण् मारि धनू उतारि करको एक् शर् लिलाले गरी ।
चारौं तर्फ घुमाउदा शरिरमा घेर् बाणको खत् धरी[5] ॥
कोटी सूर्य्य सरी त तेज् छ जसका यस्ता जगन्नाथ् हरी ।
हाम्रा दुःख पनी सबै हरि दिउन् सम्पूर्ण पाप् नाश् गरी ॥२७१॥

---

१ भारतजीवन, नवल—[illegible] ।
२ नेपाल, भारतजीवन, रामकृष्ण—देखि । अन्य [illegible] पाठ दरियो— परदारले विष्णुद्वेषी [illegible] । [illegible] "विष्णुद्वेषि" भन्ने पाठ दिएको ॥
३ हेमनाथ—[illegible] ।
४ नेपाल, भारतजीवन—[illegible] ।
५ हेमनाथ—यो ।
६ देवन—[illegible] ।
७ हेमनाथ—पनी ।
८ देवन—[illegible] ।

रावण् मारि उतारि भारि भुमिको[1] सुग्रिव् विभीषण्हरू ।
लक्ष्मण् अङ्गद जाम्बवान् र हनुमान् जो जो थिया विर् अरू ॥
ती सब्लाइ हुकुम् भयो प्रभुजिको तिम्रै कृपाले गरी ।
मार्‍याँ रावणलाइ कीर्ति रहला तिम्रो[2] तिनै लोक् भरी ॥२७२॥

रावणका सब रानि आयर विलाप् खुप् गर्न लाग्या तहाँ ।
पृथ्वीमा लडि खुप् विभीषण पनी रोया रहन्थ्या कहाँ ॥
बीत्या दाज्यु भनी विभीषण पनी खुप् रून लाग्या जसै ।
लक्ष्मण्लाइ हुकुम् भयो प्रभुजिको संझाउ भन्न्या तसै ॥२७३॥

दाज्यूको किरिया गरुन् सब हरुन् ती रानिको शोक् पनी ।
हूकुम् येति मिल्यो र लक्ष्मण गया जल्दी बुझाऊँ भनी ॥
लाग्या भन्न अहो विभीषण ! तिमी क्या यो न जान्न्या सरी ।
लाग्यौ गर्न विलाप् अनेक् तरहले खाली जमिन्मा परी ॥२७४॥

तिम्रो यो अघि जन्ममा कउन हो ऐल्हे त दाज्यू भयो ।
फेरी क्या हुनलाइ रावण यहाँ छोडेर काहाँ गयो ॥
जरमा भै कन बालुवा जसरि फेर् फिर्छन् र गङ्गा महाँ ।
यसतैं[3] रित् सित फिर्दछन् इ दुनियाँ कैँ छैन आपनू यहाँ ॥२७५॥

१ नेपाल, भारतजीवन—भुविको ।
२ सोमनाथ—तिम्रै ।
३ ऐजन—उसतै ।
४ ऐजन—रुये ।

अज्ञान्‌को मति यो न लेउ तिमिले झूठो जगत् हो भनी ।
जानी श्री रघुनाथका चरणमा खुप् ध्यान् लगाऊ पनी ॥
प्रारब्धै बलवान् बुझेर सब यो राज्यादि गर्दै रहू ।
जो पर्छन् परि आउन्या[1] सब कुरा नीका न नीका सहू ॥२७६॥

दाज्यूको गरि हाल आज तिमिले क्रीया विधान्‌ले गरी ।
रुन्छन् रानिहरू बुझाउ अहिले चाँडै[2] अगाडी सरी ॥
यस्तै[3] ठाकुरको हुकुम् छ भनि बेस् रित्‌ले बुझाया जसै ।
विस्तार् लक्ष्मणको सुन्या र झटपट् ऊठ्या विभीषण् तसै ॥२७७॥

बिन्ती गर्न भनी[4] जहाँ प्रभु थिया ताहाँ तुरुन्तै गया ।
हात् जोरी कन रामका हजुरमा क्यै बिन्ति गर्दा भया ॥
हे नाथ् ! मर्जि भयो कबुल् गरि लियाँ आज्ञा सिरोपर् धरी ।
बिन्ती गर्छु तथापि सत्य भगवन् ! एक् भारि शङ्का परी ॥२७८॥

यो क्रूर हो प्रभु ! परस्त्रि पनी त हर्न्या ।
यसको क्रिया कसरि योग्य भनेर गर्न्या ॥
बिन्ती गर्‍या यति विभीषणले र ताहाँ ।
खूसी भई हुकुम भो उहि बीच माहाँ ॥२७९॥

---

१ सोमनाथ—आउने । 
२ पेजन—चाँडो । 
३ पेजन—यसुगे । 
४ नेपाल—भन्या ।

बालुनज्याल् रिस हुन्छ शत्रु सितको ऐल्हे मरीयो गयो।
यसको रिस् अब गर्नु छैन अब ता मेरो त रिस् दुर् भयो॥
रुन्छन् रानिहरू बुझाउ गर लौ क्रीया विधान्ले गरी।
पैल्हे यै[1] न गरी हुँदैन तिमिले यै हो क्रियाको घरी॥२८०॥

हूकुम् येति सुन्या जसै प्रभुजिको योग्यै हुकुम् भो भनी।
रानीलाइ बुझाउना कन गया चाँडै विभीषण् पनी॥
रानीलाइ बुझाइ सब् गरि सक्या क्रीया विधान्ले गरी।
रानी सब् घरमा पठायर गया जाहाँ थिया राम् हरी॥२८१॥

खूसी खुप् रघुनाथ् पनी हुनु भयो सम्पूर्ण खूसी भया।
बीदा भै कन मातली पनि तहाँ फेर् इन्द्र थ्यैं गै गया॥
लक्ष्मण्लाइ हुकुम् दिया प्रभुजिले पैल्हे दियाँ ता पनी।
गादीमा लगि फेर् विभीषण उपर् ऐल्हे तिमीले पनी॥२८२॥

देऊ लौ अभिषेक् भनी प्रभुजिको हूकुम् भयेथ्यो जसै।
लक्ष्मण्ले पनि[2] गादि माथि लगि[3] फेर् दीया अभीषेक् तसै॥
गादी माथि बसाइ साथ लिइ फेर् राम्चन्द्रजी थ्यैं गया।
लक्ष्मण्ले रघुनाथका हजुरमा सब् बिन्ति गर्दा भया॥२८३॥

---

१ भर्त्र—यो।
२ भारतजीवन, नेपाल—लगि।
३ होमनाथ—धरि।

तेस् विच्मा रघुनाथ् प्रसन्न हुनु भो पूग्यो प्रतिज्ञा भनी ।
सुग्रिव्‌लाइ पनी सहाउनु भयो तिम्रो[1] कृपा हो भनी ॥
ऐल्हे हे हनुमन् ! विभीषणजिका मतले सिता थ्यैं गई ।
सब् समचार बताउ जाउ अहिले सूनुन् बहुत् खुस् भई॥२८४॥

जो भन्छिन् ति कुरा बताउन यहाँ फेर् जल्दि आऊ भनी ।
हुकुम् हुन गयो[2] विभीषणजिका मतले हनूमान् पनी ॥
सीता थ्यैं हनुमान् पुग्या रुख मनी सीता बस्याकी थिइन् ।
पाऊमा हनुमान् पऱ्या जननिले चुप् भै नजर् खुप् दिइन्॥२८५॥

चीह्निन् ई हनुमान हुन् भनि र खुप खूसी भईथिन् जसै ।
विस्तार् बिन्ति गऱ्या सबै जननि थ्यैं श्रीरामजीको तसै ॥
झन् खूसी जननी भइन् खुसि हुँदै क्यै बोल्न लागिन् तहाँ ।
क्या दीन्या[3] तिमिलाइ चीज हनुमन् ! खूसी गरायौ यहाँ॥२८६॥

तिम्रो यै[4] प्रिय वाक्य तुल्य त अनेक् रत्नादिका हार् पनी ।
लाग्दैनन् अरु चीज देखि तठुलो यो चिज् दिन्या हो भनी ॥
झट् बिन्ती हनुमानले पनि गऱ्या श्रीराम् जगत्‌का पती ।
खूसी खुप् हुनुहुन्छ ता खुसि म छू चाहिन्न दौलत् रती ॥२८७॥

---

१ होमनाथ—तिम्रै ।

२ भारतजीवन, नेपाल—गया ।

३ नेपाल—क्या दीनू ।

४ होमनाथ—यो ।

यो बिन्ती सुनि खूसं भै कन तहाँ येती अह्राइन् पनी ।
राम्को दर्शन गर्छु बिन्ति गर गै भेट् गर्न खोज्छिन् भनी ॥
सीताका इ वचन[1] सुनेर हनुमान् राम्का हजुर्मा गया ।
दर्शन्को मतलब् थियो जननिको सो बिन्ति गर्दा भया ॥२८८॥

यो बिन्ती हनुमानले हजुरमा ताहाँ गऱ्याथ्या जसै ।
मर्जी भो प्रभुको विभीषणजिको साथ् लागि आया तसै[2] ॥
जाऊ ल्याउ सिताजिलाइ तिमिले सब् देह निर्मल् गरी ।
आउन् भेट्न सिता अनेक् तरहका भूषण् शरिर्मा धरी ॥२८९॥

हूकुम्ले हनुमानलाइ सँगमा लीई विभीषण् गया ।
जल्दी स्नान गराउना कन तहाँ खुप् यत्न गर्दा भया ॥
पैल्हे स्नान गराइ शुद्ध कपडा पैह्राइ भूषण् पनी ।
दीया सुन्दर जुन् थिया खुसि हुँदै पैहुन् सिताजी भनी ॥२९०॥

डोली माथि सिता चढाइ खुसि भै हींड्या विभीषण् जसै ।
दर्शन् गर्न भनेर वानरहरू आयेर घेऱ्या तसै ॥
चौकी गर्न भनेर डोलि नजिकै जो ता रह्याका थिया ।
सब् वानर्हरुलाइ तेस् बखतमा तिन्ले हटाई दिया ॥२९१॥

---

१ होमनाथ—खूसि ।
२ पेजन—कुरा ।
३ नेपाल, भारतजीवन—साथ् लाइ राखुन् तसै । माथी दियेको र यो पाठ दुवै निरर्थक प्रतीत हुन्छन् । अध्यात्मरामायण—आदातु मनमा ध्यात्वा राम आह विभीषणम् । गच्छ राजन् जनकजामानयाशु ममान्तिकम् ॥

कोलाहल् अधिकै भयो प्रभुजिले सून्या नजर् भो पनी ।
हूकूम् भो रघुनाथको किन तहाँ वानर् हटाया भनी ॥
आमा जानि ति हेर्दछन् सब जना हेरुन् ति वानर्हरू ।
डोलीमा किन चढ्दछिन् अब सिता पैदल् ति आउन् बरू ॥२९२॥

सूनिन् स्वामितको हुकुम् र जननी[1] जल्दी जमिन्मा झरिन् ।
पाऊ पर्छु भनेर खुप् खुसि हुँदै साम्ने अगाडी सरिन् ॥
काम्को सिद्ध गराउना कन सिता माया लियाकी थिइन् ।
काम् हो रावण मार्नको कुल समेत् त्यो सिद्ध पारी दिइन् ॥२९३॥

अग्नीमा अघि राखियाकि कन फेर् लीन्या तहाँ सुर् गरी ।
दोष् दीया रघुनाथले किन यहाँ आयौ नजीकै भनी ॥
आर्काका घरमा बस्याकि भनि यो दोषै दिनू भो जसै ।
लक्ष्मण्लाइ हुकुम् दिइन् जननिले विश्वास खातिर् तसै ॥२९४॥

हे लक्ष्मण् ! तिमि अग्नि बाल अहिले ताहीं प्रवेश् गर्दछु ।
साँचै छु त म बाचुँला झुठि भया ऐल्हे तहीं[3] मर्दछु ॥
हूकुम् लक्ष्मणले तहाँ जननिको सून्या र राम्को पनी ।
मत् पाई कन अग्नि खुप् गरि ठुलो बाली दिया वेस् भनी ॥२९५॥

---

१ सोमनाथ—हयदौ ।
२ पेवन—हुकुम् जननिले ।
३ पेवन—तहीं ।

सीताजी पनि खुप् प्रदक्षिण गरिन् राम्‌को र भक्ती गरी ।
अग्नीका नजिकै खडा पनि भइन् केही अगाडी सरी[1] ॥
धौता ब्राह्मणसंझि राम्‌चरणको ध्यान् भीत्र मन्‌मा धरिन् ।
सब्‌का साक्षि भनेर अग्नि सित हात् जोरी पुकारा गरिन् ॥२९६॥

जस्‌ता रित् सित रामका चरणमा ध्यान्‌मा[2] रह्याकी म छु ।
तस्तै[3] रित् सित अग्नि शीतल हउन् तापै न लागोस् कछु ॥
बोलिन् येति र अग्निमा पसि गइन् ताहाँ सिताजी जसै ।
सब्‌को[4] ताप् मनमा भयो बिरहको[5] बात् गर्न लाग्या तसै ॥२९७॥

सीता अग्नि विषे जहाँ त पसिथिन् इन्द्रादि लोक्‌पाल्‌हरू ।
ब्रह्मा रुद्र समेत् सबै तहिं गया जो देवता छन् अरू ॥
जम्मा भै रघुनाथको स्तुति गऱ्या सब् देवगण्‌ले पनी ।
ब्रह्माले पनि खुप् गऱ्या स्तुति तहाँ मालिक् इनै हुन् भनी ॥२९८॥

अग्नीले पनि बिन्ति खुप् सित गऱ्या राम्‌का चरण्‌मा परी ।
भूषण् वस्त्र अनेक् धऱ्याकि जननी सीता अगाडी धरी ॥
सीताजी कन आज सम्म त यहीं राखी दियाको थियाँ ।
काम्‌को सिद्ध भयो लिनू अब हवस् सीता हजुर्‌मा दियाँ ॥२९९॥

---

१ होमनाथ—साम्ने अगाडी सरी ।
२ ऐजन—ध्यान् मै ।
३ ऐजन—तेस्तै ।
४ ऐजन—सब्‌को ।
५ ऐजन—बिरहरू ।

अग्नीले पनि विन्ति वात् गरि तहाँ सीता जसै ता दिया ।
खूसी मन् रघुनाथको हुन गयो सीताजिलाई लिया ॥
सीताजी कन काखमा लिइ तहाँ ठाकुर् वस्याथ्या जसै ।
भक्तीले स्तुति इन्द्रले पनि गऱ्या खूसी भया सब् तसै ॥३००॥

फेर् विन्ती शिवले खुसी भइ गऱ्या रामका हजुर्मा तहाँ ।
सीतानाथ् ! म तं आउन्याछु पछि फेर् वाहीं अयोध्या महाँ ॥
ऐल्हे ई दशरथ् पिता हजुरका मिल्ला कि दर्शन् भनी ।
आया दर्शन आज बक्सनु हवस् स्वामित् प्रभूले पनी ॥३०१॥

यो विन्ती शिवको सुनेर दशरथ्जीका हजुर्मा गई ।
पाऊमा सिर राखि बक्सनु भयो अत्यन्त खूसी भई ॥
आलिङ्गन् दशरथ्जिले पनि गऱ्या ताऱ्यौ मलाइ भनी ।
वीदा भै दशरथ् खुसी भइ गया फेर् स्वर्गलोक्मा पनी ॥३०२॥

वानर्को जति फौज् मऱ्यो रण हुँदा ती सब् बचाऊँ भनी ।
अम्रित् वृष्टि गराउना कन हुकुम भो इन्द्रलाई पनी ॥
हुकुम् पाइ ति इन्द्रले पनि तहाँ अम्रित् गिराया जसै ।
वानर्को सब फौज् खडा पनि भयो रामका कृपाले तसै ॥३०३॥

---

[illegible]

विन्ती ताहिं गऱ्या विभीषणजिले राम्का चरण्मा परी ।
मङ्गल्स्नान् गरि बक्सियोस् हजुरले यो स्नानको हो घरी ॥
मङ्गल्स्नान् गरि वस्त्र भूषण धरी राज् आज याहीं हवस् ।
सेवक् हूँ करुणानिधान् ! हजुरको प्रीती म माथी रहोस् ॥३०४॥

बिन्ती सूनि हुकुम् भयो हुन त हो जान्या त हो स्नान् गरी ।
क्यारू आज घरै छ भाइ त भरत् मै झैं जटाजुट् धरी ॥
त्यो भाई पर राखि आज म यहाँ कुन् रीतले स्नान् गरू ।
सुग्रीव् वीर्हरु छन् इ देउ तिमिले इन्लाइ खिल्लत्[1] बरू ॥३०५॥

हुकुम् येति हुँदा विभीषणजिले रत्नादि वृष्टी गऱ्या ।
जस्ले जुन् चिज खोज्छ सो चिज दिईं सब् फौजको ताप् हऱ्या॥
सब् फौज्लाइ बिदा पनी दिनु भयो राम्ले कृपा खुप् गरी ।
फौज् वानर्हरुको पनी तरि गयो आनन्दमा खुप् परी ॥३०६॥

काम् सब् सिद्ध भयो यहाँ किन वसूँ जान्छु अयोध्या भनी ।
सीता लक्ष्मण साथमा लिइ चढ्या श्रीराम् विमान्मा पनी ॥
सुग्रिव् अङ्गदजी विभीषण समेत् राम्का हजुर्मा थिया ।
तिन्लाई पनि जाउ राज् गर भनी बीदा प्रभूले दिया ॥३०७॥

---

१ अध्यात्मरामायणमा खिल्लत भन्ने कुरा छैन। म०

ती सब्ले तहि बिन्ति खुप् सित गर्‍या जान्छौ अयोध्यै भनी ।
सब्को आग्रह देखि खूसि हुनु भो ताहाँ रमानाथ् पनी ॥
पुष्पक्मा चढं[1] आज आउं[2] तब लौ भन्न्या हुकुम् भो जसै ।
सुग्रिव् श्रीहनुमान अङ्गद चढ्या पुष्पक् विमान्मा तसै ॥३०८॥

आफ्ना मन्त्रि लिई विभीषण पनी तेसै विमान्मा बस्या ।
सेना सुग्रिवका पनी हुकुमले सम्पूर्ण ताहीं बस्या ॥
सीतानाथहरू सबै बसि रही शोभा अधिक् गर्दथ्या ।
सो शोभा कन वानरादि विरले झन् भारि मज्जा गर्‍याँ[3] ॥३०९॥

सेना समेत् सब विमान उपर् चढाई ।
हूकुम् दिया प्रभुजिले जबं जानलाई ॥
आकाशमार्ग गरि जान विमान धायो ।
शोभा अपूर्व रघुनाथ चढ्या र पायो ॥३१०॥

दौड्यो पुष्प विमान् जसै हुकुमले आकाश बिच्मा पसी ।
पृथ्वीको पनि याद् सबै हुन गयो तेसै विमान्मा बसी ॥
जुन् जुन् काम जहाँ जहाँ अघि भया याहाँ गर्‍याँ यो भनी ।
सीतालाइ नजर् गराउनु भयो खुस् भै प्रभूले पनी ॥३११॥

---

१ होमनाथ—चढि ।
२ ऐजन—जाउ ।
३ बर्दई—अत्यन्त झन् मान्थ्या ।
४ होमनाथ—मव ।
५ ऐजन—छम्यो ।
६ ऐजन—भयो ।
७ ऐजन—भयो । अध्यात्मरामायण—
अनवी मैथिली सीतां राम शशिनिभाननाम् ।
त्रिकूटशिखराग्रस्थां पश्य लङ्का महाप्रभाम् ॥

यो लङ्कापुरि हो अगम् छ बलले को जान सक्छन् अरू ।
त्यो भूमी रणभूमि हो तहिं मऱ्या ठूला ठुला विर्हरू ॥
ताहीं रावण कुम्भकर्ण त मऱ्या भारी लडाइँ गरी ।
लक्ष्मण्‌ले तहिं इन्द्रजित कन जित्या साम्ने अगाडी सरी ॥३१२॥

सागर्‌मा पनि हेर सेतु बलियो बाध्याँ र सागर् तऱ्याँ ।
रामेश्वर् भनि नाम राखि शिवको स्थापन् किनार्‌मा गऱ्याँ ॥
चार् मन्त्री सँग ली विभीषण तहीं आई शरण्‌मा पऱ्या ।
किष्किन्धा यहि हो यसै नगरिमा सुग्रीव राजा भया ॥३१३॥

वार्ता येति[1] गऱ्या सिता सित र फेर् तारा झिकाऊँ[2] भनी ।
सुग्रीव्‌लाइ हुकुम् भयो प्रभुजिको[3] तारा झिकाया पनी ॥
तारा रानिहरू समेत् चढि सक्या ताहाँ विमान्‌मा जसै ।
सीतालाइ नजर् गराउनु भयो वाली गिऱ्याको तसै ॥३१४॥

सीते ! हेर अगाडि पञ्चवटि बेस् राक्षस् तहाँ धेर् मऱ्या ।
त्यो आश्रम् पनि हो अगस्ति ऋषिको जस्‌ले कृपा खुप् गऱ्या ॥
तेसै पल्तिरको[4] सुतीक्ष्ण ऋषिको घेरै ऋषी छन् जहाँ ।
त्यो हो पर्वत चित्रकुट् भरतले भेट् नै गयाथ्या जहाँ[5] ॥३१५॥

---

१ होमनाथ—येहि ।
२ भारतजीवन—झिकाऊँ ।
३ होमनाथ—प्रभुजिले ।
४ ऐजन—वल् तिरको ।
५ नेपाल—भेट् गर्न आया यहाँ ।

जो आश्रम् जमुनाजिका [1] तिरमा ताहाँ भरद्वाज छन् ।
गङ्गा हुन् इं अगाडिकी नजरले देख्तै खुसी हुन्छ मन् ॥
जो देख्छयौ अझ छन् परै सरयु हुन् ती हुन् अयोध्यापुरी ।
पूरीलाइ गरे[2] प्रणाम तिमिले भक्ती गरी नीहुरी ॥३१६॥

सीताजी कन येहि रित् सित सबै खोलेर विस्तार् गरी ।
भारद्वाज् कन गै प्रणाम् पनि गन्या जल्दी जमिन्मा झरी ॥
हात् जोरी कन सोध्नु भो जब यहाँ[3] सब् जन् कुशल् छन् भनी ।
वृद्धै हुन् महतारिको छ गति क्या ज्यूँदै ति छन् की भनी ॥३१७॥

क्या बात् भाइ भनी[4] भरत् पनि भया सब्का उपर् काम् गरी ।
चौधै वर्ष रह्या व्रती भइ ति ता चिन्तन् म माथी[5] गरी ॥
भारद्वाज् ऋषिले पनी सब कुशल् थीया बताई दिया ।
हे नाथ् ! छन् कुशलै सबै भरतका मात्रै विपत्ती थिया[6] ॥३१८॥

हजुर पर हुनाले रोज् फलै मात्र खान्छन् ।
हजुर सरि खराऊ गादिमा राखि मान्छन् ॥
सिर भरि छ जटाजुट् वल्कलै छन् धऱ्याका ।
फगत हजुरमा छन् प्राण अर्पण् गऱ्याका ॥३१९॥

---

१ बबई—दूर ।
२ नेपाल—हे सीते ! गर ला ।
३ हामनाथ—तहाँ ।
४ हामनाथ, नेपाल—भनी, अति ।
५ भारतजीवन, नेपाल—सवारी ।
६ नेपाल—या पद छुट्यो छ ।

सब् जान्दछु हजुरले पनि ता' गऱ्याको ।
राक्षस्‌विनाश गरि भार् भुमिको हऱ्याको ॥
त्यो सब् प्रसाद् हजुरको सब तत्त्व जान्याँ ।
जो ब्रह्म हो उ त हजुर् कन आज मान्याँ ॥३२०॥

लीला गरी हजुरले अवतार् गऱ्याको ।
ब्रह्मादि देवगणका पनि ताप् हऱ्याको ॥
जो ई चरित्र कन खुस् भइ गान गर्छन् ।
संसार्‌समुद्र सहजै पनि आज तर्छन् ॥३२१॥

ब्रह्माजिका वचनले यहि रूप धारी ।
भार् हर्नु भो सकल रावणलाइ मारी ॥
सब् लोकको हित हुन्या अरु काम् गरीनन् ।
चौधै भुवन् हजुरका यशले भरीनन् ॥३२२॥

मेरो आज पवित्र घर् पनि हवस् एक् रात् यहाँ राज् गरी ।
भोली जानु असल् हुन्या छ पुरिमा बिन्ती छ पाऊ परी ॥
भारद्वाज् ऋषिले यती हजुरमा बिन्ती गऱ्या राज् भयो ।
सम्मान् सैन्य समेत् गऱ्या र ऋषिले सम्पूर्णको[2] ताप् गयो ॥३२३॥

---

१ हामनाथ–ख्यान् ।

२ भारतजीवन, नेपाल–सम्पूर्णका ।

हुकुम् भो हनुमानलाइ हनुमान् ! लौ शृङ्गवेर्मा गई ।
मेरा खुप् प्रिय छन् सखा गुह तहाँ तिन् थ्यैं समाचार् कही ॥
नन्दीग्राम् गइ भाइलाइ गरि भेट् श्रीराम आया भनी ।
मेरो लक्ष्मणको सिताजिहरुको समचार् बताऊ पनी ॥३२४॥

मैले काम जती गर्‍याँ भरत थ्यैं सम्पूर्ण विस्तार् गरी ।
वाहाँको समचार् लिई कन फिर्‍या सन्ताप् सबैको हरी ॥
हुकुम् यो हनुमानले जब सुन्या मानिस् सरीका[1] बनी ।
जल्दी गै गुहलाइ सब् कहि दिया आया सिताराम् भनी ॥३२५॥

फेर् जल्दी सरयू तरी कन गया देख्या अयोध्या पनी ।
नन्दीग्राम् जब देखियो तहिं गया जान्या उहीं हो भनी ॥
वैलाई रहँदा जउन् तरहले फुल् सुकछ फुस्रो भई ।
तसतैं[2] रैयतिको दशा नजर भो साहै करूणा गई ॥३२६॥

देख्या तहाँ भरतलाइ जटा धर्‍याका ।
श्रीरामका चरण चिन्तन खुप् गर्‍याका ॥
रामका खराउ कन मालिक जानि[3] मानी ।
हुकुम् दिंदा पनि त सेवक आफु जानी ॥३२७॥

---

१ [illegible] [illegible]
२ [illegible] ३ [illegible]
[illegible] ४ [illegible]

सब् गेरुवा पहिरि मन्त्रि पनी' बस्याका ।
राम्को भजन् तिर त कम्मर खुप् कस्याका ॥
देख्या भरत् कन र खुस् भइ हात जोडी ।
बिन्ती गऱ्या भरतका सब ताप तोडी ॥३२८॥

जस्को चिन्तन गर्नु हुन्छ महराज्! सो नाथ् सिताराम् पनी।
आई पुग्नु भयो मलाइ अघि जा भेट् भाइलाई भनी ॥
हूकुम् भो रघुनाथको र म यहाँ आयाँ हुकुम्ले गरी ।
सीता लक्ष्मणले सहित् कुशल छन् त्रैलोक्यका नाथ् हरी ॥३२९॥

येती बिर्‌हरु साथ छन् भनि कुशल् बिस्तार् सुनाया जसै ।
खूसी भै कन अङ्कमाल् पनि गऱ्या ताहीं भरत्ले तसै ॥
राम्को सुग्रिवको कहाँ हुन गयो भेट् सब् बताऊ भनी ।
सोध्या ताहिं भरत्‌जिले र हनुमान्ले सब् बताया पनी ॥३३०॥

सुग्रिव् सीत मित्यारि गर्नु पनि भो साहाय सुग्रिव् भया ।
लङ्कामा रहिछन् सिता र रघुनाथ्‌ज्यूका सँगै ती गया ॥
सीता रावणले हरेछ र बहुत् दुःखी सरीका भई ।
सीताजी कन खोजि खोजि रघुनाथ् फेर् ऋष्यमुक्मा गई ॥३३१॥

---

१ नेपाळ—मन्त्रि नीरै ( निरै ? ) बस्याका ।

चारै भाइ थियौं अगाडि अहिले पाचौं हुनू भो यहाँ ।
भाईका झइँ यो सहाय न भया राक्षस् जितिन्थ्या कहाँ ॥
यसता[1] प्रेम् सित बात् गऱ्या भरतले सुग्रीवजी ध्यैं गई ।
श्रीराम्चन्द्रजिका पऱ्या चरणमा शत्रुघ्न खूसी भई ॥३४०॥

लक्ष्मणजी कन दण्डवत् गरि सिताज्यूका चरण्मा पऱ्या ।
सेवक् हूँ करुणानिधान् ! हजुरको यो ताहिं विन्ती गऱ्या ॥
श्रीराम्चन्द्रजिका खराउ सिरमा राखी गयाका थिया ।
वेला भो भनि पाउमा भरतले ताहीं लगाई दिया ॥३४१॥

हात् जोरी विनती गऱ्या पनि तहाँ नासो लियाको थियाँ ।
यो गादी लिइ बक्सियोस् हजुरले मैले[2] हजुरमा दियाँ ॥
सब् कोष्मा[3] पनि अन्नको[4] र धनको[5] दस् खण्ड वढ्ता गरी ।
राख्याको छु दयानिधान् ! हजुरका सेवा विषे मन् धरी ॥३४२॥

यो विन्ती खुसिले तहाँ भरतले साम्ने गऱ्याथ्या जसै ।
देख्या भक्ति भरतजिको खुसि भई सम्पूर्ण रोया तसै ॥
नन्दीग्राम् पुगि उत्रि बक्सनु भयो ठाकुर् जमिन्मा पनी ।
पुष्पक्लाइ विदा पनी दिनु भयो कूवेर ध्यैं जा भनी* ॥३४३॥

---

१ होमनाथ—यस्तो ।
२ भारतजीवन—हो ।
३ होमनाथ—यै हो ।
४ पेजन—भोकमा ।
५ नेपाल—अन्नका ।
६ पेजन—धनका ।
* नेपाल—जाउ कुबेर् ध्यैं भनी ।

ताहाँ श्रीरघुनाथ् वशिष्ठ गुरुका पाऊ नमस्कार् गरी ।
याहाँ राज् गरि बक्सियोस् भनि असल् आसन् अगाडी धरी॥
आसन्मा गुरुलाइ राखि नजिकै आसन् विषे राज् भयो ।
पाया दर्शन रामको र सबका सम्पूर्ण सन्ताप् गयो ॥३४४॥

कैकेयी र भरत् मिलेर रघुनाथ्ज्यूका चरण्मा परी ।
हात् जोरी कन राज्य अर्पण गऱ्या बिन्ती बहूतै गरी ॥
जस्ले एक कटाक्षले सहज यो ब्रह्माण्ड सब् हर्दछन् ।
जो ऐश्वर्य छ इन्द्रको उ पनि एक् क्षण्मा तयार् गर्दछन्[1] ॥३४५॥

यस्ता शुद्ध अनन्त पूर्ण सुख रुप् ब्रह्मस्वरुप्ले पनी ।
क्या राज् गर्नु थियो तथापि लिनु भो खूसी हउन् ई भनी ॥
पैल्हे स्नान् भरतादिले जब गऱ्या क्षौर्ले जटा साफ् गरी ।
स्नान् सीतापतिको पछी तहिं भयो तेस्तै प्रकार्ले गरी ॥३४६॥

माला चन्दन वस्त्र येहि पहिरी आसन् विषे राज् भयो ।
राम्को स्नान् र सिताजिको तहिं सँगै हूँदा सबै ताप् गयो ॥
सीताराम् रथमा सवार् हुनु भयो सुग्रिव् विभीषण्हरू ।
हात्तीमा रथमा सवार् हुन गया घोडै महाँ कै अरू ॥३४७॥

---

१ सोमनाथ—उहि पनी छिन्मा तयार् गर्दछन् ।

रामका सारथि ता भरत् हुन गया सेवा म गर्छु भनी ।
सेतो छत्र लिया वहुत् खुसि हुँदै शत्रुघ्नजीले पनी ॥
पङ्खा लक्ष्मणले लिया प्रभुजिको सुग्रीवले ता चवँर् ।
आर्को चामर एक् विभीषणजिले खूसी भया सब् अवर् ॥३४८॥

मानिस्ले त वखान् कहाँ तक गरों सब् देवताले पनी ।
रामको कीर्तन खुप् गऱ्या र सुनियो मीठो मधूरध्वनी ॥
भेरी शङ्ख मृदङ्ग आदि नगडा खुप् वज्न लाग्या पनी ।
श्रीरामको पनि कुच् भयो रथ चढी जाऊँ अयोध्या भनी ॥३४९॥

श्रीरामको[1] पुरिमा प्रवेश् जव भयो[2] सब् पौरवासी पनी ।
निस्क्या वालक वृद्ध दर्शन गरौं हेरौं तमासा भनी ॥
देख्या श्रीरघुनाथलाइ रथमा थीया पिताम्वर् धरी ।
श्यामसुन्दर् छ शरिर् किरीट सिरमा भूषण् शरिर्मा धरी ॥३५०॥

लाल छन् नेत्र विशाल खुप् हृदयमेस् मेस् मोतिका हार छन् ।
शोभा चन्दन पुष्पको छ पनि मेस् देख्तै भयो खूसि मन् ॥
सून्या स्त्रीहरुले पनी सहरमा आया सिताराम् भनी ।
सबको[3] चञ्चल चित्त भो र वहुतै हेरौं सिताराम् भनी ॥३५१॥

---

१ नेपाल—रामले । ३ भालदेवन—सुप ।
२ देवन—गया । ४ देवन—सुन्दर ।

छोड्या काम् घरको चढ्या गृह उपर् सब् स्त्री अटाली गईं ।
लावा पुष्प गिराउँदै प्रभुजिको दर्शन् गऱ्या खुसि भै ॥
राम्को मोहनमूर्तिमा जब नजर् सब् स्त्रीहरूका पऱ्या ।
खूसी भै कन अङ्कमाल मनले सब् स्त्रीहरूले गऱ्या ॥३५२॥

ईषत् हास्य गरी प्रजा कन नजर् दींदै रमानाथ् पनी ।
दर्बार् पोचनु भो जहाँ त दशरथ् बस्थ्या उहीं जाँ[1] भनी ॥
कौशल्याहरुलाइ योग्य रितले ताहाँ नमस्कार् गरी ।
सुग्रिव्को पनि वास् खटाउनु भयो साह्रै पियारो गरी ॥३५३॥

सुग्रिव्जी कन राख भाइ ! तिमिले पैल्हे म बस्थ्याँ जहाँ ।
सब्लाई तिमिले खटाउ बढिया घर् बस्नलाई यहाँ ॥
हूकुम् येति हुँदा तहाँ भरतले सोही बमोजिम् गऱ्या ।
सब्को वास खटन् भयो सब तहाँ आनन्दसागर् पऱ्या ॥३५४॥

आफैं श्रीरघुनाथ् हुकुम् अब गरुन् यो मन् भरतले गरी ।
सुग्रिव्लाइ अह्राउनु पनि भयो खुस् भै अगाडी सरी ॥
हे सुग्रीव ! खटाउनू अब पऱ्यो विर् विर् विचार् खुप् गरी ।
चारौं तर्फ गई समुद्र पुगि जल् ल्याउन् कलशमा भरी ॥३५५॥

---

१ होमनाथ—उ आहाँ ।

श्रीराम्‌चन्द्रजिलाइ राज्य अभिषेक् गर्‍यो बखत् भो भनी ।
मर्जी भो र भरत्‌जिको उहि बखत् ल्याई दिया जल् पनी ॥
जल् लीना कन जाम्बवान् र हनुमान् अङ्गद् सुषेण् चार् गया ।
पौंच्या जल्दि समुद्रमा सहज जल् लीयेर दाखिल् भया ॥३५६॥

त्यो जल् साथ लिई वशिष्ठ गुरुका साम्ने भरतजी गया ।
यो हो चार समुद्रको जल भनी यो विन्ति गर्दा भया ॥
फेर् बिन्ती कर जोरि खुप् सित गर्‍या यै जल् हजुर्‌ले छरी ।
श्रीराम्‌चन्द्रजिलाइ राज्यअभिषेक् दीनू हवस् यस् घरी ॥३५७॥

यस्‌तो विन्ति सुनी वशिष्ठ गुरुले बेस् विन्ति गर्छौ भनी ।
श्रीराम्‌चन्द्रजिलाइ राखनु भयो सिंहासनैमा पनी ॥
गौतम् वाल्मिकि वामदेव इ समेत् जावालि ताहीं थिया ।
ती सब्‌ले सँग भै वशिष्ठ गुरुले जल्दी अभीषेक् दिया ॥३५८॥

कन्या ब्राह्मणले पनी तुलसिदल् हालेर कुश्‌ले असल् ।
मन्त्रैपूर्वक खूसि भै कन छर्‍या[1] राम्‌का उपर् शुद्ध जल् ॥
सेतो छत्र लिया तहाँ प्रभुजिको शत्रुनजीले गई ।
सुग्रिव्‌ले र तहाँ विभीषणजिले हाँक्या चमर् खुस् भई ॥३५९॥

---

१ भरतजीवन, नेपाल—गर्‍या ।

माला काञ्चन वायुले पनि दिया हार् इन्द्रजीले पनी ।
नाना रत्न खचित् गरायर दिया पैहुन् सिताराम् भनी ॥
गाऊँछन् तहिं देवका गणहरू सब् अप्सरा नाच्तछन् ।
बर्ष्यो खुप् सित पुष्पवृष्टि नगरा बजदा भयो खूसि मन् ॥३६०॥

गम्भीर् श्याम शरिर् किरीट् छ सिरमा माला पिताम्बर् धरी ।
कोटी काम समान सुन्दर स्वरुप् वाम् तर्फ सीता धरी ॥
सिंहासन् बसि सब् प्रजा तिर नजर् दीनू भयेथ्यो जसै ।
दर्शन् गर्न भनेर पार्वति समेत् आया सदाशिव् तसै ॥३६१॥

डिम् डिम् शब्द भयो तहाँ डमरुको नन्दी र भृङ्गी पनी ।
ताल् वेतालहरु नाच्न लागि ते[1] गया आया सदाशिव् भनी ॥
शम्भूका पछि देवगण् सब तहाँ आयेर हाजिर् भया ।
श्रीरामको स्तुति खुप् गरेर खुसि भै सब् जल्दि फर्की गया ॥३६२॥

बाजा खुप् शब्द गर्छन् स्तुति गरि ऋषिगण् देवगण् पाठ पर्छन् ।
बर्षन्छन् पुष्पवृष्टी प्रभु उपर अनेक् प्राणिले सौख्य गर्छन् ॥
सिंहासन्मा विराजमान् सकल गुणनिधान् राम् हुनू भो जसै ता ।
सीता लक्ष्मण् सँगै छन् प्रभु कन हुनगो पूर्ण शोभा तसै ता ॥३६३॥

---

१ होमनाथ—देवता । २ ऐजन—ति ।

राजा श्रीरघुनाथ् हुँदा पृथिविमा शस्यादि खूपै बढ्यो ।
थीयानन् अति गन्ध जौन फुलमा तिन्मा सुगन्धी वढ्यो[1] ॥
धेनूदान् वृषदान् गर्‍या प्रभुजिले तिस् कोटि सुन्दान् गरी ।
वस्त्राभूषण[2] रत्नदान् पनि गर्‍या दारिद्र्य सब्को हरी ॥२६४॥

दान्ले ब्राह्मण खुस् गराइ रघुनाथ् सुग्रीवलाई पनी ।
माला सूर्य समानको दिनु भयो दीनू उचित् हो भनी ॥
मर्याद् खुप् गरि[3] बाजुवन्ध दिनु भो अङ्गद्‌जिलाई पनी ।
ताहीं एक अमूल्य हार् दिनु भयो सीताजिलाई पनी ॥२६५॥

सीताले हनुमानलाइ दिन सुर् बाँधेर हात्मा लिइन्[4] ।
कस्तो हुन्छ हुकुम् भनी कन नजर् स्वामित् तरफ् खुप् दिइन्[5] ॥
जस्लाई दिन मन् छ देउ भनि यो हूकुम् भयेथ्यो जसै ।
प्यारा श्रीहनुमान् थिया तहिं दिइन् त्यो हार् सिताले तसै ॥२६६॥

झन् दर्जा हनुमानको तहिं चढ्यो[6] फेरी प्रभूले पनी ।
क्या माग्छौ वरदान माग तिमिले दिन्छु म त्यो वर् भनी ॥
हूकुम् बक्सनु भो तहाँ र हनुमान् खुस् भै अगाडी सर्‍या ।
जो माग्नू मनमा थियो हजुरमा हात् जोरि बिन्ती गर्‍या ॥२६७॥

---

१ होमनाथ—चढ्यो ।
२ ऐजन—वस्त्रैभूषण ।
३ ऐजन—मर्यादा गरि ।
४ भारतजीवन, नेपाल—लिई ।
५ ऐजन—दिई ।
६ होमनाथ—बढ्यो ।

स्वामित्! नाम हजूरको जब तलक् लीनन् जगत्मा बडा ।
ताहीं सम्म शरीर् रहोस् हजुर्का नाम् सुन्नलाई खडा ॥
स्वामित्! नाम हजूरका स्मरणमा आनन्द जो पाउँछु ।
त्यो आनन्दकन्तै मिलेन महराज्! तेही नं छुटोस् कछु ॥३६८॥

यो बिन्ती सुनि लौ भनी हुकुम भै फेरी कृपा भो पनी ।
बितला कल्प र यो बित्या पछि भन्या मुक्तै हुन्याछौ भनी ॥
हूकुम् यो रघुनाथको हुन गयो फेर् जानकीले पनी ।
जो जो हुन् सुख भोग् सबै वश रहुन् तिम्रा हनूमान् भनी ॥३६९॥

आशीर्वाद् यति बक्सनू जब भयो बीदा हनूमान् भया ।
आनन्दाश्रु गिराइ तप् गरुँ भनी हीमालयैमा गया ॥
फेर् ठाकुर् गुहका अगाडि गइ यो हूकुम् कृपाले गऱ्या ।
जाऊ लौ घर मै बसी रहु फगत् मन् मात्र मैमा धऱ्या ॥३७०॥

यो प्रारब्ध ठुलो छ[1] भोग न गरी टर्दैन कर्त्तै गरी ।
हून्यैछौ तिमि मुक्तदेह पछि ता संसार् सहज्मा तरी ॥
हूकुम् यो गरि मुख्य भक्त गुहका साम्ने अगाडी सरी ।
आलिङ्गन् दिइ भूषणादि दिनु भो राज्यै समेत् थप् गरी ॥३७१॥

---

१ सोमनाथ—गुहजी ।

तत्त्वं ज्ञान् पनि बक्सनू तहिं भयो आनन्दसागर् परी ।
बीदा भै गुहजी गया घर महाँ मन् रामचरण्मा धरी ॥
यस्तै रित् सित सब् बिदा तहिं हुँदै सुग्रिव् विभीषण् गया ।
लक्ष्मण् सेवक छन् सदा हजुरमा राम् राज्य गर्दा भया ॥३७२॥

आत्मारुप् सब कर्मका अधिपती निर्मल्[२] अकर्ता पनी ।
कर्ता भै कन लोकलाइ उपदेश् गर्न्या उचित् हो भनी ॥
गर्ना लायक अश्वमेधहरु जो ठूला ठुला यज्ञ हुन् ।
ती सब् यज्ञ पनी गर्न्या प्रभुजिले बाँकी रहन्थ्यो[३] कउन् ॥३७३॥

राजा राम् भइ बक्सनू जब भयो प्राणी प्रजा खुस् भया ।
जो पर्थ्यो अघि ताप् अनेक् तरहका ती सब् प्रजाका गया ॥
गर्दैनन् विधवा विलाप् मुलुकमा लाग्दैन रोग् व्याध् पनी ।
सब् डाकू दविर्यां परेन कहिं ताप् यो चिज् हरायो भनी ॥३७४॥

बूढो बाँचि मरेन बालक कहीं यस्तो मुलुक्मा भयो ।
छोरा झैं गरि पालि बक्सनु हुँदा सब् ताप् प्रजाको गयो ॥
गर्छन् राघवको भजन् जनहरू बर्षन्छ मेघ् कालमा ।
वर्णाश्रम् सब धर्म छन् दिन बित्या सब्का सुखै चालमा ॥३७५॥

---

१ होमनाथ—स्वै ।
२ भारतजीवन—निर्मूल । अध्यात्मरामायण—
रामस्तु परमात्मापि कर्माध्यक्षोऽपि निर्मलः ।
३ होमनाथ—रहन्थ्या ।
४ ऐजन—दबिये ।

अयुत वर्ष त राज् प्रभुको भयो ।
सकल ताप् दुनियाँहरुको गयो ॥
शिवजिले यति पार्वति ध्यैं कह्या ।
सकल पाप् छुटि जान्छ सुनी रह्या ॥३७६॥

श्रीरामका यति कथा कन जो कहन्छन् ।
सब् थोकले ति परिपूर्ण भई रहन्छन् ॥
धन् पुत्र राज्यहरु कम्ति हुँदैन केही ।
पाप् हर्नलाइ पनि मुख्य छ धर्म येही ॥३७७॥

जन्मन्छन् तर मर्दछन् पनि सबै जसका त छोराहरू ।
तेस्ता स्त्रीहरुले भने यति सुन्या बाँच्छन् पछीका अरू ॥
वन्ध्या स्त्री पनि पाउँछे सुत असल् गर्छन् कृपा राम् धनी ।
आधिव्याधि अनेक दुःख भय ताप् पर्दैन कैल्हे पनी ॥३७८॥

श्रीरामको यति कथा जतिले त सुन्छन् ।
सब् देवता ति सँग खुप् सित खूसि हुन्छन् ॥
जो विघ्न हुन् ति पनि नष्ट भयेर जान्छन् ।
सम्पूर्ण जन् पनि तिनै कन आइ मान्छन् ॥३७९॥

---

१ भरतजीवन—जनपूर्ण ।

आधिव्याध् दुख[1] छुट्तछन् अरु उपर् धन् धान्य सन्तान् पनी।
बढ्छन् इष्ट कुटुम्ब मित्रहरुका मान्या ति हुन्छन् भनी ॥
यस्ताको त बखान् कहाँ तक गरौं यो मन् प्रभूमा धरी ।
गर्छन् रामभजन् त मुक्ति[2] पनि मै जान्छन् ति संसार् तरी ॥३८०॥

शम्भूले सब वेदमन्थन गऱ्या श्रीरामको[3] नाम् सरी ।
आर्को तत्त्व मिलेन केहि र लिया साहै पियारो गरी ॥
सोही तत्त्व त पार्वती कन दिया अध्यात्म रुप्ले गरी ।
जस्ले प्रेम् गरि सुन्छ यो सहज त्यो उत्रन्छ संसार् तरी ॥३८१॥

इति श्रीयुद्धकाण्ड समाप्त ।

---

१ सोमनाथ—पनि ।
२ नेपाल—भक्ति ।
३ नेपाल, भारतजीवन—श्री रामका ।

# श्रीउत्तरकाण्ड

शम्भूका मुख देखि राज्य अभिषेक राम्को सुनीथिन् जसै ।
सोधिन् पार्वतिले सदाशिवजि थ्यैं लीला पछीका[1] तसै ॥
पृथ्वीमा कति वर्ष राज् हुन गयो लीला तहाँ कुन् भया ।
कसता रित् सित राज्य छोडि रघुनाथ् वैकुण्ठधाम्मा गया ॥ १ ॥

शम्भो ! श्रीरघुनाथका जति त छन् लीला कृपाले गरी ।
आज्ञा आज हवस् म सुन्छु भगवन् ! बिन्ती छ पाऊ परी ॥
यो बिन्ती जब शम्भुका चरणमा श्रीपार्वतीले गरिन् ।
सब् लीला प्रभुका कह्या शिवजिले खुप् हर्षमा ती परिन् ॥ २ ॥

रावण् मारि उतारि भारि[2] भुमिको राम् राज्य गर्छन् भनी ।
ज्ञानी एक् दिन ता गया ऋषि अनेक् भेटौं सिताराम् भनी॥
दुर्वासा भृगु अङ्गिरा इ पनि छन् कश्यप् र वाम्देव् भया ।
विश्वामित्र असित् र कण्व सहितै सप्तर्षि अत्री गया ॥ ३ ॥

---

१ नेपाल—पछीक ।
२ होमनाथ—भार ।

सब् शिष्यै सहितै अगस्तिजि गया द्वारमा पुग्याथ्या जसै ।
हाजिर् जल्दि पठाइ मर्जि भइ सब् पोंच्या हजुर्मा तसै ॥
पूजा सब् ऋषिको गऱ्या प्रभुजिले सब्लाइ आसन् दिया ।
खूसी सब् ऋषिगण् भया हजुरमा जो जो गयाका थिया ॥ ४ ॥

पैल्हे प्रश्न गऱ्या तहाँ कुशलको[1] रामले र आदर् गरी ।
सोध्या सब् ऋषिले पनी कुशलको[2] विस्तार् बडो प्रेम् गरी ॥
बिन्ती सब् ऋषिले गऱ्या हजुरमा स्वामित् ! ठुलो काम् भयो ।
पृथ्वीको अति भार इन्द्रजित हो भार् तेहि जाँदा गयो ॥ ५ ॥

विर् हुन् रावण कुम्भकर्ण त[3] पनी यो इन्द्रजित् झन् जबर् ।
विर् हो त्यो पनि मारि बक्सनु भयो को जितन सक्थ्यो अबर् ॥
लङ्कामा इनि दुष्टको मरण भो साँचा विभीषण् थिया ।
पाया राज्य कनक झैं र खुसिले चाकर् सदाका भया ॥ ६ ॥

जो दक्षिणा अभयको अघि हो दियाको ।
सो पूर्ण गर्न कन दुष्ट हरी लियाको ॥
देख्यौं कृतार्थ हुनु भो रघुनाथ ऐल्हे ।
मर्थ्या इ राक्षसहरू अरु देखि कैल्हे ॥ ७ ॥

---

१ होमनाथ—कुशलका ।
२ नेपाल—कुशलका ।
३ हो०नाथ—र ।

यो बिन्ती ऋषिको सुन्या प्रभुजिले आश्चर्य मान्या पनी ।
क्याले रावण देखि झन् अति ठुलो भो इन्द्रजित् विर् भनी ॥
सोध्या सब् ऋषिका अगाडि र तहाँ साम्ने अगस्ती थिया ।
यसतो हो तब विर् सुन्यौ भनि सबै बिस्तार् बताई दिया ॥ ८ ॥

ब्रह्माका सुत हुन् पुलस्त्य तपका खातिर् सुमेरू गया ।
राजर्षी तृणबिन्दुका नगिचमा आश्रम् ति गर्दा भया ॥
तप् गर्थ्या तहिं देवपुत्रिहरु सब् आयेर खुप् गान् गरी ।
नाच्थ्या हास्यकला अनेक् तरहका गर्दै नजर्मा परी ॥ ९ ॥

तप्को विघ्न हुन्या पुलस्त्य ऋषिले बूझ्या बडा धिर्[१] थिया ।
जुन् स्त्री देख्छु म गर्भिणी उहि हवस् भन्न्या सराप् पो दिया ॥
भाग्या सब् तृणबिन्दुपुत्रि त सुनी साम्ने नजीक्मा गइन् ।
देख्ता ताहिं पुलस्त्यले र ति उसै झट् गर्भिणी पो भइन् ॥ १० ॥

कामिन् खुप् डरले पिता सित गइन् जान्या पिताले पनी ।
छोरी गर्भिणि भै छ आज ऋषिका साँचा वचन्ले भनी ॥
जानी छोरि पुलस्त्यजी कन दिया जल्दी नजिक्मा गई ।
ती कन्या ति पुलस्त्यले पनि लिया अत्यन्त खूसी भई ॥ ११ ॥

---

१ रोमनाथ—माने ।
२ रेजन—वीर् ।

तिन्का पुत्र त विश्रवा हुन गया खुप् ब्रह्म जान्न्या मुनी ।
भारद्वाज् ऋषिले तिनै कन दिया छोरी बड़ा गुण् सुनी ॥
तिन्का पुत्र कुबेर् भया गुणनिधान् तिन्ले तपस्या गरी ।
ब्रह्मालाइ रिझाउँदा ति धनका मालिक् भया तेस् घरी ॥ १२ ॥

मालिक् दौलतको गरायर गरुन् यस्मा सयल् खुप् भनी ।
ब्रह्माले तहिँ फेरि पुष्पक विमान् तिन्लाइ दीया पनी ॥
तेसै माथि चढी पिता सित गई तप्को सबै फल् कह्या ।
सब् पायाँ तर वास् त पाइन कता जाऊँ म भन्दा भया ॥ १३ ॥

सून्या बिन्ति कुबेरको र खुसि भै ती विश्रवाले पनी ।
लङ्का खालि थियो र तेहि दिनु भो लौ राज्य गर् जा भनी ॥
लङ्कामा अघि राज्य राक्षसहरू गर्थ्या बडा विर् थिया ।
तिन्कै खातिर विश्वकर्म खुसि भै लङ्का बनाई दिया ॥ १४ ॥

आज्काल् राक्षस विष्णुले जिति लिंदा भागेर पातालमा ।
लङ्का खातिर गै गया र सहरै खाली छ यस् कालमा ॥
आज्ञा येति दिया कुबेर् कन तहाँ ती विश्रवाले जसै ।
लङ्कामा ति कुबेर् गई कन बस्या राज् गर्न लाग्या तसै ॥ १५ ॥

---

१ होमन्याय—भिर् ।　　२ नेपाल—जती ।

एक् दिन् कैकसि छोरि ली कन ठुलो राक्षस् सुमाली पनी ।
डुल्थ्यो यस् पृथिवी विषे सब घुमी हेरूँ तमासा भनी ॥
पाताल् बाट सयल् गरूँ भनि यहाँ आयेर डुल्दा तहाँ[1] ।
पुष्पक् माथि चढेर खुप सित सयल् गर्थ्या कुबेर्जी जहाँ[2] ॥ १६ ॥

लाग्यो दृष्टि सुमालिको र मनले मान्यो बडा हुन् भनी ।
यस्ता विर् कुलमा कसो गरि हुनन् यस्तो चितायो पनी ॥
लाग्यो कैकसिलाइ भन्न अहिले पुत्री ! यती काल् गयो ।
कोही वर् पनि आउँदैन गरुँ क्या यौवन् त तिम्रो भयो ॥ १७ ॥

तस्मात् आज त विश्रवा ऋपिजि थ्यैं जाऊ र साम्ने गई ।
हात् जोरी ऋतुदान माग तिमिले दासी चरण्की भई ॥
यस्ता पुत्र हुनन् अवश्य इ उनैका पुत्र हुन् विर् भनी[3] ।
छोरीलाइ त विश्रवा सित तहाँ तेस्ले पठायो पनी ॥ १८ ॥

जल्दी कैकसि विश्रवा सित गई साम्ने खडा भै रहिन् ।
पृथ्वी तर्फ नजर् दिई चरणले लेख्ती जमिन्मा भइन् ॥
चेष्टा कैकसिको नजर् गरि तहाँ ती विश्रवाले पनी ।
कन्या कस्कि तँ होस् बता किन यहाँ आइस् अगाडी भनी ॥ १९ ॥

---

१ होमनाथ—महाँ ।
२ नेपाऊ, होमनाथ—तहाँ ।
३ पैवद—यस्ता पुत्र हुनन् अवश्य उनका पुत्रै हुनन् वीर् भनी ।
अध्यात्मरामायण—स्वयमेव ततः पुत्रा भविष्यन्ति महाबलाः ।
ईदृशाः सर्वशोभाढ्या धनदेन समाः शुभे ॥

सोध्या कैकसिलाइ लाज् हुन गयो लाज्का सकस्मा परिन्।
ध्यानैले सब जानि वक्सनु हवस् यस्तो त विन्ती गरिन् ॥
सून्या विन्ति र झट् विचार् पनि गऱ्या मालुम् भयो सब् जसै ।
छोरा पाउन आइछस् भनि तहाँ बोल्या ऋषीले तसै ॥२०॥

वेला दारुण पारि आज ऋतुदान् मागिस् म दिन्छु पनी ।
दोटा पुत्र हुनन् भयङ्कर स्वरुप् वेला सरीका भनी ॥
भारी बात् गरि दान् दिया र ऋतुको ती बात् जसै ता सुनिन् ।
कुन् रितले अब पाउँ पुत्र वढिया यस्तो वहूतै गुनिन् ॥ २१ ॥

विन्ती कैकसिले गरिन् उहि वखत् स्वामित् पती भै पनी ।
तेस्ता पुत्र वुझाउँला म कसरी यो मन् कठिन् भो भनी[1] ॥
सून्या विन्ति तहाँ दया पनि उठ्यो ती विश्रवाको पनी ।
तेस्रो पुत्र हुन्या छ राम्चरणको दास् वुद्धिमान् खुप् भनी ॥ २२ ॥

पत्नी कैकसिलाइ येति ऋषिले दीया कृपा खुप् गरी ।
खूसी कैकसि भै गइन् ऋषि रह्या ध्यान्मा वहुत् मन् धरी ॥
जन्म्यो रावण पूर्ण गर्भ जव भो सिर् दस् भुजा वीस् धरी ।
उल्का आदि भया अनेक् तरहका कामिन् भुमी खुप् गरी ॥ २३ ॥

---

१ भेदक—पनी ।

रावण्का पछि कुम्भकर्ण अति विर् जन्म्यो उसैका मनी ।
जन्मी शूर्पणखा पछी गुणनिधान् जन्म्या विभीषण् पनी ॥
शान्तात्मा बढिया विभीषण भया बस्थ्या ति शास्त्रै सुनी ।
दुष्टात्मा अति कुम्भकर्ण हुन गो डूलेर खान्थ्यो मुनी ॥ २४ ॥

बैन्ही शूर्पणखा भई जगतमा दुष्टात्म भै डुल्दथी ।
नक्कट्टी भइ गै पछी हजुरका तेज्ले कहाँ बाँच्तथी ॥
रावण्को त बखान् कहाँ तक गरौं सब् लोकको रोग् सरी ।
लाग्यो रावण बढ्न रोज् भय दिंदै तिन् लोक् वशैमा गरी ॥ २५ ॥

सर्वान्तर्यामि साक्षी हृदय हृदयमा आत्मरुप्ले रह्याका ।
निर्मल् सर्वज्ञ पूर्णै प्रभु पनि नरको रूप ऐल्हे भयाका ॥
सोध्नू भो आज लीला गरि कन त सबै रावणादीहरूको ।
विस्तार् बिन्ती म गर्छु अरु पनि भगवन् ! तेज् हर्‍या जो अरूको ।२६

ब्रह्म स्वरुप् प्रभु भनेर[1] हजूरलाई ।
जानेर डुल्छु म अनुग्रह केहि पाई ॥
यसतो अगस्ति ऋषिले जब बिन्ति लाया ।
साँचो कुरो प्रभुजिले ऋषि थ्यैं बताया ॥ २७ ॥

---

१ नेपाल, भारतजीवन—भनेर—यो पाठ निरर्थक छ । स०

माया छ यो सब जगत् भनि नित्य जानी ।
आनन्द यस् विषयमा रति भर् न मानी ॥
मेरो भजन् गरि रहोस् सब पाप हर्न्या ।
येही उपाय छ सहज सित पार तर्न्या[1] ॥ २८ ॥

एक् दिन् पुष्पकमा चढी कन कुबेर् आया पिता थ्यैं जसै ।
देखिन् कैकसिले र पुत्र सित गै क्यै भन्न लागिन् तसै ॥
देख्यौ पुत्र ! कुबेरलाइ तिमिले सब् द्रव्यका छन् धनी ।
गर्छन् पुष्पकमा सयल् खुसि हुँदै तेजस्वि देख्तै पनी ॥ २९ ॥

जस्तो यत्न गरेर हुन्छ तिमिले सो यत्न ऐल्हे गरी ।
सब्को मालिक भै सयल् गर अनेक् यस्तै इनैले सरी ॥
रावण्ले इ वचन् सुनी जननिकै साम्ने प्रतिज्ञा गर्‍यो ।
हे मातर् ! म बडै भयेर रहुँला क्या आज चिन्ता पर्‍यो ॥ ३० ॥

यस्तो बात् तहिं कैकसी सित गरी तप् गर्न रावण् गयो ।
गोकर्णेश्वरमा[2] गई दृढ भई तप् गर्न लाग्दो भयो ॥
रावणका सँग कुम्भकर्ण विभिषण् भाई दुवै ती गया ।
ईश्वरलाइ गरौं प्रसन्न भनि खुप् तिन्ले पनी मन् दिया ॥ ३१ ॥

---

१ नेपाल—पार हर्न्या ।

२ यो ठाउँ नेपाल्का खाल्डामा छ । सं०

तप् गर्दा हुँदि कुम्भकर्ण विरको ताहाँ अयुत् वर्ष गो ।
टेकी एक चरण् विभीषणजिको पाँचै हजार् मात्र भो ॥
रावण्को त बखान् कहाँ तक गरौं ठूलो तपस्या गर्‍यो ।
खुप् एकाग्र भयेर रोज् प्रभुजिका ध्यान्मा बहुत् मन् धर्‍यो ॥ ३ २ ॥

दस् हज्जार् जब दिव्य वर्ष बिति गो एक् सिर् तसै होम् गरी ।
यसतै रीत् सित नौ त सिर् पनि हुम्यो भक्ती प्रभूमा धरी ॥
नौ सिर् होम् गरि सिर् दसै पनि तहाँ दीनै तयार् भो जसै ।
ब्रह्मा आइ हटाइ वर् दिन तयार् हूनू भयो पो तसै ॥ ३ ३ ॥

हे रावण् ! वर माग दिन्छु अहिले इच्छा बमोजिम् भनी ।
ब्रह्मा बाट दया भयो र खुसि भै माग्यो तहाँ वर् पनी ॥
हे नाथ् ! वर् त अमर् म पाउँ न मरूँ कै वीर देखी कसै ।
मानिस्को त डरै म मान्दिन रती मेरा सदा छन् बसै ॥ ३ ४ ॥

ब्रह्माले पनि लौ भनेर वरदान् माग्यै बमोजिम् दिया ।
काट्याका पनि सिर् तयार् गरि दिया जस्तै अगाडी थिया ॥
ब्रह्माजी तहिँ फेर् विभीषणजिका साम्ने नजिक्मा गया ।
इच्छा क्या मनमा छ माँग उहि[2] वर् दिन्छु म भन्दा भया ॥ ३ ५ ॥

---

१ भारतजीवन, नेपाल—म ।

२ भारतजीवन—माँग् तँ उहि ।

माग्या वर् खुसि भै विभीषणजिले हे नाथ् ! निरन्तर् मती[1] ।
धर्मैं तर्फ रहोस्[2] अधर्म तिर ता कैल्हे न लागोस् रती[3] ॥
ब्रह्माले अधिकै दया गरि दिया होला तॅलाई भनी ।
मागेनन् त पनी तहाँ गरि दिया कल्पान्त[4] आयू पनी ॥ ३६ ॥

फेर् कुम्भकर्ण विरका अघि जल्दि आई ।
आज्ञा भयो अब त दिन्छु म वर् तॅलाई ॥
क्या माग्दछस् भनि दया हुन गो जसै ता ।
जिह्वा विषे गयर वाणि बसिन् तसै ता ॥ ३७ ॥

वाणीले जब मोह खुप् सित भयो घत्को बिघत्को पनी ।
थाहा केहि भयेन तेस् कन तहाँ यस्तो म मागूँ भनी ॥
माग्यो मूढ भयेर येहि वरदान् निद्रा छ मैन्हा परोस् ।
एक् दिन् मात्र मलाइ खानपिनको[5] खातीर निद्रा टरोस् ॥ ३८ ॥

यस्तो वाक्य सुनेर तेहि वरदान् दीया प्रभूले जसै ।
सून्या त्यो वरदान देवगणले खूसी भया सब् तसै ॥
जिह्वा देखि सरस्वती जब गइन् खेद् तेस् बखत्मा पऱ्यो ।
इच्छा ईश्वरकै रहेछ बलवान् भन्न्या विचार् यो गऱ्यो ॥ ३९ ॥

---

१ भारतजीवन—भनी, नेपाल—मती, बम्बई—भई ।
२ भारतजीवन, नेपाल—रही ।
३ ऐजन—मती ।
४ भारतजीवन—कल्याण, नेपाल—एक् कल्प ।
५ होमनाथ—खान पिनको ।

बावू कैकसिको सुमालि खुसि भो पायो र यो सब् खबर् ।
आयो जल्दि तहाँ प्रहस्तहरु घेर् सङ्मा थिया विर् जबर् ॥
रावणका अघि गै भन्यो खुसि हुँदै हे पुत्र ! खुप् काम् गऱ्यौ ।
विष्णूको अघि डर् थियो अब गयो सन्ताप् तिमीले हऱ्यौ ॥ ४० ॥

लङ्कामा अघि राज्य राक्षसहरू गर्थ्या बडा खुस् थिया ।
विष्णूले गइ छिन्न भिन्न गरि सब् राक्षस् धपाई दिया ॥
क्यारौं जोर् न पुगेर भागि कन सब् पाताल् गयाका थियौं ।
तिम्रो आज सहाय पाइ कन पो आई बताई दियौं ॥ ४१ ॥

आजकाल् राज्य कुबेरको छ तिमिले मागी बलात्कार् गरी ।
जुन् पाठ्ले गरि हुन्छ लेउ अहिले स्थान्[1] छैन लङ्का सरी ॥
राजाको त हुँदैन वन्धु सितको बन्धुत्व धर्मै पनी ।
यो सन्देह न मान कत्ति कसरी लङ्का म लीऊँ भनी ॥ ४२ ॥

यसतो बिन्ति सुमालिको सुनि भन्यो लङ्का कसोरी हरूँ ।
दाज्यू हुन् पितृ तुल्य छन् तहिं बसुन् अन्तै बसूँला बरू ॥
यस्तो रावण-को वचन् सुनि तहाँ साम्ने प्रहस्तै सऱ्यो ।
रावणको मन फेर् फिराउन बहुत् सिप् लाइ बिन्ती गऱ्यो ॥ ४३ ॥

---

१ सोमनाथ—थान्

हे नाथ् ! कश्यपपुत्र हुन् इ जति छन् चौता र राक्षसहरू ।
लड्थ्या ती पनि तो[1] भन्या त अरुको विन्ती कहाँ तक् गरूँ॥
तस्मात् आज कुबेर छन् त पनि सो लङ्का लिन्या हो भनी ।
हात् जोरी विनती गर्‍यो र सुनि त्यो विन्ती त मान्यो पनी ॥ ४४ ॥

येसै बिन्ति गरिस् भनी उहि बखत् दौडी त्रिकुट्मा गयो ।
छोड्यो दूत प्रहस्तलाइ र कुबेर् लाई निकास्तो[2] भयो ॥
बाबूको मतलब् बुझी कन कुबेर् छोडेर कैलाश् गया ।
तप गर्दा शिव खुस् गराइ शिव थ्यैं विन्ती ति[3] गर्दा भया ॥ ४५ ॥

इच्छा माफिकको बनाउन कुशल् जो विश्वकर्मा थिया ।
तिन्ले बेस् अल्कापुरी पनि कुबेर्लाई बनाई दिया ॥
दिक्पाल् भै ति कुबेर रह्या शिवजिले तिन्मा दया खुप् गर्‍या ।
शम्भूको करुणा हुँदा त अरु झन् आनन्दसागर् पर्‍या ॥ ४६ ।

रावण् राक्षस सब् लियेर खुसि भै लङ्का सहर्मा बस्यो ।
तपको जोर् बलवान् जित्यो सब जगत् सन्ताप् सबैमा पस्यो॥
विद्युज्जिह्व[4] ठुलो निशाचर थियो तेसलाइ बैन्ही दियो ।
ती मन्दोदरिलाइ आइ मयले दीयो र तेस्ले लियो ॥ ४७ ।

---

१ सोमनाथ—हुन ।
२ पेजन—निकास्तो ।
३ पेजन—त ।
४ सबै रामायणमा विद्युज्जिह्व भन्ने पाठ छ तर राक्षसको नाउँ विद्युज्जिह्व हो । अध्यात्म-रामायण—भगिनीं कालखञ्जाय ददौ विरूप-रूपिणीम् । विद्युज्जिह्वाय नाम्नाथ महामायी निशाचर ॥

ती मन्दोदरिलाइ दीकन दियो शक्ती अमोघ् खुस् भई ।
बीहा भो पछि कुम्भकर्ण विरको प्रल्हादकुल्मा गई ॥
शैलुप् नाम हुन्या बहूत बलवान् गन्धर्वराज् कै थिया ।
तिन्की छोरि थिइन् विभीषण बडा जानेर छोरी दिया ॥ ४८ ॥

जन्म्यो रावणलाइ पुत्र बलवान् जो जन्मदैका घरी ।
लाग्यो रून त शब्द भो अति ठुलो खुप् गर्जन्या मेघ्सरी ॥
मेघ् झैं शब्द गऱ्यो भनेर तहिं नाम् तेस्को रह्यो मेघनाद् ।
यस्को बल् यति सम्मको छ भनि यो लागेन तेस्को तसाँध्॥ ४९ ॥

निद्राले पनि कुम्भकर्ण कन खुप् पकड्यो सकस्मा पऱ्यो ।
हे नाथ्! सुतछु म ठाउँ पाउँ भनि यो हात् जोरि बिन्ती गऱ्यो ॥
तेस् बिच्मा तहिं[1] सुतलाइ बढिया गूफा तयारी गऱ्यो ।
ताहीं गै कन कुम्भकर्ण विरको खुप मस्त निद्रा पऱ्यो ॥ ५० ॥

ब्रह्माको सब देव दैत्यहरुको जो श्री थियो सब् हरी ।
लाग्यो रावण नाश् गराउन अनेक् रङ्का उपद्रव् गरी ॥
पाया थाह् कुबेरले र किन यो गर्छस् उपद्रव् न गर् ।
भन्ना खातिर दुत् पठाउनु भयो बोलाक् चतूरो जबर् ॥ ५१ ॥

---

१ भारतजीवन, नेपाल—तव ।

दुत् गै बिन्ति गऱ्यो त झन् बिखुसि भै ऊठ्यो ठुलो रिस् गरी।
जल्दी गै ति कुबेरको जिति लग्यो पुष्पक् विमानै हरी ॥
कूबेर्लाइ जिती यमै पनि जित्यो जीत्यो वरूणै पनी ।
पौंच्यो स्वर्ग विषे पनी खुसि हुँदै फेर् इन्द्र जितछु भनी ॥ ५२ ॥

एक् ठक्कर लडि इन्द्रले त सहजै पक्डेर पाता कस्या ।
हुर्मत् रावणको गयो खुसि भई सम्पूर्ण देव्ता[2] बस्या ॥
यो थाहा भइ मेघनाद रिसले आयो अगाडी सरी ।
जीत्यो इन्द्रजिलाइ तेस् बखतमा भारी लडाईं गरी ॥ ५३ ॥

रावण्लाइ फुकाइ इन्द्र कन ली फर्केर लङ्का गयो ।
जीत्यो इन्द्र र इन्द्रजित् भनि ठुलो नाम् ताहि देखी भयो ॥
ब्रह्मालाइ खबर् भयो र फुनका खातीर दौडी गया[3] ।
धेरै वर् दिइ मेघनाद् कन खुसी गर्दै फुकाउँदा भया[4] ॥ ५४ ॥

ब्रह्मा इन्द्रजिलाइ फोइ कन फेर् जानू भयो धाममा ।
लाग्यो रावण फेर् जगत् जिर्तुं भनी सङ्ग्रामका काममा ॥
कैलाश् पर्वत यो[5] ठुलो छ गहु्ँको होला कहाँ तक् भनी ।
कैलाश् हात महाँ लियेर सहजै एक् दिन् त तौल्यो पनी ॥ ५५ ॥

---

१ होमनाथ—र ।
२ भारतजीवन—देव् गण् ।
३ होमनाथ—ब्रह्मालाइ खबर् भयो र उ बखत लङ्कापुरीमा गई ।
४ नेपाल—फुकाई दिया, होमनाथ—र देलाई फुकाइ नसक्नु भयो तेसलाइ वर्दान् दिई ।
५ नेपाल—पो ।

नन्दीश्वर् कन रिस् उठ्यो र रिसले दीया सरापै पनी ।
मानिस् वानर शत्रु भै कन सहज् मारुन् तॅलाई भनी ॥
ताहाँ देखि त कार्तवीर्य सित गो सङ्ग्राम खातिर् जसै ।
पुग्थ्यो तिन् सितजोर् कहाँ सहजमा पाता कस्या पो तसै ॥ ५६ ॥

मेरो नाति भनी पुलस्त्य ऋषिले आयेर विन्ती गरी ।
बन्धन् देखि फुकाइ बक्सनु हुँदा लाज् भै फिऱ्यो तेस् घरी ॥
फेरी रावण वालि जित्तछु भनि गो साथ्मा अनेक् विर् गया ।
वालीले पनि पक्रि तेस् कन तहाँ खुप कारिख चेता भया ॥ ५७ ॥

काखीमा मिचि चार् समुद्र[1] घुमि फेर् छोडी दियाथ्या जसै ।
मैत्री गर्छु भनी मित्यारि गरि खुप् लाज् मानि फर्क्यो तसै ॥
ई बाहेक् अरु विर् सबै वश गऱ्यो तिन् लोक् विषे छन् जती ।
यस्ता विर्हरु मारि बक्सनु भयो विन्ती गरूँ यो कती ॥ ५८ ॥

नारायण् हुनुहुन्छ विष्णु भगवान् सब् यो चराचर् पनी ।
जो देखिन्छ कहिन्छ शास्त्रहरुले नारायणै हो भनी ॥
स्वामित्का अघि नाभिमा कमल भो ब्रह्माजि ताहीं भया ।
वाणीले सँग अग्नि ता हजुरका मुख् देखि निक्ली गया ॥ ५९ ॥

---

१ सोमनाथ—कालि च्यापि समुद्रत्वर ।

बाहू देखि त लोकपाल् हुन गया ई चन्द्र सूर्यै पनी ।
आँखा देखि भया दिशाहरु भन्या कान् देखि शब्दै भनी ॥
सबको प्राण तयार भयो हजुरका प्राण् देखि मुख्यै भई ।
नासा देखि त वैद्य अश्विनिकुमार् वेदाङ्गमा पार् गई ॥ ६० ॥

जङ्घा जानु उरू जघन् यति शरिर् देखी भुवर्लोकहरू ।
कोखा देखि त चार् समुद्र हुन गो वर्णन् कहाँ तक् गरू ॥
निस्क्या स्तन् दुइ देखि इन्द्र र वरुण् दूवै दिशाका पती ।
रेतै देखि त बालखिल्यहरु सब् निस्क्या तपस्वी अती ॥ ६१ ॥

धर्माधर्म विवेकका इ यमराज् ती लिङ्ग देखी भया ।
मृत्यू ता गुद देखि रुद्र त हजुर्का रीस देखी भया ॥
हाड् देखी जति पर्वतादिहरु छन् केश् देखि सब् मेघ् पनी ।
जो छन् औषधि रोम देखि ति भया नख् देखि सब् [1]खर् पनी[2] ॥ ६२ ॥

विश्वात्मा हुनुहुन्छ नाथ् ! पुरुष रुप् माया त शक्ती लिन्या ।
खूसी भै कन देवता कन सदा अम्रित् पियाई दिन्या ॥
स्वामित् कै त छ सृष्टि सब् जति छ यो संसार् चराचर् धरी ।
बाँच्याको पनि देखिइन्छ भगवन् ! आधार् हजुर् कै गरी ॥ ६३ ॥

---

१ नेपाल—ता ।

२ होमनाथ—अनी ।

जसतै दूद विषे रहन्छ भरिपुर् घीऊ उही रित् गरी।
सब् चिज्मा हजुरै पसी रहनु भो सर्वान्तरात्मा हरी॥
हुन्छन् सूर्य्यहरू[1] प्रकाश् हजुर कै[2] तेज्ले हजुर् सब् धनी॥
ख्यामित्लाइ त नाथ्! प्रकाश् गरि दिन्या छैनन् अरू[3] कै पनी॥६४॥

ज्ञानी जन्हरु देख्तछन् सकल रुप् अज्ञानि अन्धा सरी।
देख्तैनन् प्रभुलाइ मूढ हुन गै घुम्छन् विपत्मा परी॥
योगी भै कन वेदशीर्षहरुले खोज्छन् त देख्छन् पनी।
यसता रित् सित यो चराचर विषे श्रीराम् रह्याछन् भनी॥६५॥

वक्बात् गर्न्यॉ प्रभु! हजुर् सित रिस् न मानी।
रक्षा हवस् प्रभु! अनुग्रहपात्र जानी॥
चिन्मात्र अद्वितिय नित्य हजूरलाई।
भजछु निरन्तर टहल् गरि हर्ष पाई॥६६॥

ाली सुग्रिव इन्द्रसूर्य्यसुतै हुन् भन्न्या सुन्याको त छ।
कसता रित् सित जन्म भो इ दुइको विस्तार् समेत् खोज्दछु॥
वेस्तार सुन्न म पाउँ सब् भनि हुकुम् रामको भयेथ्यो जसै।
विस्तार् खुसि भई अगस्ति ऋषिले बिन्ती गर्न्या सब् तसै॥६७॥

१ 'सूर्य्यहरु'को अर्थ सूर्य्य इत्यादि हो। सं०
२ नेपाल, होमनाथ—को।
३ भारतजीवन—अवर्।
४ भारतजीवन, नेपाल—रत।

ब्रह्मा चार् सय कोसको गरि सभा सूमेरु माथी थिया ।
ईश्वर्लाइ रिझाउना कन तहाँ खुप् योगमा मन् दिया ॥
योग्मा चित्त बढ्यो र भक्ति रसले आँसू खसाया जसै ।
आँसूको तहिं वीर वानर बन्यो आश्चर्य मान्या तसै ॥ ६८ ॥

ब्रह्माका मनमा दया पनि उठ्यो बोल्या वचन्ले पनी ।
मेरा नित्य नजीकमा रह यहाँ कल्याण होला भनी ॥
ब्रह्माका इ वचन् सुनेर खुसि भै वाहीं नजिक्मा रह्यो ।
फल् फुल् खायर तेहि पर्वत विषे त्यो नित्य डुल्दो भयो ॥ ६९ ॥

लाग्यो पानि पियास् र कूप नजिकै देख्यो र पोंच्यो तहाँ ।
आफ्ना छाइ विषे नजर् परि गयो त्यो कूप हेर्दा महाँ ॥
आर्कै विर् सरि मानि तेहिं कुपमा कूदी पसेथ्यो जसै ।
आर्को कोइ न देखि फेरि झटपट् उफ्रेर निस्क्यो तसै ॥ ७० ॥

निस्क्यो बाहिर कूप देखि त असल् स्त्रीको स्वरुप् पो बनी ।
लाग्यो खेद् मनमा कसो गरि भयाँ स्त्रीको स्वरुप्को भनी ॥
देख्या इन्द्रजिले र तेहि बिचमा तिन्मा बहुत् मन् भयो ।
पक्र्या इन्द्रजिले र वीर्य त गिरी सब् वाल देश्मा गयो ॥ ७१ ॥

---

१ नेपाल—देश ।  २ भरजोबन—उमेर ।

तेही वीर्य त एक् कुमार् हुन गयो वाल्मा गिऱ्याको पनी ।
वाले देखि भयो भनी कन रह्यो नाम् वालि विर् भो भनी ॥
माला काञ्चनिपुत्र जानि बढिया एक् इन्द्रजीले दिया ।
बावूको[1] करुणा बुझेर खुसि भै त्यो वालि विर्ले लिया ॥ ७२ ॥

तेस् विचमा तहिं सूर्य्य आयर नजर् लाया तसै स्त्री महाँ ।
सूर्य्यैका पनि वीर्य्यपात् हुन गयो ग्रीवा विषे पो तहाँ ॥
तेही विज् पनि बेस् कुमार् जब बन्यो ग्रीवा विषे एक् जसै ।
ग्रीवा देखि भयो भनेर तिनको सुग्रीव नाम् भो तसै ॥ ७३ ॥

सूर्य्यैले पनि पुत्रलाइ बलवान् साहाय दिन्छु भनी ।
विर् मध्ये बलवान् थिया र हनुमान्‌ज्यूलाइ दीया पनी ॥
सुग्रिव्का सँगमा रह्या ति हनुमान् श्रीसूर्य्य धाम्मा गया ।
वाली सुग्रिव दूइ पुत्र सहजै ती वानरीका भया ॥ ७४ ॥

वाली सुग्रिव दूइ पुत्र सँगमा ली सुत्न खातिर् गइन् ।
प्रातःकाल विषे त फेरि अघि झैं ती स्त्री पुरुषै भइन् ॥
स्त्रीरुप् भै कन वालि सुग्रिव दुवै जन्म्या इ पूरुष् भया ।
ब्रह्मालाइ गरूँ प्रणाम् भनि दुवै छोरा सँगै ली गया ॥ ७५ ॥

---

१ भरतजीवन—बावूका ।

सून्या प्रश्न सनत्कुमार ऋषिले यस्ता डवल्को जसै ।
जान्या रावणको र आशय उसै माफिक् बताया तसै ॥
सून्यौ रावण ! एक् हरी सरि ठुलो मिल्दैन आर्को कबै ।
चौताका सब दानवादिहरुका आधार् इनै हुन् सबै ॥ ८४ ॥

जस्ले नाभि कमल् विषे त भगवान् ब्रह्माजि पैदा गरी ।
ती द्वारा जगतै बनाउनु भयो ठूला तिनै हुन् हरी ॥
इन्द्रादीहरु जित्तछन् रिपु सबै आधार् हरी कै गरी ।
ध्यान्ले योगिहरू तिनै कन भजी जान्छन् सहज् पार् तरी ॥ ८५ ॥

रावण्ले इ वचन् सुन्यो र ऋषिका[1] बिन्ती गर्‍यो फेर् तहाँ ।
विष्णूले जति[2] मार्दछन् रण महाँ ती वस्त जान्छन् कहाँ ॥
दोस्रो प्रश्न सुन्या तहाँ ति ऋषिले यस्ता प्रकार्को जसै ।
उत्तर् फेरि दिया कृपा गरि तहाँ तेस्लाइ तिन्ले तसै ॥ ८६ ॥

चौताले जति मार्दछन् ति त अनेक् स्वर्गादिको भोग् गरी ।
कालान्तर् पछि जन्म हुन्छ तिनको पृथ्वीतलैमा झरी ॥
जस्लाई हरि मार्दछन् उ त तसै जान्छन्[3] तुरुन्तै अनी[4] ।
मुक्तै भै कन वस्छ जन्म तसको हूँदैन कैले पनी ॥ ८७ ॥

---

१ नेपाल—खुसि भै। अध्यात्मरामायण—महर्षेर्वचनं श्रुत्वा प्रत्युवाच दशाननः ।

२ भारतजीवन, नेपाल—यति ।

३ भारतजीवन—मार्छन् ।

४ पैजन—पनी ।

यस्ता सत्य वचन् सुनी मन बुझ्यो रावण् भयो खुस् पनी ।
सङ्ग्राम् श्रीहरि ध्यैं गरी तहिं मरी मुक्तै म हुन्छु भनी ॥
यस्तो सुर् मनमा जसै दृढ गर्‍यो जान्या ऋषीले पनी ।
खूसी भै ति सनत्कुमार ऋषिले आशीष दीया पनी ॥ ८८ ॥

हे रावण् ! सुन वत्स ! जो छ मनमा स्वाभीष्टसिद्धी सबै ।
तिम्रो लौ[1] परिपूर्ण हुन्छ मनमा शङ्का न मान्या कबै ॥
रुप् ज्सतो हरिको छ भन्छु अहिले यस्ता हरी छन् भनी ।
स्थावर् जङ्गम सूर्य्य चन्द्र पृथिवी शेष् दैत्य दानव् पनी ॥ ८९ ॥

ई रुप् हुन् हरिका अनेक् तरहका यो रुप् विराट् रूप हो ।
पीताम्बर् घनश्याम् त सूक्ष्म रुप हो देखनू कृपैले छ यो ॥
यो रुप् देखन मन्सुबा छ त हुनन् इक्ष्वाकु कुल्मा हरी ।
छोरा हुन् दशरथ्जिका भनि जगत् भन्नन्[2] ति राम् नाम् गरी॥९०॥

सीता लक्ष्मण साथमा लिइ पिताजीका हुकुम्ले गरी ।
जानन् दण्डक वन् महाँ भजि लिया चीन्ह्या तिनै हुन् हरी॥
यो विस्तार सनत्कुमार ऋषिका मुख् देखि जस्सै सुन्यो ।
चीन्ह्यो स्वामितलाइ तेस् बखतमा तेस्ले र यस्तो गुन्यो॥ ९१ ॥

---

१ दोमनाथ—स्यो ।
२ पेजन—भज्नन् ।

श्रीराम्चन्द्र सितै विरोध् गरि तिनैका हात देखी मरी ।
संसार्सागर पार् तरेर सहजै जान्छन् जहाँ छन् हरी ॥
यस्ता आशयले सिता कन हन्यो रावण् त हो बुद्धिमान् ।
लक्ष्मी हुन् इ सिता भनी कन चिन्हन्यो मान्थ्यो[1] कहाँ हो अजान् ॥ ९२ ॥

जो यो[2] कथा कन खुसी भइ पाठ गर्छन् ।
सुन्छन् कहीं कहिं सुनायर पाप हर्छन् ॥
खुप् आयु बढ्छ तिनको अति सौख्य हुन्छन् ।
धन्लाभ हुन्छ बहुतै तब[3] नित्य सुन्छन् ॥ ९३ ॥

एक् दिन् नारदजी डुली सकल लोक् आया नजिक्मा जसै ।
देख्यो रावणले र पाउ परि एक् बिन्ती गऱ्यो यो[4] तसै ॥
हे सर्वज्ञ मुने ! लडाकि बलिया विर् छन् कहाँ सो कही ।
पाऊ लाग्नु हवस् गऱ्यो विनति यो खुप् लड्न इच्छा भई ॥ ९४ ॥

रावण्का इ वचन् सुनेर मुनिले मन्ले विचार् खुप् गरी ।
भन्छन् को भनु छैन वीर अरु ता याहाँ तिमीले सरी ॥
तिम्रो मन्सुब पूर्ण गर्न सकन्या विर् श्वेतद्विप्मा गया ।
मिल्छन् जाउ तहीं न जाउ कहिं लौ खुप् लड्न मन्सुब् भया ॥ ९५ ॥

---

१ होमनाथ—हुन्थ्यो ।
२ भारतजीवन—जो । अध्यात्मरामायण—इमां कथां यः शृणुयात् पठेद् वा ।
३ "तब" का ठाउँमा "जब" भये राम्रो हुने थियो । सं०
४ होमनाथ—यो ।

जो विष्णुका पूजन नित्य गर्छन् ।
जो विष्णुका वाहुलि देखि मर्छन् ॥
तेसता महात्मा तहिं बस्न जान्छन् ।
त्रैलोक्यका विर् त ति तुच्छ मान्छन् ॥ ९६ ॥

नारद्का इ वचन् सुनी कन त झट् पुष्पक् विमान्मा चढी ।
श्वेतद्विप् पनि पुग्दछु भनि चल्यो रावण् त तेसै घडी ॥
श्वेतद्वीप नजिक् पुग्या पछि विमान् पुष्पक् न चल्न्या भयो ।
ओर्ल्यो पुष्पक देखि हिकमति थियो पैदल् दुगुर्दै गयो ॥ ९७ ॥

श्वेतद्वीप पुगी प्रवेश् गरुँ भनी मनसुब् गरेथ्यो जसै ।
धाया सुन्दरि नारि घेरि चहुँ ओर् आश्चर्य मान्यो तसै ॥
आर्कीले पनि देखि पक्रि कन सब् वृत्तान्त सोधी भई ।
आर्कीले अझ आर्किले धरि लिंदा चेत्यो वहाँ पो गई ॥ ९८ ॥

उम्क्यो स्त्रीहरु देखि बछ्र र बहुत् आश्चर्य मान्यो पनी ।
मर्छु मै पनि विष्णु देखि र यहीं आयेर बसछु भनी ॥
जल्दी मर्न निमित्त खुप् छल गरी सीताजिलाई हऱ्यो ।
लङ्कामा लगि मातृवत् जननिको सेवा पनी खुप् गऱ्यो ॥ ९९ ॥

---

१ भारतजीवन—घेर ।

राम् नाम्ले परमेश्वरै हुनु भयो मालुम् छ सब्को गती ।
क्या विन्ती गरुँ थेर हजुर् त सबका साक्षी जगत्का पती ॥
मेरो येहि चरित्र गायग रहोस् यो लोक संसार् भनी ।
गर्नू हुन्छ यहाँ अनेक् तरहका ससारि लीला पनी ॥१००॥

येही रित् सित रामको स्तुति गरी खुस् भै अगस्ती गया ।
ससारी सरि भै अनेक् विषय भोग् श्रीराम गर्दा भया ॥
फर्क्यो पुष्प विमान् कुबेर् सित गई राम् कै हजुर्मा गयो ।
फर्क्यो नाथ् ! म कुबेरका हुकुमले यो विन्ति गर्दो भयो ॥१०१॥

पैल्हे रावणले जिती कन लियो सेवा उसैको गरिस् ।
ऐल्हे श्रीरघुनाथले जिति लिंदा उन्का अधिन्मा परिस् ॥
खुप् यो योग्य भयो अझै पनि तँ जा सेवा प्रभू कै गरी ।
आऊनू तइँले यहाँ जब त राम् वैकुण्ठ जान्छन् हरी ॥१०२॥

हुकुम् येति कुबेरले पनि गर्या स्वामित् ! पुग्याथ्याँ जसै ।
मञ्जुर् सोहि हुकुम् गरी कन फिर्याँ खुस् भै हजुर्मा तसै ॥
पुष्पक्को विनती सुनेर रघुनाथ्जीको हुकुम् भो पनी ।
ऐल्हे जा तँ म सम्झुलाँ त उ वखत् चाँडो तँ आयास् भनी ॥१०३॥

---

१ भारतजीवन, नेपाल—यहाँ ।

पुष्पक्लाइ बिदा दिया र रघुनाथ्ले राज्यको भोग् गऱ्या ।
जस्का राज्य महाँ बुढा पछि रही बाला न कैल्है मऱ्या ॥
यस्तो राज् प्रभुले गऱ्या सकलका आनन्द मै काल् गयो ।
श्रीराम्का तहिं राज्यमा पनि ठुलो आश्चर्य एक् दिन् भयो ॥१०४॥

ब्राह्मण्को लडिका मरेउ र पिता रुँदा रह्याछन् कहीं ।
देख्या श्रीरघुनाथले तब विचार् राख्या प्रभूले तहीं ॥
क्याले यो विधि भो भनी कन विचार् गर्दा भयो याद् जसै ।
तप् गर्थ्यो तहिं शूद्र जङ्गल विषे उस्लाइ माऱ्या तसै ॥१०५॥

तप् गर्दो जब शूद्र मारि दिनु भो उठ्यो लडीको पनी ।
ब्राह्मण् खूसि भया गयो परमधाम् त्यो शूद्र चाहीं[¹] पनी ॥
यस्तै रित् सित पालना गरि लिंदा दुःखी भयेनन् कहीं ।
कोटी लिङ्ग पनी स्थल स्थलै[²] विषे थाप्या प्रभूले तहीं ॥१०६॥

संसार्को सुख भोग् गराउनु भयो सीताजिलाई[³] पनी ।
येहि गायर लोक् तरुन् भनि भन्या स्थापन् कथाको पनी ॥
सीता मात्र थिइन्[⁴] प्रिया प्रभुजिकी राजर्षिको चाल् धरी ।
शिक्षा खातिर गादिमा बसि अनेक् राज्का[⁵] अनेक् काम् गरी॥१०७॥

---

१ होमनाथ—ति खुप् ।
२ भारतजीवन, होमनाथ—चाहीं ।
३ नेपाल, होमनाथ—स्थलास्थल ।
४ भारतजीवन—भइन् ।
५ भारतजीवन—रसका, होमनाथ—रङ्का ।

दस् हज्जार् जब वर्ष राज् गरि बित्या काल् [1] ता यसै बिच् महाँ ।
सीताले रघुनाथका चरणमा विन्ती गरिन् एक् तहाँ ॥
स्वामिन् ! नित्य हजूरका चरणकी दासी म हूँ ता पनी ।
पर्छन् आयर पाउमा म सित खुप् ब्रह्मादि यौता पनी ॥१०८॥

गर्छन् विन्ति हजुर् अघी गइ दिया आफैं प्रभू राम् पनी ।
पाऊ लाग्नु हुन्याछ युक्ति यहि हो वैकुण्ठ जान्या भनी ॥
भन्छन् विन्ति गऱ्याँ हजुर् सित सबै ब्रह्मादिको मत् पनी ।
जस्तो गर्न उचीत हो उहि हवस् स्वामित् ! जनायाँ भनी ॥१०९॥

सीताले विनती गरिन् र रघुनाथ्ज्यूको हुकुम् भो तहाँ ।
बेस् भन्छन् अब गर्नु पर्दछ यसो वैकुण्ठ जाँदा महाँ ॥
लोक्को एक् अपवाद् लगायर तिमीलाई वडा वन् महाँ ।
लैगी त्याग् पनि गर्छु जानु तिमिले वाल्मीकिआश्रम् जहाँ ॥११०॥

ऐल्हे गर्भ छ जन्मनन् दुइ कुमार् विर् विर् तिमीले पनी ।
लोक्को यो अपवाद् मेट्छु अब ता पस्छ्र म नीया भनी ॥
याहीं आयर लोकका विच महाँ न्यायै पसौली जसै ।
फाट्निन् धर्ति र ताहिं बाट तिमिले वैकुण्ठ जानू तसै ॥१११॥

---

१ भारतजीवन, नेपाल—क्रम ।

यस् रित्ले तिमि जाउली जब[1] अघी क्यै काल् बसी मै पनी ।
आउँला किन वस्तछु कहि सक्याँ यै सुर् छे[2] मेरो भनी ॥
जानाको यहि सूर निश्चय गरी श्रीराम् सभामा गया ।
हाम्रा यश् अपयश् कसो छ दुनियामा येहि सोद्धा भया ॥११२॥

सबले बिन्ति पनी गऱ्या हजुरमा बोल्छन् यशैयश् भनी ।
एकाले[3] पछि क्यां[4] भन्यो कि महाराज ! एक् सुन्छु अप्यश् भनी॥
रावण्ले वनमा हरी घर लगी कैय दिन् त राख्यो पनी ।
यस्ती हुन् इ सिता उनै कन घरै ल्याया छ चोखी भनी ॥११३॥

यस्ती स्त्री पनि चोखि हो भनि यहाँ राजै त राख्छन् भन्या ।
चोखी कुन् रहली यहाँ[5] अब उपर् सम्पूर्ण वेश्यै बन्या ॥
भन्छन् अप्यश येहि मात्र भनि यो बिन्ती गरेथ्यो जसै ।
लक्ष्मण्जी कन डाकि ल्याउन हुकुम् दीया प्रभूले तसै ॥११४॥

हुकुम्ले रघुनाथका हजुरमा लक्ष्मण् पुग्याथ्या जसै ।
सुन्नेलाई[6] कठिन् हुन्या अति कठोर् हुकुम् भयो पो तसै ॥
हे भाई ! इ सिताजिलाइ अहिले त्याग् गर्नु मैले पऱ्यो ।
चोखी जानि लिदा त दुर्यश बहुत् लोकले मलाई गऱ्यो ॥११५॥

---

१ भारतजीवन, होमनाथ—अब ।
२ बम्बई—यै सुर ।
३ होमनाथ—यौगले ।
४ नेपाल—यो ।
५ भारतजीवन—जहाँ ।
६ होमनाथ—सुन्नेकार ।

सीतालाइ चढाइ जल्दि रथमा वाल्मीकिआश्रम् जहाँ ।
जो ताहीं नजिकै गयेर वनमा छाडेर आऊ यहाँ ॥
उत्तर् केहि गर्‍यौ भन्या त तिमिले मार्‍यौ म ऐल्हे मर्‍याँ ।
भाई ! भोलि बिहान लानु वनमा हूकुम् त यै हो गर्‍याँ ॥११६॥

लक्ष्मण्ले जब यो हुकुम् कन सुन्या ठूला सकस्मा परी ।
प्रातःकाल महा उठ्या र चढिया एक् रथ् तयारी गरी ॥
सीतालाइ चढाइ लैगि वनमा छोडेर आया पनी ।
लागिन् गर्न विलाप् सिताजि वनमा छोड्या मलाई भनी ॥११७॥

सुन्थिन् वाल्मिकिशिष्यले सुनि कह्या वाल्मीकिजी थ्यैं गई ।
सून्या वाल्मिकिले र पूजन गर्‍या सीताजिको याद् भई ॥
ल्याया आश्रममा र लोकजननी सीता इनै हुन् भनी ।
स्त्रीजन्लाइ लगाइ खुप् सित गर्‍या सेवा सिताको पनी ॥११८॥

ती विप्रपत्निहरुले पनि लक्ष्मि जानी ।
पूजा सिता कन गर्‍या अति भाग्य मानी ॥
सीतापती पनि विरक्त भयेर सुख् भोग् ।
छोडी मुनी सरि भया मनले लिया योग् ॥११९॥

लीला मेरि भनी सुनी कन तरुन् ई लोक संसार् भनी ।
लोकैका हितका निमित्त भगवान् मानिस् स्वरुप्का बनी ॥
लीला गर्नु भयो र वृद्धहरुले जो गर्दथ्या सो गरी ।
सत्कामै गरि दिन् विताउनु भयो बाधा सबैका हरी ॥१२०॥

साथ्मा लक्ष्मणजी थिया प्रभुजि थ्यैं कुन् हो ठुलो विष् भनी।
सोध्या लक्ष्मणले र सब् कहनु भो विस्तार् प्रभूले पनी ॥
ब्रह्मस्वै विष हो भनी नृगजिको विस्तार् सुन्याथ्या जसै ।
घूम्यो चित्त र फेरि लक्ष्मणजिले क्यै सोध्न लाग्या तसै ॥१२१॥

हे नाथ् ! ज्ञान स्वरूप देहहरुका आत्मा अधिन् भै पनी ।
भूभार् हर्नु भयो अनेक् तरहका यस् आकृतीका बनी ॥
लीला हो' इ त आत्मरूप भगवान् भक्तै फगत् जान्दछन् ।
यो लीला त दया निमित्त हुन गो यस्तो पनी मान्दछन् ॥१२२॥

यस्ता मालिक जानि पाउ तलमा स्वामित् ! पर्‍याको म छु।
संसार् रूपि गभिर् समुद्र सहजै कुन् पाठले तर्दछु ॥
सोही युक्ति बताइ बक्सनु हवस् जुन् पाठले यो तरी ।
पुग्न्याछू पछि धाममा सहजमा आनन्दको भोग् गरी ॥१२३॥

लक्ष्मणका इ वचन् सुनेर रघुनाथ् मूखै हँसीलो गरी ।
आफ्ना भक्त ति भाइ लक्ष्मणजिका सम्पूर्ण सन्ताप् हरी ॥
तत्त्वं[2] ज्ञान पनी तहीं दिनु भयो जुन्‌लाइ वेद्‌ले पनी ।
भन्छन् लोकहरुलाइ तर्न सजिलो साँघू छ येही भनी ॥१२४॥

---

१ "हुन्" भये पाठ राम्रो हुने थियो। सं०

२ होमनाथ—तत्वे।

ई वर्णाश्रमका क्रिया जति त छन् तिन्लाइ पैल्हे गरी ।
दस् इन्द्रीय र मन् जितेर गुरुका साम्ने अगाडी परी[1] ॥
आत्मज्ञान मिलोस् भनेर गुरुको सेवा निरन्तर् गऱ्या ।
आत्मज्ञान् पनि मिल्छ येहि रितले संसार् कतीले तऱ्या ॥१२५॥

फल् इच्छा गरि कर्म गर्छ यदि ता फेर् देह यस्तै लिई ।
त्यो फल् भोग् पनि गर्छ गर्छ अरु फेर् कर्मै वहुत् मन् दिई ॥
तेस्को फेर् पनि बन्छ देह करले येसै जगत्मा परी ।
यस्तै रित् सित घुम्छ त्यो भुवनमा अत्यन्त चक्रै सरी ॥१२६॥

अज्ञानै छ घुमाउन्या सकलको शत्रू सरीको यहाँ ।
ज्ञानैले गरि नष्ट हुन्छ पनि सो लीनू यही मन् महाँ ॥
अज्ञान्को र इ कर्मको छ कति फेर् तस्मात् क्रियाले गरी ।
अज्ञान् नष्ट हुँदैन छैन अरु थोक् ऊपाय यै ज्ञान् सरी ॥१२७॥

अज्ञान् नष्ट हवस् न राग् न त छुटोस् अज्ञानका कर्मले ।
कर्मै गर्छ त घुम्छ यै जगतमा त्यै कर्मका धर्मले ॥
तस्मात् ज्ञान विचार गर्नु जनले ज्ञान्ले कती पार् भया ।
ज्ञान् छाडी कन कर्मले जनहरू संसार पार् को गया ॥१२८॥

---

१ रामनाथ—मरी ।

विद्यालाइ सहाय कर्म छ ठुलो भन्छन् इ वेद्ले पनी ।
तस्मात् कर्म अवश्य गर्नु जनले साहाय होला भनी ॥
कै येसो पनि भन्दछन् त ति भनुन् साहाय कोही रती ।
विद्यालाइ त चाहिँदैन बुझ यो विस्तार् बताऊँ कती ॥१२९॥

हुन्छन् कर्म त देह देहहरुमा पूरा अभीमान् भई ।
विद्या हुन्छ त जो छ तेहि अभिमान् देहादिमाको गई ॥
विद्याको र इ कर्मको त छ विरोध् साहाय हुन्थ्यो[१] कहाँ ।
विद्यै एक् छ समर्थ मुक्ति दिनमा यै जान्नु[२] सब्ले यहाँ ॥१३०॥

बाजीका श्रुति तैत्तिरीय कहिन्या श्रुतीहरूले पनी ।
भन्छन् येहि कुरा सहाय अरुको खोज्दैन विद्या भनी ॥
तस्मात् कर्म विरोधि जानि जनले सब् कर्म छाडी दिनू ।
विद्यै मात्र ठुलो बुझेर यसमा यो मन् लगाई लिनू ॥१३१॥

जो यो तत्त्वमसी छ वाक्य यसको वाक्यार्थ जानी लिनू ।
यस्मा तिन् पद छन् ति तीन पदका तात्पर्यमा मन् दिनू ॥
तत्का अर्थ परात्म हुन् ति पदमा त्व भन्नु जीवात्म हो ।
इन्को ऐक्य बुझाउन्या असि छ पद् रात् दिन् विचार् गर्नु यो १३२

---

१ बनई—गेहहरुमा ।
२ 'हु ये भये पाठ शुद्ध हुने थियो । स०
३ हामनाथ—जान ।

मायाले त बन्यो शरीर सब यो आखिर् छ मन्यो पनी ।
देख्नू पञ्च महाभुतै छ सबमा यस्ता प्रकार्को बनी[1] ॥
संसार्को[2] सुख दुःख साधन स्वरुप् देखिन्छ जो देह यो ।
स्थूलोपाधि भनी कहिन्छ सबले यो नाम् यसैको त हो ॥१३३॥

दस् इन्द्रीय र मन् अपञ्चिकृत भुत् यो सोह्र जम्मा छ जो ।
स्थूलोपाधि भनी कहिन्छ सबको मुल् भोग साधन् छ यो ॥
येसै स्थूल उपाधि भिन्न छ सदा इन्को वियोग् भो जसै ।
स्थूलोपाधि गलेर जान्छ सबको टिक्तैन एक् क्षण् कसै ॥१३४॥

जीव् ता मुक्त छ शुद्ध निर्मल फटिक् जस्तो उपाधी गरी ।
सो निर्मल् पनि हुन्छ सङ्गगुणले उस्तै उपाधी सरी ॥
ईनै दुइ उपाधि देखि बुझि खुप् होला फरक् जिव् जसै ।
तस्तै मुक्त हुन्या छ छैन नहिं ता आर्को उपाये कसै ॥१३५॥

राताका सँगमा रह्या स्फटिक ठिक् देखिन्छ रातै सरी ।
तस्तै आत्म पनी उपाधि सँग भै हुन्छन् उपाधी सरी ॥
आत्मामा छ उपाधि केहि न फटिक्मा क्यै छ रातो कतै ।
झुट्टै मात्र छ त्यो झलक् यहि विचार् खुप् राख्नु जत्ता ततै ॥१३६॥

---

१ [illegible]

२ [illegible]

जाग्रत् स्वप्न सुषुप्ति वृत्ति तिन छन् यस् बुद्धिका ई पनी ।
झुट्टै देखि लिइन्छ नित्य सुखरुप् यस् ब्रह्मरुप्मा भनी ॥
जानी वृत्तिनिरोध् गरेर जनले यो आत्म जानी लिनू ।
आत्मा भीत्र उपाधिलाइ त झुटा जानेर छाडी दिनू ॥१३७॥

आत्मा हो सुख रूप दुःख रुपको संसार् छ उस्मा कहाँ ।
अज्ञान्ले गरि मात्र सत्य रुपले झल्कन्छ आत्मा महाँ ॥
ज्ञान्ले लिन् पनि हुन्छ डोरि कन साँप् बुझ्नू छ जस्तो[1] फगत् ।
तस्तै ईश्वरमा अनेक् तरहको देखिन्छ यस्तो जगत् ॥१३८॥

अध्यास् हुन्छ चिदात्ममा इ सबको जो छन् अहङ्कारका ।
इच्छादी पनि बुद्धि धर्म बुझनू छैनन् कुनै सारका ॥
आत्मा साक्षि छ यो पृथक् इ सबमा सब्मा घुस्याको पनी ।
जस्तै घुस्तछ अग्नि लोहहरुमा[2] तस्तै प्रकार्को बनी ॥१३९॥

यै आत्मा कन चिह्न पर्छ गुरुका वेद्का वचन्ले गरी ।
आत्मालाइ चिह्नयो भन्या बुझि लिनू त्यो मुक्त भो तेस् घरी ॥
तस्मात् आत्मविचार गर्नु जनले यस् रूपका हुन्[3] भनी ।
अज्ञान् नष्ट गराउना कन अवर् छैनन् उपाई पनी ॥१४०॥

---

१ पर्वई—यसता ।
२ सोमनाथ—लोहहरुमा ।
३ बर्वई—रूपको हूँ ।

आत्मा यस् रितले चिह्निन्छ पहिले एकान्तमा गै वसोस् ।
दस् इन्द्रीय जितेर मन् पनि जिती आत्मैविचार्मा परोस् ॥
जानोस् जो छ जगत्प्रकाश् सकल यो[1] हो आत्मसत्ता भनी ।
येही तत्त्व बुझी त पूर्ण रुपको होइन्छ आफू पनी ॥१४१॥

ओङ्कार् वाचक हो सबै जगतको अज्ञान् अवस्था महाँ ।
ज्ञानोत्तर् हुन सक्छ वाचक कहाँ लिन् हुन्छ आत्मै महाँ ॥
आत्ममा जब लिन् भया अ उ म तिन् विश्वादि साक्षीसहित् ।
आत्मै मात्र रहन्छ तेस् बखतमा निर्मल् उपाधीरहित् ॥१४२॥

सोही आत्म म हूँ भनी दृढ भयो ज्ञान्का विचार्ले जसै ।
जीवन्मुक्त भनी कहिन्छ जन त्यो पर्दैन तापमा कसै ॥
सब् इन्द्रीयशमन्[2] गरेर वलवान् कामादिको नाश् गरी ।
अभ्यास् गर्नु समाधिमा त सहजै देखिन्छु[3] साम्ने हरी[4] ॥१४३॥

येही पूर्ण अनन्त आत्मरुपको ध्यान् नित्य गर्दै रहोस् ।
जो प्रारब्ध छ सो वुझेर वलियो ई दुःख सुख् सब् सहोस् ॥
येही रित् सित दिन् विताउँछ भन्या यो देह छुट्ला जसै ।
संसार्का सब दुःख छाडि कन त्यो लिन् हुन्छ मैमा तसै ॥१४४॥

---

१ सोमनाथ—ले ।
२ नेपाल—समान् ।
३ सोमनाथ—देखिन्छ ।
४ नेपाल—देखिन्छ साम्ने हरी ।

आदीमा न त अन्त्यमा न बिचमा यो देहधारी बनी[1] ।
पूर्णानन्द हुँदैन जान्नु सबले यो सत्य बात् हो भनी ॥
तस्मात् यो विधि छोडि गर्नु जनले आत्मैविचार् खुप् गरी ।
त्यो मैमा मिलि जान्छ जल् जलधिमा पोंचेर मील्या सरी ॥१४५॥

आत्मै मात्र छ सत्य यो सब जगत् झूटै छ झूटो पनी ।
डोरी सर्प बुझ्या सरी बिबुझमा देखिन्छ साँचो भनी ॥
जान्नू जानिइयेन यो भनि भन्या मेरा चरणमा परी ।
सेवा गर्नु र जान्दछन् नतर ता टर्दैन कस्तै गरी ॥१४६॥

वेद्को सार रहस्य यो सब कह्यॉ जो यो विचार् गर्दछन् ।
कोटी जन्म सहस्रका सकल पाप् तिनका सहज् टर्दछन् ॥
तस्मात् भाइ ! विचार यो सब जगत् झूटो चटक् झैं भनी ।
मैमा भक्ति सदा लगायर रहू आनन्द रूपी बनी[2] ॥१४७॥

मेरो येहि सगुण् स्वरुप् कन खुसी मानी भजन् वा गरुन् ।
वा निर्गुण् परिपूर्ण आत्म रुपमा लैगेर[3] यो मन् धरुन् ॥
ती दूवै मइ तुल्य हुन् ति मइ हुन् ती मै सरीका बनी ।
गर्छन् सब् भुवनै पवित्र तिनले कुल्ची दिदामा पनी ॥१४८॥

---

१ वर्द—न ।
२ सोमनाथ—पनी ।
३ पेजन—लगेर ।

श्रद्धा भक्ति रहोस् गुरूचरणमा मेरा वचन्मा पनी ।
यस्लाई श्रुतिसार् बुझी कन पढोस् मुल् तत्वयै हो भनी ॥
यस्तारित् सित यो पढ्यो पनि भन्या अज्ञानको नाश् गरी ।
मेरै[1] रुप् बनि जान्छ जान्छ सहजै संसारसागर् तरी ॥१४९॥

एक् दिन् श्रीयमुनाजिका तिर महाँ वस्न्या मुनीश्वर्हरू ।
भार्गव्मा[2] च्यवनै थिया इ सँगमा बस्न्या थिया जो अरू ॥
आया श्रीरघुनाथका हजुरमा आपत्ति छुट्नन् भनी ।
आदर् खुप् रघुनाथ बाट रहँदा खुस् भो ऋषीगण् पनी ॥१५०॥

सेवक् ब्राह्मणको म हूँ अति कृपा गर्नू भयो धन्य हो ।
सेवक्लाइ अहाइ बक्सनु हवस् कुन् काम् छ इच्छा छ जो ॥
सेवक् हूँ सब सिद्ध गर्छु भनि यो राम्को हुकुम् भो जसै ।
आपत् बिन्ति गऱ्या तहाँ च्यवनले राम्का हजुर्मा तसै ॥१५१॥

हे नाथ् ! क्वै मधु नाम दैत्य शिवका प्यारा महात्मा थिया ।
तिन्लाई शिवले त्रिशुल् पनि अमोघ् खुसी हुँदामा दिया ॥
रावण्की वहिनी यि कुम्भिनसि एक्[3] बीहा गऱ्याको थियो ।
जन्म्यो पुत्र त लोककण्टक सबै चाल् राक्षसैको लियो ॥१५२॥

---

१ होमनाथ—यमर्तुं ।
२ बबई—भार्गव केर् ।
३ भारतजीवन—थिर कुंभिनसी । नेपाल—थि कुम्भनखि थ्यो । रावणको बहिनीको नाम कुम्भीनसी हो । अध्यात्मरामायण—रावणस्यानुजा मार्या तस्य कुम्भीनसी शुता ।

तेस्को नाम लवण् छ राक्षसि छ चाल् तेस्ले त्रिशुल् त्यै लिई ।
आपद् सब् ऋषिलाइ गर्छ रघुनाथ् ! बाधा अनेकन्[1] दिई ॥
यो आपत्ति छुटोस् भनी हजुरमा आयौं भन्याथ्या जसै ।
तेस्को ताप न मान्नु[2] मार्छु अहिले यस्तो हुकुम् भो तसै ॥१५३॥

यै बिच्मा सब भाइलाइ रघुनाथ्ले सोध्नु भो को गई ।
मार्छौं कण्टक तेस् लवण् कन ऋषीका प्राणदाता भई ॥
हात् जोरी विनती गऱ्या भरतले स्वामित् ! म जान्छू भनी ।
ताहीं फेर् विनती गऱ्या अति उचित् शत्रुघ्नजीले पनी ॥१५४॥

लक्ष्मण्ले पनि काम्[3] गऱ्या अघि बडा साथै हजुर्मा गई ।
दुःखै भोग भरत्जिले पनि गऱ्या योगी सरीका भई ॥
स्वामित् ! आज हुकुम् भया त खुसि भै जान्छू म ऐल्हे तहाँ ।
राम् ठाकुर् बहुतै खुसी हुनु भयो यो बिन्ति सुन्दा महाँ ॥१५५॥

यस्तो हूकुम भो बहुत् खुसि भई शत्रुघ्नलाई तहाँ ।
गादी आज म दिन्छु राज् पछि गऱ्या पूरी बनाई तहाँ ॥
पैल्हे जल्दि त मारि हाल लवणै लै जाउ यो बाण् भनी ।
बाण्मा मुख्य जउन् थियो उहि झिकी दीनू भयो बाण् पनी॥१५६॥

---

१ नेपाल, होमनाथ—अनेकै ।
२ नेपाल, भारतजीवन, होमनाथ—मान ।
३ नेपाल—जोग् ।

भर्ती क्या दिनु भो कि भाइ ! शिवको त्रिशुल् छ तेस्का घरै ।
पूजा नित्य गरेर जान्छ वनमा आहार खातिर् परै ॥
तेस्ले त्यो शिवको त्रिशुल् लिन भनी जानै न पावस् घरै ।
फिर्दामा तहिँ लड्नु हान्नु यहि शर् मर्ला र गिर्ला परै ॥१५७॥

पायो त्यो शिवको त्रिशुल् लिन भन्या तेसै त्रिशुल्ले गरी ।
सब्को नष्ट गराउन्या छ यहि सुर् रावन् विचार् खुप् गरी ॥
यो मान्या पछि तेस् मधूवन महाँ एक् वेस् बनाऊ सहर् ।
जसमा वस्न मिलोस् भनी सकलले खुप् वस्न मानुन् रहर् ॥१५८॥

तेस्को नाम् मथुरा हुन्या छ नगरी त्यै राजधानी गरी ।
राज् गर्नू तिमिले अनेक् तरहका सब्का विपत्ती हरी ॥
एक्लै गै अघि मार राक्षस पछी आऊँछ सेना पनी ।
तिस् चालीस हजार राज् गर तहाँ रामले दिया राज् भनी ॥१५९॥

आशीर्वाद् दिइ साथ जाउ ऋषिका भन्या हुकुम् भो जसै ।
हुकुम् माफिक काम् गऱ्या सँग गई शत्रुघ्नजीले तसै ॥
राक्षस् मार्नु भयो तुरुन्त र तहीं पूरी मथूरा बनी ।
हुकुम् माफिक राज् गऱ्या तहिं बसी शत्रुघ्नजीले पनी ॥१६०॥

सीताका पनि दुइ पुत्र सुकुमार् जमन्याछ पैदा भया ।
वाल्मीकी ऋषिले ति पुत्र दुइको नामकर्म गर्दा भया ॥
जेठाको कुश नाम् धऱ्या लव भनी जुन् चाहिँ कान्छा थिया ।
तिन्को नाम धऱ्या कर्म सिन अनेक् शास्त्र पढाई दिया ॥१६१॥

वेलैमा[1] व्रतबन्ध कर्म पनि भो वेदार्थ जानुन् भनी ।
लाग्या[2] वेद् पनि पढ्न शास्त्रहरुको तात्पर्य जान्या पनी ॥
उत्तम् निर्मल वश सूर्य्य विचमा पैदा भयाका थिया ।
यो अभ्यास थियेन भन्नु त उसै फुस्रा कुरा पो थिया ॥१६२॥

वाल्मीकिले सकल रामचरित्रलाई ।
गान् गर्न काव्यरितले कविता बनाई ॥
गान् गर्दथ्या खुसि भयेर पढाइ दीया ।
त्यो गाउँदा त्रिभुवनै वश पारि लीया ॥१६३॥

जम्ल्याहा दुइ भाइ सुन्दर कुमार् हात्मा सितारा लिई ।
पूरा सुर् सित गाउँथ्या दुइ जना ताल्[3] सुर् मिलाई दिई ॥
खुस् हुन्थ्या ऋषिगण् सबै ति वनका सूनेर तेस् गानले ।
प्यारो खुप् सित गर्दथ्या ति दुइको ठूला भनी मानले ॥१६४॥

यै रीतले रामचरित्र गाई ।
सम्पूर्णको मन् पनि खुस् गराई ॥
वाल्मीकि कै आश्रममा रहन्थ्या ।
गर्थ्या सधैं वाल्मिकि जो त भन्थ्या ॥१६५॥

---

१ होमनाथ—कालैमा ।
२ पेअन—लाया ।
३ सबै पुस्तकहरुमा 'तार्' भन्ने पाठ छ । तर हाम्रा भाषामा 'ताल सुर' भन्ने बोली प्रचलित छ । अतएव 'ताल्' राखियो । स० । बम्बई—स्वर् ।

यैं बिच्मा सब अश्वमेघ्हरु गरी राम्ले अनेक् दान् दिया।
सीताजी वनमा थिइन् र सुनकी सीता बनाई लिया॥
ब्रह्मर्षी र बडा बडा पृथिविका राजाहरू सो[1] पनी।
ब्राह्मण् क्षत्रिय वैश्य सब् तहिं पुग्या हेरौं तमासा भनी॥१६६॥

वाल्मीकी ऋषिका सँगै ति कुशलव् हिंड्थ्या ति जान्थ्या जहाँ।
पाया फुर्सत सोध्नको र कुशले सोध्या कुरा क्यै तहाँ॥
हे सर्वज्ञ गुरो! कउन् तरहले बन्धन् विषे पर्दछन्।
कुन् पाठ्ले सब बन्धनै पनि सहज् तोडेर पार् तर्दछन्॥१६७॥

बाँधिन्छन् यहि रीतले यति गन्या संसार तर्छन् भनी।
यस्तो तत्त्व बताइ बक्सनु ह्वस् जानू म मूढो पनी॥
यस्तो प्रश्न सुन्या जसै ति कुशको ती वाल्मिकीले पनी।
यस्को तत्त्व बुझाइ बक्सनु भयो बाँधिन्छ यस्ले भनी॥१६८॥

यस् जिव्ले विहकै विचार न गरी मन्त्री अहङ्कार् लिंदा।
मन्त्रीले जति आफुमा गुण थिया जिव्मा मिलाई दिंदा॥
मन्त्रीका वशमा परेर यहि जिव् मै हूँ अहङ्कार् भनी।
लाग्यो भन्न भन्या गन्यो[2] विषयमा बाँधिन्छ यो जिव् पनी॥१६९॥

---

१ होमनाथ—जो। बाँधिन्छ सबै यो जीव् पनी। यो पाठ अशुद्ध "
२ "गद्यो" भन्ने पाठ भये जानी हुने थियो। सं० छन्दमा समेत छ। सं०।
होमनाथ—थाल्यो भन्न भन्या विषयमा

जो छन् सत्व रजस् तम त्रिगुण ई रूप् हुन् अहङ्कारका ।
ई तीनै मनले विचार् गरि लिंदा छैनन् कुनै सारका ॥
इच्छा सत्व विषे धन्यो पनि भन्या ऐश्वर्य भोग्छन् पनी ।
संसार् कै व्यवहार बढ्छ रजले स्त्री पुत्र मेरा भनी ॥१७०॥

जो ता छन् तम गुणमा खुसि हुन्या तेस्ता त कीरा भई ।
फिर्छन् नित्य विपत्तिमा सुख सयेल् मिल्दैन काहीं गई ॥
जो ता तिन् गुणलाइ तुच्छ बुझि खुप् आत्मैविचार् गर्दछन् ।
सब् बन्धनहरुलाइ तोडि सहजै संसार् तिनै तर्दछन् ॥१७१॥

तस्मात् अहङ्कार् कन तुच्छ मानी ।
आत्मा म हूँ पूर्ण भनेर जानी ॥
आत्मैविचार्मा तिमि चित्त देऊ ।
साँचो भन्याँ यो तिमि जानि लेऊ ॥१७२॥

वाल्मीकि देखी यति तत्त्व पाई ।
ज्ञान् भै गयो ती[1] कुश वीरलाई ॥
मुक्तै थिया नित्य तथापि याहाँ ।
गर्दै रह्या कार्य त लोक् माहाँ ॥१७३॥

---

१ वैपुळ—टा ।

एक् दिन् वाल्मिकिले त अर्ति दिनु भो हे पुत्र हो ! गाउँछौ।
तिम्रो गान् सुनि खूसि हुन्छ दुनियाँ अत्यन्त यश् पाउँछौ ॥
श्रीराम्का पनि गान सुन्न कन मन् आयेर[1] गाऊ भनी।
लाया गाउन यो भन्या दुइ जना मीलेर गाया पनी ॥१७४॥

गान्ले खुस् भइ केहि वक्सिस भयो[2] वक्सिस् भयाका जती।
चिज् छन्[3] सब् तृण झैं[4] गरेर तिमिले केही न लीया रती ॥
अर्ती वाल्मिकि देखि पाइ कुशलव् अत्यन्त खूसी भई।
लाग्या गाउन दूइ भाइ ऋषिका साम्ने अगाडी गई ॥१७५॥

सून्या तेहि अपूर्व गान् र रघुनाथ्ज्यूका पनी मन् गयो।
मेरो मन् पनि गानले हरि लिया को हुन् इ भन्न्या भयो ॥
साम्ने डाकि म सुन्छु फेरि यहि गान् भन्न्या इरादा धरी।
राजन् पण्डित वृद्ध जन्हरु बहुत् राखी सभा खुप् गरी ॥१७६॥

गान् सुन्छु अब[5] डाक यहिं ति कुमार् आउन् सभामा भनी।
हूकुम् भो र हुकूमले दुइ कुमार् आया सभामा पनी ॥
देख्या मूर्ति कुमारका र सबले[6] आश्चर्य मान्या पनी।
कस्का हुन् इ कुमार् कसो गरि भया रामै सरीका भनी ॥१७७॥

---

१ होमनाथ—आयोर्।
२ पेजन—यो त वक्सिस भयो।
३ पेजन—छे।
४ भारतजीवन—भर्।
५ होमनाथ—सर।
६ भारतजीवन—सवमा।



रामलाई लवकुश रामायण सुनाउँदै छन्

रामैका सरि वस्त्र भूषण भया रामचन्द्र कुन् हुन् भनी ।
चिह्नैलाइ कठिन् हुन्या छ यहि बात सब् बोल्न लाग्या पनी ॥
लाग्या गाउन भाइ दुइ जब ता गान्धर्व सुर्‌ले गरी ।
गान् सुन्दा बहुतै खुसी हुनु भयो त्रैलोक्यका नाथ् हरी ॥१७८॥

हुकुम् ताहिँ भरतजिलाइ दिनु भो लौं देउ खिल्लत् भनी ।
दस् हज्जार् रुपिया लगी कन दिया जल्दी भरतले पनी ॥
दस् हज्जार् रुपिया दिया त पनि त्यो सब् तृण् सरीको गरी ।
जाहाँ वाल्मिकिजी थिया उहिँ गया धन् छोडि तेसै घरी ॥१७९॥

जान्या श्रीरघुनाथले इ त सिताजीका कुमार् हुन् भनी ।
त्यै बिच्मा प्रभुले हुकुम् दिनु भयो शत्रुघ्नलाई पनी ॥
हे भाई ! तिमि जाउ जल्दि अहिले वाल्मीकिजी छन् जहाँ ।
सीताजी र ति वाल्मिकी कन लिई दौडेर आऊ यहाँ ॥१८०॥

सीतालाइ नियाँ म दिन्छु अहिले[1] सीताजि नीयाँ पसुन् ।
आफ्नू दोष अफालि निर्मल भई खुस् भै सिताजी बसुन् ॥
हुकुम् श्रीरघुनाथको यति हुँदा शत्रुघ्न जल्दी गया ।
वाल्मीकी ऋषिका परी चरणमा सब् बिन्ति गर्दा भया ॥१८१॥

---

१ सोमनाथ—जान्नू भो ।
२ भारतजीवन—लिया म लिन्छु अहिले ।
भारतजीवन (क) लिया म लिन्छु कहिले ।
ई दुवै पाठ उत्तम छैनन् । सं०

सून्या बिन्ति र जुन् त आशय थियो राम्को उ जानी लिया ।
पर्स्लिन् भोलि निया सिता भनि तहाँ उत्तर् तुरुन्तै दिया ॥
उत्तर् वाल्मिकि देखि पाइ कन ती शत्रुघ्न फर्की गया ।
श्रीराम्चन्द्रजिका पुगी हजुरमा त्यो[1] बिन्ति गर्दा भया ॥१८२॥

सुन्न् भो जब उत्तरा ति ऋषिको ताहाँ प्रभूले पनी ।
परिछन् भोलि सिता निया भनि हुकुम् भो लोक जानुन् भनी ॥
हूकुम् येति सुन्या र लोक पनि सब् हेरौं तमासा भनी ।
ब्राह्मण् क्षत्रिय वैश्य शूद्र जति छन् आया महर्षी[*] पनी ॥१८३॥

आया वाल्मिकि ताहिं तेहि[2] बिचमा सीताजिलाई लिई ।
सीताजी पनि यज्ञमा पुगि गइन् श्रीराममा मन् दिई ॥
सीताजी कन देखि लोकहरु सब् वेस् भो बहुत् वेस् भनी ।
लाग्या बोल्न तहाँ तसै बखतमा ती वाल्मिकीजी पनी ॥१८४॥

श्रीराम्जी सित बिन्ति गर्दछु भनी राम्का अगाडी सन्या ।
सीताजी अति शुद्ध छन् भनि बहुत् बिन्ती हजुरमा गऱ्या ॥
छोरै हुन् कुशलव् पनी हजुरका बिन्ती कहाँ तक् गरू ।
क्यै शङ्का मनमा रह्या हजुरमा गर्छु शपथ् मै वरू ॥१८५॥

---

१ होमनाथ—यो । * अध्यात्मरामायण— ब्राह्मणाः क्षत्रिया वैश्याः शूद्राश्चैव महर्षयः ।
२ पेजन—ति हेर्नं । ३ पेजन—देखि ।

बोल्यॉ केहि झुटो भन्या हजुरमा बोल्यो झुटो बात् भनी ।
निष्फल् आज गरुन् प्रभू जति थियो मेरो तपस्या पनी ॥
सून्या वाल्मिकिको शपथ् र रघुनाथ्ज्यूका हुकुम् यो भयो ।
मेरा संशय छैन कत्ति मनमा सॉचो शपथ् हुन्छ यो ॥१८६॥

लङ्कामा पनि एक् निया अघि दिंदा जीतिन् र सीता लियॉ ।
ऐल्हे पो अपवाद् गऱ्या र जनले सो मेट्न छाडी दियॉ ॥
अर्कोले अपवाद् गऱ्यो भनि उसै सॉचै सिता त्याग् गऱ्यॉ ।
तस्तै भो त पनी रिसानि न हवस् यस्मा क्षमापन् गऱ्या ॥१८७॥

मेरै पुत्र त हुन् दुवै इ कुशलव् जम्ल्याह पैदा भया ।
सीताजी पनि शुद्ध छन् सब बुझ्यॉ सन्देह मेरा गया ॥
हूकुम् यो रघुनाथको हुन गयो हूकुम् भयो ता पनी ।
सीताजी त तयार् भइन् तस बखत् परछ्र म नीया भनी ॥१८८॥

ब्रह्मादीहरु लोकपाल्हरु सबै आया सिता छन् जहॉ ।
ब्रह्मादीहरुका अगाडि ति सिता क्यै बोल्न लागिन् तहॉ ॥
जस्तो भक्ति छ रामका चरणमा मेरा उ जानी लिउन् ।
सॉची छु त मलाइ जान अहिले बाटो भुमीले दिउन् ॥१८९॥

---

१ होमनाथ—यो ।

२ भारतजीवन—मारै ।

यस्ता वाणि सिताजिको पृथिविले सुनी सकीथिन् जसै ।
बेस् सिंहासन एक् तयार् गरि सिताजीलाइ राखिन् तसै ॥
त्यै सिंहासनमा बसी जननिले औदास्य मन्मा लिइन् ।
सीताजी कन जानलाइ बढिया बाटो भुमीले दिइन् ॥१९०॥

यस् रितले जननी सिता जब गइन् खुप् मोह लोक्मा पऱ्या ।
इन्द्रादीहरुले त खुप् खुसि हुँदै बेस् पुष्पवृष्टी गऱ्या ॥
सीताको तहिँ शोक् गऱ्या प्रभुजिले संसारि जसता भई ।
ब्रह्मादीहरुले बुझाउनु भयो साम्ने अगाडी गई ॥१९१॥

बूझी वक्सनु भो र शोक् पर गरी बाँकी रह्याका थिया ।
सब् सम्पूर्ण गरेर दान् दिनु भयो ब्राह्मण् तहीं सब् थिया ॥
जो ता यज्ञ महाँ थिया जनहरू धन्ले ति पूर्ण भया ।
बीदा वक्सनु भो र देसि जति हुन् बीदा हुँदै सब् गया ॥१९२॥

सीताजी सितको वियोग् जब भयो श्रीराम् विरक्त भया ।
यज्ञस्थान् कन छोडि पुत्र सँग ली जल्दी अयोध्या गया ॥
कौशल्या जननी पनी खुसि भइन् श्रीराम आया भनी ।
लक्ष्मण् अन्त्य निहारि जानकि कथा चर्चा गरिन् बेस् भनी ॥१९३॥

---

१ [illegible] २ [illegible]

कौशल्या रामलाई त्रिभुवनपतिका नाथ् रमानाथ जानी।
कुन् पाठ्ले बन्ध छुट्ला भनि कन मनमा खुप् ठुलो दुःख मानी॥
आइन् पाऊ परिन् फेर् विनति पनि गरिन् रामजीका चरण्मा।
कुन् पाठ्ले बन्ध छुट्छन् यति म कन कहू आज आयाँ शरण्मा १९४

यस्तो बिन्ती सुनी खुप् खुसि पनि हुनु भो बन्ध छुट्न्या उपाई।
सब् भन्दा येहि ठुलो भनि कहनु भयो भक्तियोग् माइलाई॥
भक्तीयोग्मा पनी जो' त्रिगुणरहितकी भक्ति छन् सोहि गर्नू।
गङ्गाजीका प्रवाहा सरि गरि यस मन्लाइ मै माथि धर्नू॥१९५॥

मै माथी चित्त धर्न्या जनहरु सहजै भक्तिमान् होइ जान्छन्।
चार् छन् मुक्ती ति चारै कन पनि तलका तृण् सरीका ति मान्छन्॥
मै माथी चित्त धर्न्या भनि कन बुझि ल्यौ साधना गर्ने माहाँ।
तेस्को वर्णन् म गर्छु अब सब बुझि ल्यौ सब् खुलस्ता छ याहाँ॥१९६॥

इच्छा काहिं न राखनू विषयमा[2] सब् धर्म थाम्नू पनी।
सत्काम् गर्नु विचार राखनु मनमा हिंसा घटीया भनी॥
मेरो दर्शन गर्नु खुप् स्तुति पुजा गर्नू स्मरण् खुप् गरी।
पाऊमा परि दण्डवत् गरि लिनू जाइन्छ यस्ले तरी॥१९७॥

---

१ होमनाथ—ऊती छन्।

२ नेपाल—इच्छा काहिं न राखनु फेर् विषयमा। होमनाथ, भारतजीवन (क) इच्छा काहिं न राखनु यो विषयमा।

सब् प्राणीहरुमा म छू यति विचार् राख्नू असङ्गी भई ।
साँचो बोल्नु बडा मिल्या चरणमा पर्नू तुरुन्तै गई ॥
गर्नू दुःखि उपर् दया सम भया तिन्मा त मैत्री पनी ।
सेवा गर्नु यमादिको पनि असल् बाटा इनै हुन् भनी ॥१९८॥

वेदान्तै कन सुन्नु गर्नु खुसि भै कीर्तन् सदा नामको ।
सज्जन्ले सतसङ्ग[2] गर्नु दिन दिन् सोझो भई[3] कामको ॥
मेरो देह भनाउन्या अति ठुलो छोड्नू अहङ्कार् पनी ।
यो मन् शुद्ध गराइ बुझ्नु जति छन् सब् धर्म मेरा पनी[4] ॥१९९॥

जस्तै गन्ध रहन्छ फूलहरुमा फुल्मा[5] रह्याको पनी ।
वायूका वशमा परी कन उडी आऊँछ नाक्मा पनी ॥
तेस्तो योग विषे दियो मन भन्या त्यै योगवायू पनी ।
गन्धै झैं गरि मन् उडायर सहज् ल्याऊँछ[6] मैमा पनी ॥२००॥

सर्वात्मा म छु जो त येति न बुझी पूजा सनक् गर्दछन् ।
ती देखी खुस हुन्न कत्ति ति गरुन् व्यर्थै शरिर् हर्दछन् ॥
पूजा गर्नु त तेहि हो उ न गर्न्या तिन्ले पुजा कुन्[7] गर्न्या ।
मृत्यूको भय हुन्छ तिन् कन सदा संसारमा ती पर्न्या ॥२०१॥

---

१ होमनाथ—सब्मा ।
२ भारतजीवन, होमनाथ—सज्जनसँग सङ्ग ।
३ होमनाथ—हुनू ।
४ होमनाथ—सम्बन्ध मेरो भनी ।
५ नेपाल—फल्मा ।
६ होमनाथ—उठेर सहजै मा ऊँछ ।
७ पेजन—कदा ।

सर्वात्मा म छु येति जानि सब जिव्लाई नमस्कार् गरुन् ।
जीवात्मा परमात्म एक् बुझि सदा अन्तःकरण्मा धरुन् ॥
मातर् ! मार्ग त तर्नलाइ् सजिलो यै हो[1] छ यस्तै गरी ।
संसार्का कति पार् गया सहजमा संसारसागर् तरी ॥२०२॥

याहाँलाइ् त झन् सहज् छ म त हूँ पुत्रै र पुत्रै[2] भनी ।
संझी मात्र दिनू हवस् यति गन्या छुट्नन् इ् बन्धन् पनी ॥
कौशल्या रघुनाथको यति हुकुम् सूनिन् र मुक्त भइन् ।
कैकेयी पनि देह छोडि दशरथ्जीका हजुर्मा गइन् ॥२०३॥

तस्तै सुमित्रा दशरथ्कि रानी ।
संसारको सोख् पनि सर्व जानी ॥
प्रारब्धका बन्धनलाइ् तोडी ।
पौंचिन् पती थ्यैं यहिं देह छोडी ॥२०४॥

पापात्मा अति दुष्ट शत्रु सबका तिन् कोटि गन्धर्व छन् ।
ई सब्लाइ् मराउनू अब पऱ्यो[3] बढ्नन् न मान्या त झन् ॥
यस् सुर्ले रघुनाथका हजुरमा एक् दिन् युधाजित् गया ।
पान्या बिन्ति भरत् गई हुकुमले गन्धर्व मार्दा भया ॥२०५॥

---

१ सोमनाथ—येही ।
२ भारतजीवन—पुत्री—यो पाठ राम्रो छैन । स०
३ भारतजीवन, नेपाल—पऱ्या ।

पूरी एक् तहिँ पुष्करावति बनी पुष्कर् त राजा भया ।
आर्को तक्षशिला पुरी बनि तहाँ राज् तक्ष गर्दो भया ॥
छोरा पुष्कर तक्षलाइ तिमिले राज् गर्नु' याहीं भनी ।
फर्की श्रीरघुनाथका हजुरमा पौंच्या भरत्जी पनी ॥२०६॥

लक्ष्मण्लाइ पनी हुकुम् तहिँ भयो भाई ! तिमीले पनी ।
छोरालाइ लगेर पश्चिम मुलुक्मा राज्य देऊ भनी ॥
पश्चिम्मा अति दुष्ट भिल्लहरु छन् तिन्लाइ संहार् गरी ।
दृई पूरि बनाउनू पनि तहाँ रत्नादि दौलत् भरी ॥२०७॥

राजा अङ्गद चित्रकेतु इ दुवैलाई बनाया तहाँ ।
छोरालाइ रजाइँ दी कन तिमी आया तुरन्तै यहाँ ॥
हुकुम् श्रीरघुनाथको यति हुँदा लक्ष्मण् तुरन्तै गया ।
जो जो छन् अति दुष्ट भिल्लहरु सब् तिन्लाइ मार्दा भया ॥२०८॥

पौँच्या द्वार तलक् जसै प्रभुजिका चौकी त लक्ष्मण् थिया ।
द्वारमा एक ऋषि छन् खडा भनि गई हाजिर् पुऱ्याई दिया ॥
हाजिर् सूनि हुकुम् भयो प्रभुजिको ल्याऊ तुरुन्तै भनी ।
लक्ष्मण्ले पनि जल्दि गै हजुरमा ल्याया इनै हुन् भनी ॥२१०॥

पौँच्या श्रीरघुनाथका हजुरमा काल् विप्ररुप्ले जसै ।
त्वं वर्धस्व भनेर आशिष दिया श्रीरामलाई तसै ॥
सत्कार् श्रीरघुनाथले पनि गऱ्या पैले कुशल्क्षेम् गरी ।
तिन्को आशय बुझ्नलाइ हरिले सोध्या अगाडी सरी ॥२११॥

कुन् काम गर्नू छ र जल्दि आई ।
भेट् गर्नु भो आज यहाँ मलाई ॥
हुकुम् प्रभूको जब ये ति पाया ।
ती कालपुरुष्ले पनि बिन्ति लाया ॥२१२॥

हे नाथ् ! चरणमा अहिले म पर्छु ।
एकान्त बकस्या हुँदि बिन्ति गर्छु ॥
मेरा कुरा कोहि न सुन्न पाउन् ।
सुन्नन् त मारी दिनु दूर जाउन् ॥२१३॥

---

१ भारतजीवन, नेपाल—भए ।

ती कालपुरुष्को यति बिन्ति सूनी ।
वेसै इ भन्छन् भनि भीत्र गूनी ॥
हुकुम् भयो लक्ष्मणलाइ ताहाँ ।
कोही न आउन् अब भीत्र याहाँ ॥२१४॥

कै आउनन् भीत्र त मर्न जानन् ।
अत्यन्त गोता बिहकै ति खानन् ॥
एकान्त तक् कोहि यहाँ न आउन् ।
यो उर्दि सबले तिमि देखि पाउन् ॥२१५॥

सून्या[1] हुकुम् येति र काल बोल्या ।
आफ्नू सबै आशय ताहिं खोल्या ॥
हे नाथ् ! म हूँ काल् सबलाइ हन्याँ ।
मालुम् छ यो सब् किन विन्ति गर्न्याँ ॥२१६॥

ब्रह्माजिको बिन्ति लियेर आयाँ ।
खुप् भाग्यले दर्शन आज पायाँ ॥
ब्रह्माजिको बिन्ति म आज गर्छु ।
होला हुकुम् जो उहि सीर घर्छु ॥२१७॥

---

१ सोमनाथ—सुने ।

सृष्टी देखि अगाडि पूर्ण रुपले आत्मा स्वरुप् एक् थियौ ।
नारायण् जलशायि रूप त पछी यै सृष्टि खातिर् लियौ ॥
स्वामित्का तहिँ नाभिका कमलमा एक्लै म पैदा भयाँ ।
सृष्टी गर्न हुकुम् हुँदा हुकुमले लोक्सृष्टि गर्दै गयाँ ॥२१८॥

जस्ले दुःख दिया प्रजा कन तिनैलाई मै मारूँ भनी ।
युग् युग्मा अवतार् समेत् लिनु भयो यस्तै अगाडी पनी ॥
ऐले यो अवतार् पनी पृथिवि कै भार् हर्न खातिर् धरी ।
भूको भार् पनि टारि बक्सनु भयो सब् दुष्ट संहार् गरी ॥२१९॥

एघारै म हजार वर्ष रहुँला जाँदा हुकुम् जो भयो ।
सोही वर्ष गणीतले गनि लिंदा एघार हज्जार् गयो ॥
बस्नैको अरु मन् छ पो त भगवन् ! इच्छा हजुर्को हवस् ।
याहाँ आउन मन् भया बखत भो लौ जल्दि पाल्नु हवस् ॥२२०॥

ब्रह्माको विनती सुनेर रघुनाथ् हाँसी तिनै कालका ।
साम्ने बात्चित गर्नु भो पनि बहुत् सब् जान कै चालका ॥
दुर्वासा यहि बीचमा तहिँ गया राम्लाइ भेट्छु भनी ।
लक्ष्मण् द्वार महाँ थिया र ऋषिले तिन्लाइ भेट्या पनी ॥२२१॥

---

१ भारतजीवन—नाभिमा ।
२ होमनाथ—त ।
३ भारतजीवन—यो ।
४ नेपाल—चाल्को ।
५ ऐजन—चाल्को ।

लक्ष्मण्लाइ तहाँ भन्या त ऋषिले हाजिर् गराऊ भनी।
लक्ष्मण्लाइ कठिन् भयो कठिनले विन्ती लगाया पनी॥
भीत्रै जान हुँदैन जाउँ कसरी विस्तार् कहाँ तक् गरू।
जुन्[1] काम् खातिर आज आउनु भयो सो पूर्ण गर्छु वरू ॥२२२॥

लक्ष्मण्ले यति ती मुनी कन तसै विन्ती गर्न्याथ्या जसै।
दुर्वासा ऋषि हुन् बडा त पनि खुप् रीसाइ बोल्या तसै॥
लै जाऊ अझ रामका चरणमा वाहीं शरण् पर्दछु।
लै जान्नौ त मलाइ भित्र त कुलैको भस्म झन्[2] गर्दछु ॥२२३॥

सून्याँ[3] येति वचन् र लक्ष्मणजिले मन्मा विचार् यो गर्‍या
कुल्को नाश् न हवस् कुशल् सब रहुन् क्या हुन्छ मै एक् मर्‍या॥
ऐल्हे भीत्र त जान निश्चय पर्‍यो यस्तो विचार् खुप् गरी।
लक्ष्मण् भीत्र गया जहाँ प्रभु थिया त्रैलोक्यका नाथ् हरी ॥२२४॥

द्वार्मा हाजिर छन् ऋषी भनि तहाँ विन्ती गर्न्याथ्या जसै।
ती काल्लाइ विदा गरेर रघुनाथ् बाहीर आया तसै॥
दुर्वासा सित भेट् भयो जब तहाँ राम्ले नमस्कार् गरी।
सोध्नू भो ऋषिलाइ आउनु भयो कस्तो इरादा धरी ॥२२५॥

---

१ नेपाल—जुन्।
२ होमनाथ—पेर।
३ देवन—सूने।

इच्छाभोजनमा थियो ति ऋषिको सो बिन्ति गर्दा भया ।
भोजन् बक्सनु भो र भोजन गरी ऋषी खुसी भै गया ॥
यै बीच्मा तहिँ संझि बक्सनु भयो रामले प्रतिज्ञा पनी ।
लक्ष्मण्लाइ कसोरि मारुँ अहिले यै हो विपत्ती भनी ॥२२६॥

सन्ताप् श्रीरघुनाथको जब पऱ्यो लक्ष्मण् चरण्मा पऱ्या ।
मारी दीनु हवस् मलाइ भगवन्! यो ताहिँ बिन्ती गऱ्या ॥
ठूलो भन्नु छ धर्म हो उहि रहोस् बिन्ती गऱ्या यो जसै ।
यस्को निश्चय गर्नलाइ हुन गो ठूलो सभा एक् तसै ॥२२७॥

सब्ले बिन्ति गऱ्या बुझी हजुरमा त्याग् मात्र गर्नूहवस् ।
मारी हाल्नु त योग्य छैन अधिराज! ज्यान् आज इन्को रहोस्॥
ज्यान् हर्नू र वियोग गर्नु इ बराबर् हुन् भन्याथ्या जसै ।
लक्ष्मण्लाइ पनी बिदा दिनु भयो श्रीरामजीले तसै ॥२२८॥

लक्ष्मण्जी सरयू गया तस बखत् राम्का चरण्मा परी ।
प्राणायाम् तिरमा गरी कन गया जाहाँ रहन्थ्या हरी ॥
यस् रित्ले नरलोक छोडि कन ती लक्ष्मण् जसै ता गया ।
भेट्ना खातिर शेषका हजुरमा ब्रह्मादि जम्मा भया ॥२२९॥

---

१ होमनाथ—रघुनाथको ।

२ भारतजेवन—त ।

लक्ष्मणजी सितको वियोग् जब भयो दुःखी सरीका बनी ।
साहै दिक्क भयेर मन्त्रिहरु थ्यैं यस्तो हुकुम् भो पनी ॥
जान्छु लक्ष्मण छन् जता म त उतां[1] यो राज् भरतले गरुन् ।
राजा भै कन जो प्रजाहरु इ छन्[2] इन्कां[3] सबै ताप् हरुन् ॥२३०॥

जस्सै येति हुकुम् सुन्या भरतले मूर्छित् सरीका भई ।
यस्तो बिन्ति गऱ्या तहाँ भरतले राम्का हजुर्मा गई ॥
बस्थ्याँ स्वामितलाइ छोडि म कहाँ तिन् लोक बक्स्या पनी ।
छोरै छन् अधिराज् प्रभो ! हजुरका राज्का इनै हुन् धनी ॥२३१॥

जेठा पुत्र हजूरका इ कुश विर् राज् कोशलामा गरुन् ।
उत्तरमा बसि राज् गरी इ लवले सम्पूर्णका ताप् हरुन् ॥
दूई भाइ चलाउँछन् इ जति छन् सब् राज्यको काम् यहाँ[4] ।
दुत् जाउन् मथुरा विषे किन उसै शत्रुघ्न बस्छन् तहाँ ॥२३२॥

सूनुन् लक्ष्मणको पनी ति समचार् पौंच्या परम्धाम् भनी ।
साथै जान हजूरका चरणमा दौडेर आउन् पनी ॥
यस्तो[5] बिन्ति हजूरमा भरतले गर्दा प्रजाले पनी ।
पाया थाह र ताप् भयो मन महाँ जानन् कि छोडी भनी ॥२३३॥

---

१ होमनाथ—उतै ।
२ पेवन—इनन् ।
३ पेवन—इन्को ।
४ भारतजीवन—जहाँ ।
५ होमनाथ—यस्तै ।

बिन्ती एक बशिष्ठले तहिं गऱ्या लान्छन् कि छोडछन् भनी ।
रुन्छन् सब् दुनियाँ यहाँ हजुरको[1] पाउन् प्रसाद् ई पनी ॥
सुन्नू भो तहिं यो वशिष्ठ ऋषिले बिन्ती गऱ्याको जसै ।
ठाकुर्का पनि खुप् दया हुन गयो ती सब् प्रजामा तसै ॥२३४॥

इच्छा क्या छ बताउ पूर्ण गरुँला भन्न्या हुकुम् भो पनी ।
सब्ले बिन्ति गऱ्या प्रभू सित तहाँ सब् साथ जान्छौं भनी ॥
इच्छा पूर्ण हवस् भनी हुकुम भो सब् ती प्रजा खुस् भया ।
उत्तर् कोशलमा दुवै ति कुश लव् राज् गर्न खातिर् गया ॥२३५॥

केही[2] दुत् मथुरा तरफ् प्रभुजिले जल्दी पठाई दिया ।
दुत् पौंच्या रघुनाथका हुकुमले शत्रुघ्न जाहाँ थिया ॥
दुत् देखी समचार् सुन्या प्रभुजिको शत्रुघ्नजीले जसै ।
छोरालाइ रजाइँ दी प्रभुजि थ्यैं ती जान आँट्या तसै ॥२३६॥

जेठा पुत्र सुबाहुलाइ मथुराजी राजधानी दिया ।
युपलाई विदिशा दिया र ति गया जाहाँ रघूनाथ् थिया[3] ॥
जल्दी गै कन पाउमा परि तहाँ यो बिन्ति लाया पनी ।
साथै जान भनेर आज रघुनाथ् आयाँ हजुर्मा भनी ॥२३७॥

---

१ होमनाथ—हजुरका ।

२ होमनाथ, नेपाल—कोही। अध्यात्मरामायण—शत्रुघ्नानयने दूतान्प्रेषयामास राघवः ।

३ भारतजीवन, नेपाल—युप् लागी विदिशा दिशा र ती गया "" ""यो पाठ अशुद्ध र निरर्थक छ। स०। अध्यात्मरामायण—अभिषिच्य सुबाहु वै मथुरायां महाबलः। यूपकेतु च विदिशानगरे शत्रुसूदनः ॥

लौ मध्याह्न हुँदा तयार् भइ रह्या यस्तो हुकुम् भो तहाँ ।
आया राक्षस ऋक्ष वानरहरू सब् येति सुन्दा महाँ ॥
जान्छौ आज सँगै प्रभो! हजुरमा यै विन्ति सब्ले गऱ्या ।
सुग्रिव्जी पनि विन्ति गर्न रघुनाथ्जीका अगाडी सऱ्या ॥२३८॥

अङ्गद्लाइ रजाइँ दी कन यहाँ जाँला[२] म सायै भनी ।
आयाको छु दयानिधान् ! हजुरमा यो विन्ति लायाँ[३] पनी ॥
सुग्रिव्को अरुको ति ऋक्षहरुको बिन्ती सुनेथे जसै ।
प्यारा भक्त जहाँ विभीषण थिया ताहाँ गया राम् तसै ॥२३९॥

ताहीं गै कन यो हुकुम् पनि भयो बस्नू तिमीले यहीं ।
प्रारब्धै बलवान् छ जान सबका छुट्तैन सो ता कहीं ॥
जाहाँ सम्म रहन्छ भूमि तहिं तक् राज् गर्नु याहीं बसी ।
शिक्षा गर्नु सबै प्रजा कन बहुत अन्यायिलाईं क्सी ॥२४०॥

यसको उत्तर छैन चुप् रहु भनी हुकुम् भयेथ्यो जसै ।
तेसै ठाउँ महाँ तुरुन्त हनुमान्जीलाइ देख्या तसै ॥
हूकुम् भो हनुमानलाइ हनुमन् ! चीरञ्जिवी भै रह्या ।
मेरो जुन् छ हुकुम् उ गर्न सर्व दिन् अत्यन्त तत्पर् भया ॥२४१॥

---

१ भारतजीवन—रघुनाथज्यूका ।
२ पेवन—जाउला ।
३ होमनाथ—आया ।
४ पेजन—जान छ सबै ।
५ पेवन—अन्याय ।
६ नेपाल—गर्नु सब दिन् ।

बुद्धीमान् तहिं जाम्बवान् पनि थिया जॉला म साथै भनी ।
तिन्लाई पनि यो हुकुम् हुन गयो बस्नू तिमीले पनी ॥
द्वापर्मा कछु युद्ध गर्नु तिमि थ्यैं पर्न्या छ सोही गरी ।
स्वर्गमा तिमि जाउला पछि भन्या ऐल्हे त यसतै परी ॥२४२॥

यसता रित् सित जो अहाउनु थियो सो सब् अह्राई वरी ।
सब् प्राणीहरु साथमा हिंड भनी हुकुम् भयो तेस् घरी[1] ॥२४३॥

× × × ×
× × × ×

आफ्ना पुरोहित् ति वशिष्ठलाई ।
हुकुम् भयो मङ्गल गर्नलाई ॥
मङ्गल् अनेकै ऋषिले गराया ।
राम् स्वर्ग जाना कन निस्कि आया ॥२४४॥

सीताजिले रुप् अधिको छपाइन् ।
लक्ष्मी भई वाम् तिर बस्न आइन् ॥
दक्षिण्[2] तरफ् भूमि बसिन् हरीका ।
सब् तॉहि आया भुवनै भरीका ॥२४५॥

---

१ यो श्लोक अपूर्ण छ । भारतजीवनमा ता ई दुई चरण पनी छैनन् तर सरकृनमा भने इनमा भनेका आशयका कुरा छन् । सं०

२ नेपाल, होमनाथ—दाहिन् ।

शस्त्रास्त्र सब् ती पनि रूप धर्दैं[1] ।
हिंड्दा तहाँ मङ्गल शब्द गर्दैं ॥
गायत्रि चार् वेद् सब ताहिं आया ।
रुप् धारि मङ्गल् यश शब्द गाया ॥२४६॥

जो ता अयोध्यापुरवासि थीया ।
तिन्ले सँगै सब् परिवार[2] लीया ॥
बालो बुढो कोहि रहेन ताहाँ ।
सब्को गयो मन् उहि राम माहाँ ॥२४७॥

सुग्रिवहरू वानर मुख्य आया ।
सब् पाप[3] छुट्या भनि हर्ष पाया ॥
जो लोक् थियो राम् सित जान गै गो ।
गुल्जार् अयोध्या पनि शून्य भै गो ॥२४८॥

छोड्या शहर् क्यै गइ भूमि माहाँ ।
देख्या प्रभूले सरयू र ताहाँ ॥
आफ्ना विराट् रुप् कन संझि लीया ।
आफैं त सब्का पनि नाथ थीया ॥२४९॥

---

१ भारतजीवन नेपाल—धारि ।
२ देवन—परिवार ।
३ होमनाथ—ताप ।

ब्रह्मा ऋषी देव र सिद्ध आया ।
आकाश् विमान्ले भरि छुट्टि छाया ॥
श्रीराम् उपर् खुप् सित पुष्पवृष्टि ।
सब् गर्न लाग्या उहिं लाइ दृष्टि ॥२५०॥

गाऊँछन् कहिं नाचतछन् प्रभुजि कै यश मात्र कीर्तन् गरी ।
यै बिच्मा रघुनाथ् पस्या सरयुमा सब्का अगाडी सरी ॥
ब्रह्माको पनि ताहिं औसर पऱ्यो हात् जोरि बिन्ती गऱ्या ।
सब्को ताप् अब गै गयो सकल लोक् आनन्दसागर् पऱ्या ॥२५१॥

स्वामित्ले अब विष्णुको रुप लिने बेला भयेथ्यो भनी ।
पाऱ्या बिन्ति र होइ बक्सनु भयो श्रीराम् चतुर्भुज् पनी ॥
जो शत्रुघ्न भरत् थिया दुइ जना ती शङ्ख चक्रै बनी ।
स्वामित्का तहिं बाहुमा बसि गया बसन्या यहीं हो भनी ॥२५२॥

ब्रह्माण्डै सब देवगण् खुसि भया यो[1] रूप देख्या जसै ।
ब्रह्मालाइ हुकुम् गऱ्या प्रभुजिले सब् प्राणि खातिर् तसै ॥
हे ब्रह्मन्! जति जन् थिया सहरमा सब् साथ जान्छौं भनी ।
आया सब् परिवार् लियेर सँगमा लाग्या पछाडी पनी ॥२५३॥

---

१ भारतजीवन—यो ।

इन्लाई शुभलोक देउ तिमिले सत्लोकमा वास् गरुन् ।
आफ्ना सब् परिवारले सँग रही आनन्दमा ई परुन् ॥
ब्रह्माले प्रभुको हुकुम् यति सुनी हुकुम् सिरोपर् लिया ।
सब्लाई सुख भोग गर्न कन[१] एक् लोकै खटाई दिया ॥२५४॥

ती लोक्ले पनि खुस् भयेर सरयूमा स्नान् सबैले गर्‍या ।
जुन् सान्तानिक लोक हो उहिं पुगी आनन्दका भै गया ॥
सुग्रिव् सूर्य्य विषे गई मिलि गया अंशै हुनाले गरी ।
भूभार् यै रितले हरेर रघुनाथ् वैकुण्ठ पौंच्या हरी ॥२५५॥

येती मात्र कह्या सदाशिवजिले ती पार्वती थ्यैं पनी ।
जस्ले यस् कन पाठ गर्छ मनले अत्यन्त ठूलो भनी ॥
तिन्का जन्म सहस्रका जति त छन् पाप् भस्म हुन्छन् भनी ।
सब् षड् शास्त्र बताउँछन् पढि लिया तर्छन् दुनीयाँ पनी ॥२५६॥

शम्भूले पार्वती थ्यैं खुसि भइ बहुतै प्रेमपूर्वक् कह्याको ।
संसार् पार् तर्नलाई सब कन सजिलो साँघु झैं भै रह्याको ॥
जानी यसलाइ जो ता जनहरु बहुतै प्रेमले पाठ गर्छन् ।
संसारका सौख्य सब् भोग् गरि कन दुनियाँ सब् सहज् पार तर्छन् २५७

## इति श्रीउत्तरकाण्ड

१ नेपाल—गर्न लाइ पनि एक् ।

# शव्दार्थ-तालिका

अ

अश=भाग
अशे ( अश )=भाग
अक्‌बाल ( इक्‌बाल )=प्रताप
अकर्ता=कार्य न गर्ने
अकस्मात्=एक्कासी
अक्कल् ( अक्ल )=बुद्धि
अक्ल ऐ=ऐ
अगम् ( अगम )=जान न सकिने
अगुवा=बाटो देखाउने मान्छे
अग्नी ( अग्नि )=आगो, आगोका देवता
अग्नीबाण=आगाको काँड
अङ्कमाल=अँगालो
अङ्गराग् ( अङ्गराग )=बुकुवा
अङ्कुष्ठ=मुट्ठी औंली
अचल=स्थिर, पहाड जस्तो विन्ध्याचल
अच्छा=राम्रो
अजेरे ( अजेय )=कसैले जीतन न सक्ने
अज्ञान् ( अज्ञान ) = मूर्खता
अञ्जलीदान् ( अञ्जलिदान )=मरेका मान्छेलाइ अँजुली भरी पानी हाली दियेको तर्पण
अटालि=घर माथीको खुला भाग
अटाली=ऐ०
अति=ठुलो
अतिकाय=ठुलो शरीर भयेको
अत्यन्त=धेरै
अदृश्य=न देखिने, अन्तर्धान, लोप
अदृश्यै ( अदृश्य )=हेर्नु अदृश्य
अद्वितिय ( अद्वितीय )= दोस्रो न भयेको, जोडा न भयेको
अधम् ( अधम )=नीच
अधम=ऐ०
अधिक=धेरै
अधिनाथ् ( अधिनाथ )=ठुला मालीक
अधिपति=राजा
अधिपती ( अधिपति )=हेर्नु अधिपति
अधिराज् ( अधिराज )=राजाका राजा
अधोमुख् ( अधोमुख )=मुखे निहुरायेको
अध्यात्म=पारमार्थिक
अध्यात्मिकादि ( आध्यात्मिकादि )= आत्मिक इत्यादि ताप तीन प्रकारका छन् ( १ ) आधिभौतिक=शरीरको, ( २ ) आध्यात्मिक= आत्मासम्बन्धी, मनको औ ( ३ ) आधिदैविक=देवतासम्बन्धी, भाग्यको
अध्यास् ( अध्यास )=भान
अनन्त=टुगो न भयेको
अनात्मा=जो आत्मा होइन
अनाथ् ( अनाथ )=असहाय
अनादर=अपमान
अनादि=थाल्नी न भयेको, इश्वर
अनुग्रह=दया
अनुग्रहपात्र=दयाका अधिकारी
अनुचित=अयोग्य
अनुसार=बमोजिम
अन्तर् ( अन्तर )=भेद, माझ, भुना
अन्तःकरण ( अन्तस्करण )=भित्री मन
अन्तर्ध्यान ( अन्तर्धान )=नजर बाट हराउनु
अन्तःपूर ( अन्तस्पुर )=घरको स्वास्नी मान्छे बस्ने खण्ड
अन्तर्यामि ( अन्तर्यामी )=मानीसको भीत्र बस्ने आत्मा जो परमात्मा हो
अन्तर=हेर्नु अन्तर्

अन्त्य=समाप्ति, शेष, टुंगो
अन्यत्र=अर्का तिर
अन्याय=बेइसाफ
अन्यायि ( अन्यायी )=इसाफ न गर्ने
अपकीर्ति=अपयश
अपञ्चिकृत ( अपञ्चीकृत )=पाँच भागमा
न बाँडियेको
अपवाद् ( अपवाद )=अपटी, अकीर्ति
अपवाद=हेर्नु अपवाद्
अपार=पार न पाइने, बुझी न सकिने
अप्सरा=स्वर्गमा नाच गर्ने स्त्री
अब उपर=अब उप्रान्त
अबर् ( और )=औ अर्को,
अभय=निर्भय
अभागि ( अभागी )=भाग्यहीन
अभिमान् ( अभिमान )=सेखी, झुटो
भावना=भ्रम
अभिलाष् ( अभिलाषा )=इच्छा
अभिषेक् ( अभिषेक )=सिञ्चन
अमीमान=( अभिमान ) हेनु अभिमान्
अमूल्य=अनमोल
अमोघ् ( अमोघ )=खेर न जाने
अम्रित् ( अमृत )=कहिल्यै न मर्ने, जुन
कुरो खायेर मानीस कहिल्यै मर्दैन
अयुत् ( अयुत )=दस हजार
अयुत=हेर्नु अयुत्
अयोध्यापती ( अयोध्यापति )=अयोध्या
का राजा, राम
अयोध्यापुरवासि ( अयोध्यापुरवासी )=
अयोध्या नगरमा बस्ने मानीस
अर्ति=उपदेश
अर्धचन्द्र=खुर्पे चन्द्रमा
अर्पण ( अर्पण )=चढाउन

अर्बुद् ( अर्बुद )=दस करोड
अवतार् ( अवतार )=ईश्वरले शरीर
धारण गर्नु
अवर्=हेर्नु अबर्
अवश्य=निश्चय
अवाच्य=न बोल्न हुने कुरो, गाली
अश्रुधारा=आँसुका बलिन्द्रा
अश्वमेघ् ( अश्वमेध )=चक्रवर्ती राजा
द्वारा गरिने यज्ञ
अश्वमेघ=ऐ०
अश्शोक ( अशोक )=एक प्रकारको रुख
असङ्ख्यै ( असङ्ख्य )=गनी न सक्नु
असङ्गी=कुनै कुरामा आसक्त वा लिप्त न
हुने
असत्=झुटा
असल् ( असल )=राम्रो
असह्य=सही न सक्नु
अस्त्र=हथियार
अस्सल ( असल ) हेर्नु असल्
अहङ्कार् ( अहङ्कार )=कर्ता म हुँ भन्ने
अज्ञान, अविद्या, अहङ्कार
अहारा ( आहार )=खाने कुरो
अहिर ( अहीर )=ग्वाला जात
अहो=अचम्म बुझाउने शब्द

आ

आकुल् ( आकुल )=छट्पटाई
आकृती ( आकृति )=रूप
आग्रह=प्रेमको हठ,
आज्काल् ( आजकल )=हिजोआज,
अचेल
आज्ञा=हुकुम
आत्म ( आत्मा )=प्राणीमा बस्ने ईश्वर
आत्मसत्ता=परमात्माको शक्ति

आत्मास्वरूपी=आत्माको रूप भयेको, विकार न भयेको
आदर् ( आदर )=मान
आदिपुरुष=ईश्वर
आदी ( आदि )=पहिलो, प्रथम
आधार् ( आधार )=भर
आधिव्याध् ( आधिव्याधि )=मानसिक तथा शारीरिक रोग
आधिव्याधि=हेर्नु आधिव्याध्
आनन्दाश्रु=हर्षको आँसु
आनन्दपूर्वक=खुशी सित
आपत्ति=दुःख
आपस् ( आपस )=परस्पर
आभूषण् ( आभूषण )=गहना
आभ्यन्तर् ( आभ्यन्तर )=भित्री
आयु ( आयु )=उमेर
आरोप् ( आरोप )=यौटा कुराको गुण तथा क्रिया अर्को कुरामा हाल्नु
आर्जन ( अर्जन )=कमाई
आलिङ्गन् (आलिङ्गन)=अँगालो हाल्नु
आलिङ्गन=हेर्नु आलिङ्गन्
आशय=अभिप्राय
आशिर्वाद( आशीर्वाद )=मान्य मान्छेले आफु भन्दा सानालाई प्रेमले भलो होस् भनेको वाक्य
आशीर्वाद् ( आशीर्वाद ) ऐ०
आशीष=आशीर्वाद
आश्चर्य=अचम्म
आश्रम् ( आश्रम )=ऋषिहरु बस्ने ठाउँ
आश्रित् (आश्रित)=अर्काको आधारमा बस्ने
आसन् ( आसन )=बस्ने एक प्रकारको चकटी
आसरा ( आसरा )=आशा
आहार=हेर्नु अहारा

**इ**

इक्ष्वाकु ( इक्ष्वाकु )=रामचन्द्रका वंशको नाउँ
इच्छादी (इच्छादि )=इच्छादिक
इच्छित् (इच्छित)=चितायेको
इन्द्रशर=इन्द्रनाउँ भयेको काँण
इन्द्रिये (इन्द्रिय)=हातमुख इत्यादि शरीरका दस अवयव। कान, छाला, आँखा, जिब्रो तथा नाक ई पाँचलाई ज्ञानेन्द्रिय भन्छन् औ गुदा, उपस्थ, हात, खुट्टा, तथा वाणी ई पाँचलाई कर्मेन्द्रिय भन्छन्।
इरादा=अठोट, सुर, अभिप्राय
इशान=उत्तर पूर्वको कुना
इष्ट=हितको मानीस
इशारा ( इशारा )=सङ्केत

**ई**

ईश् ( ईश )=ईश्वर
ईषत्=अलीकता

**उ**

उचित् ( उचित )=योग्य
उचीत=( उचित )
उच्च=ठुलो अग्लो
उच्चा ( उच्च )=ठुलो, अग्लो
उताउँ=ताउँ
उत्तर् ( उत्तर )=जवाफ
उत्तीर्ण=पारी आउनु
उत्पत्ती ( उत्पत्ति )=जन्म
उत्सव् ( उत्सव )=रमिता
उदर=पेट
उपदेश् ( उपदेश )=अर्ती
उपदेश=हेर्नु उपदेश्

उपनिषद्=वेदको ज्ञानको चर्चा भयेको खण्ड
उपद्रव्( उपद्रव )=विघ्न
उपर् ( उपर )=माथी
उपवास् ( उपवास )=भोकै बस्नु, भोकै रह्ने व्रत
उपाई ( उपाय )=युक्ति
उपाधि=छल, विघ्न, शरीर तथा स्थानको बन्धनमा परेको देह
उपाधी=( उपाधि ) ऐ०
उपाय=युक्ति
उपासि=न खायेर भोकै व्रत बस्नु
उरू ( उरु )=छाती
उर्दी=हुकुम
उल्का=अचम्मको डर लाग्दो घटना, तारा खस्नु

ऊ

ऊच् ( उच्च )=अग्लो

ॠ

ऋक्ष=भालु
ऋक्षाधिप=भालुका राजा, जाम्बवान्
ऋतुदान=गर्भाधान
ऋषि=मुनि
ऋषिगण् ( ऋषिगण )=मुनिहरुको समुदाय
ऋषी ( ऋषि )=मुनि
ऋषीगण् ( ऋषिगण )=मुनिहरुको समुदाय
ऋषीश्वर् ( ऋषीश्वर )=ठुला ऋषि

ए

एरा=यौटा
एकादशी=प्रत्येक पक्षको एघारौं दिन जो पवित्र मानिन्छ
एकोत्तर ( शत )=एक सये एक
एकान्त=निर्जन, एकलास
एकाग्र=एक योकमा मन लाउनु

ऐ

ऐक्य=एकता
ऐरावत् ( ऐरावत )=इन्द्रको हात्ती
ऐश्वर्य=सुख

ओ

ओङ्कार्=( ओङ्कार )=ओँ
ओर=तिर
ओरि=पक्षगर्ने, मित्र

औ

औरे ( और ) अरु
औदास्य=उदासीनता
औषध्=ओखती
औसर=मौका

क

कउन् ( कौन )=कुन, को
कचा=निर्लेलियो, छिटै नाश हुने, न जान्ने
कच्छप=ठोटरी
कछाड=लगौटी
कछु ( कुछ )=केही
कछू ( कुछ )=केही पनि
कटाक्ष=हेराइ, आँखाको सान
कटा‍ै=हेर्नु कटाक्ष
कटि=कम्मर
कठिन् ( कठिन )=गाह्रो
कठोर् ( कठोर )=गाह्रा
कठपुतली=काठको पुतली
कण्टक=काँडा
कदम् ( कदम )=पाइलो
कदापि=कहिल्यै पनि
कनक ( कनक )=सुन
कन्दर्प=काम, पुरुष या स्त्रीको परस्परको आकर्षण

कन्या=बिहे न भयेकी छोरी वा केटी
कपटी=मनमा पाप भयेको मान्छे
कबै ( कभी ) कहिले
कमी=अभाव
कम्ति ( कमती )=थोरै, घटी
कम्प=काम्नु
कर=हात
करुणा=दया
करुणानिधान् ( करुणानिधान )=दयाका खानी
कर्ता=काम गर्ने
कर्म=काम
कर्मवश=न बेहोरी न हुने भाग्यका अधीन
कलश ( कलश )=गाग्रो
कला=अंश, चन्द्रमाका घट्नु बढ्नुको १६ भाग
कल ( कलि )=कलियुग
कल्प=एक हजार युग जो ब्रह्माको एक दिन हुन्छ
कल्पना=चिताउनु
कल्पान्त=कल्प भरीको
कल्याण् ( कल्याण )=भलो
कल्याण=देनु कल्याण्
कवच् ( कवच )=शरीरको रक्षा गर्ने लड़ाईंमा लाउने वस्त्र
कश्यपपुत्र=कश्यप ऋषिका छोरा, दिति तथा अदिति नामका आफ्ना स्त्री बाट इनले क्रमशः दैत्य तथा आदित्य वा देवताहरुलाई जन्म दिये
कसी=काँधी
कस्बी=वेश्या
कहन्या ( कहना )=भन्नु
कहिन् ( कहना )=भनिन्
कहु ( कहो )=भन
कहुँला=भनुला
कह्या=भने
काञ्चन=सुन
काम् ( काम )=इन्द्रियको सुख खोज्ने इच्छा; चार पुरुषार्थ अर्थात् धर्म, अर्थ, काम, मोक्ष मध्ये यौटा; कामदेव जो प्रेमका देवता हुन् औ साह्रै सुन्दर मानियेका छन्
कामधेनु=मागेको कुरो दिने स्वर्गकी गाई
कामरु=काम्रो
कामरुपि ( कामरूपी )=इच्छा बमोजिम रूप लियेको
कामादि=इच्छा इत्यादि, वासनाहरु
कालाग्नि=मृत्युरूपी आगो
कालान्तर् ( कालान्तर )=समय बिते पछी
किरीट=मुकुट
कीर्तन=भजन गर्नु, गुणको बखान गर्नु
कीर्ती ( कीर्ति )=यश
कुच् ( कूच )=प्रस्थान
कुचाल्=न राम्रो चाला
कुटि=झुप्रो
कुटुम्ब=परिवार
कुण्ड=सानो तलाउ
कुण्डल् ( कुण्डल )=कानको लोतीमा झुन्ड्याउने गहना
कुतर्क=न राम्रो विचार
कुचा=उफ्रे
कुद्यौ=उफ्र्यौ
कुप ( कूप )=इनार, कुवा
कुबुद्धि=न राम्रो बुद्धि
कुमति=न राम्रो बुद्धि भयेको
कुम्भिपाक् (कुम्भीपाक)=यौटा नरक को नाम

कुशल् ( कुशल )=सचै, भलो
कुशल=हेर्नु कुशल्
कुशासन=कुशको यस्ने चकटी
कुदि ( कुदना )=उफ्री
कूप=हेर्नु कुप
कूर्म=ठोटरी
कूलै ( कुल )=वंश
कूबेर=धनको देवता रावणका दाज्यु
कृतघ्न=नैगुनी
कृतार्थ ( कृतार्थ )=चितायेको कुरा पुग्नु
कृपा=दया
कृपादृष्टि=दयाको नजर
केत् ( केतु )=निशान, झंडा
केयुर ( केयूर )=बाजु
केश् ( केश )=कपाल
केसर् ( केसर )=फुलको रस
को जनी=को जानोस्, कुन्नी
कोटि=एक करोड
कोटी=हेर्नु कोटि
कोमल् ( कोमल )=नरम
कोलाहल् ( कोलाहल )=कोकोहोलो
कोष् ( कोष )=ढुकुटी
कौनै (कौन)=कुनै
कौशल्यासुत=कौशल्याका छोरा
कौस्तुभ् ( कौस्तुभ )=विष्णुले छातीमा
लायेको मणि
क्या=के
क्यान=किन
क्रम=यौटा पछी अर्को राख्ने विधि
क्रीया ( क्रिया )=काम, मरेका
मान्छेको काम
क्रूर=दया न भयेको, निर्दयी
क्रोधागार=रिसायेका वेलामा बस्ने कोठा
क्रोधै ( क्रोध )=रीस
क्लेश=दु:ख
क्षण=छिन्
क्षत्रि ( क्षत्रिय )=छेत्री, ब्राह्मण, क्षत्रिय,
वैश्य तथा शूद्र नामक चार
जात मध्ये दोस्रो
क्षमापन्=माफ गर्ने गुण
क्षय=नाश
क्षार=नुनिलो
क्षार समुद्र=नुनिलो पानीको सागर
क्षीर=दुद
क्षेम् ( क्षेम )=भलो, कुशलक्षेम, भला
कुसारी
क्षोद् ( क्षोद )=खलमा हालेर कुट्नु,
बुझेर विद्या पढ्नु
क्षौर् ( क्षौर )=खौरनु

ख

खजना ( खजाना )=युद्धमा चाहिने
सामग्री
खजित् ( खचित )=बाकलो, टम्म, भरी
खजित=हेर्नु खजित्
खडा=उभियेको, ठाडो
खडि ( खडी )=उभियेको
खडे ( खडा )=उपस्थित
खड्ग=तरवार
खतम् ( खतम )=छिन्नु, सिद्ध्याउनु
खबर् ( खबर )=समाचार
खराबी=न राम्रो
खाग् ( खाक )=खरानी
खातिर=निम्ती
खातिर् ( खातिर )=हेर्नु खातिर
खातीर ( खातिर )=हेर्नु खातिर
खाली=केवल
खिलत् ( खिल्लत )=मान, सिरपाउ,
खुन् ( खून )=चोट, हत्या
खुनी ( खूनी )=ज्यान मारा

खुप् ( खूब )=धेरै
खुलस्ता=खुलासा
खुसालु=खुशी
खुस्कि=फुत्की
खूला ( खुला )=फुका
खेद् ( खेद )=शोक, दु ख
खैचेर=तानेर
खोजूखबर् ( खोजखबर )=खोजी
ख्वामित् ( ख्वानिन्द )=मालीक

ग

गती ( गति )=चाल, बाटो
गदा=बोझो लठ्ठुरो माथी ठूलो डल्लो भयेको हथियार
गणीत ( गणित )= अङ्कशास्त्र
गन्धर्व=देवलोकको गवैय्या, स्वर्गको नाचगान गर्ने जाति
गभिर ( गम्भीर )=थाकलो, गहिरो
गभीर=हेर्नु गभिर
गम्=मौका, विचार
गमन् ( गमन )=हिंड्नु
गरिब ( गरीब )=बोझो, दरिद्र
गर्भिणी=दुइ जिउ भयेकी स्त्री, पेट बोकेकी स्वास्नी मान्छे
गर्व=सेखी
गादि=सिंहासन
गादी=हेर्नु गादि
गान् ( गान )=गीत
गान्धार=सात सुर मध्ये तेसरो 'गा' बाट उठेको सुर
गायत्रि=( गायत्री ) सूर्यका उपासनाको मन्त्र जसलाइ बाहुन छेत्रीहरु बर्तोन गदा सिक्छन् अनी सधै बिहान बेलुका जप्छन्
गिराइ=पसाली
गिराया=पसाले
गिरि=पहाड
गिऱ्या=पसे
गिलास्=पसलाम्, लोट्लाम्
गुठिल्=गुसी कुरो
गुद=पायु
गुप्त=न जानियेको, लुकायेको
गुप्ति=न जानियेको
गुफा=ओडार
गुरुदक्षिणा=चेलाले गुरुलाइ विद्या पढाये बापत दिनु पर्ने भेटी
गुरो=हे गुरु
गुल् ( गुल )=हल्ला
गुल्जार् ( गुलजार ) शोभायमान
गुह्य=गुप्त, गुसी कुरो
गुह्ये=हेर्नु गुह्य
गूफा ( गुफा )=हेर्नु गुफा
गृद्ध=गिद्ध
गाप्य=गुप्ती
गोमय=गोबर
ग्रह=हिंड्ने नक्षत्र, सूर्य, चन्द्र, मङ्गल, बुध, बृहस्पति, शुक्र, शनि, राहु तथा केतु नौ ग्रह हुन्, दशा
ग्रीवा=घाँटी
ग्लानि=दु ख
ग्राहादि=ग्राहा इत्यादि

घ

घट=शरीर, हृदय
घनश्याम ( घनश्याम )=विष्णु जो बादल जस्ता कालाछन्
घोर् ( घोर )=डर लाग्यो

**च**

चकोर=एक प्रकारको शिकार गर्ने पक्षी
चक्रावतार्=( चक्रावतार )=विष्णुको चक्र मानीस भै जन्मेका लक्ष्मण
चक्रे ( चक्र )=पाँगरो
चञ्चल=चकचके, अस्थिर
चण्डि ( चण्डी )=रिसायेकी स्वास्नी मान्छे
चतुर्भुज=चार हात भयेका विष्णु
चरण=पाउ
चरण कमल=कमलरुपी फुलरूपी पाउ
चरणधुलि ( चरण धूलि )=पाउको धुलो
चरणारविन्द=कमलरूपी पाउ
चराचर् ( चराचर )=हिंड्ने तथा न हिंड्ने सृष्टि
चरित्र=कसैले गरेका कुराको वर्णन, काम
चर्चा=कुरा
चहुँ=चार
चामर=चौरी गाइका पुछरमा भयेको रड को गुथुल्को जो पंखा झैं उपयोग गरिन्छ औ जो राजचिह्न मानिये को छ, चमर
चाल=प्रकार
चिता=होरा
चित्र विचित्र=टाटे पाँगरे अनेक रंगको
चिदात्म=ज्ञानपूर्ण आत्मा, इश्वर
चिन्तन् ( चिन्तन )=ध्यान, विचार
चिन्मात्र=ज्ञान
चिर=सधैं, धेरै
चिरञ्जिवि ( चिरञ्जीवी)=सधैं बाँची रहने हेर्नु चिरञ्जिवि
चिरञ्जीवी–( चिरञ्जिवि ) ऐ०
चिरायू ( चिरायु )=दीर्घायु
चुगली=लायेको कुरा
चुप्=केही न बोल्नु
चुप्चाप=चापचुप्प
चुम्बक=फलाम तान्ने धातु
चुम्बन् ( चुम्बन )=म्वाइ खानु
चूडामणि=कपालको जुरोमा लाउने रत्न
चूर्ण=धुलो
चेत=ज्ञान
चेष्टा=उद्योग, चाला
चैतन्य=ज्ञान
चौकि=रखवारी गरी बसेका मान्छे
चौकिदारी=रखवारी
चौकी=हेर्नु चौकि

**छ**

छटा=ढाँचा
छत्र=छाता, छाता राजचिह्न मानियेको छ
छत्रे=हेर्नु छत्र
छाइ=छाया
छिटी=छरी
छिद्र=प्वाल
छिन्न भिन्न=फोर्नु औ छुन्ट्याउनु
छुटि=छुटियेर, मुक्त भयेर
छुट्टि ( छुट्टी ) मुक्ति
छुट्ला=भेटियेला
छूटोस्=हराओस्
छोड्या ( छोडा )=हाने

**ज**

जउन् ( जौन )=जो, जुन
जगत्=संसार
जगदम्बिका=संसारकी आमा
जगन्नाथ् ( जगन्नाथ )=संसारका मालीक
जगत्पते=हे पृथ्वीका मालीक
जगा=ठाउँ

जग्गा=ठाउँ
जघन् ( जघन )=नितम्ब
जङ्गम=हिँड्ने, चरा, पशु, मान्छे,
जङ्घि=पल्टनियाँ
जङ्घा=तिघ्रा, घुडा देखी माथीको भाग
जटाजूट् ( जटाजूट )=लट्टा पारी बाँधेको
कपाल
जटित=जडेको
जड् ( जड )=प्राण न भयेको, अचेतन
जन=मान्छे, प्रजा
जननि ( जननी )=आमा
जनायो=देखायो
जन्तु ( जन्तु )=पशु
जबर् ( जबर )=बलियो
जमिन् ( जमीन )=भुँई
जमिनै=हेर्नु जमिन्
जय=जीत हुँदा गरिने नाद
जल=पानी, चोखो पानी
जलदान् ( जलदान )=मरेका
मानीसलाई दिने तर्पण
जलधि=समुद्र
जलशायि ( जलशायी )=पानीमा सुत्ने
विष्णु
जल्दि ( जल्दी )=चाँडो
जल्दी=हेर्नु जल्दि
जवाफ्=उत्तर
जवाहेर् ( जवाहर )=रत्न
जहान्=परिवार
जाग्रत्=जागा अवस्था
जाग्रन ( जगरण )=राती हरिकीर्तन गरेर
चिउँसो बस्नु
जातकर्म=मानीस जन्म देखी मरे सम्म
गर्न पर्ने दस धार्मिक कर्म मध्ये
... ... गरिने क्रिया

जानकी=जनककी छोरी सीता
जानु=घुँडा
जिद् ( जिद )=हठ
जिय=शरीर
जिह्वा=जिब्रो
जीय=हेर्नु जिय
जीवन्मुक्तः ( जीवनमुक्त )=जीउँदै
मुक्ति प्राप्त गर्ने मान्छे
जीवात्म=आत्मा
जीवै ( जीव )=आत्मा
जुदा ( जुदा )= छुट्टियेको, अलग्ग
जोर् ( जोर )=बल, दुई थोक
जौन=जुन
ज्ञाति ( ज्ञाती )=नातेदार
ज्ञान् ( ज्ञान )=परमात्मा सम्बन्धी कुरा
जान्नु
ज्ञानि ( ज्ञानी )=जान्ने मानीस
ज्ञानोत्तर् ( ज्ञानोत्तर )=ज्ञानले युक्त
ज्यादि ( ज्यादा )=धेरै
ज्यान्=प्राण
ज्यान=हेर्नु ज्यान्
ज्युँकातिउँ=बराबरको तस्तै
ज्योतिषि ( ज्योतिषी )=ग्रहका गणना
द्वारा भविष्य भन्ने मान्छे
ज्योतिस्वरूप् ( ज्योतिस्वरूप )=आगोको
ज्वाला जस्तो

झ

झट्=चाँडै, छिटै
झटपट् ( झटपट )=छिटै
झपट=झटनु
झलक्=झ्वाट्ट देख्नु, दर्शन
झुठ ( झुठो )=झुटो, नक्कली

ट

टङ्कार् ( टङ्कार )=धनुको बाँदो तान्दा
भयेको स्वर

टापू=द्वीप, चारै तिर पानीले घेरेको ठाउँ
टुक्=टुका
टूक=ऐ

ठ

ठंडा=शीतल
ठाकुर्जि ( ठाकुरजी )=ईश्वर
ठिक् ( ठीक )=दुरुस्त
ठिगान्लगाउनु (ठेगाना लगाना)=मिति पुऱ्याउनु

ड

डर्दछन्=डराउँछन्

ढ

ढिल्=ढिलो
ढुँढ्या ( ढुँढना )=खोजे
ढुडि=खोजी
ढुँढी=ऐ०
ढुँढ्य्या=खोज्य्या
ढुँढयाँ=खोजे

त

तक् ( तक )=सम्म
तकीया=सिहानी
तख्त् ( तख्त )=सिंहासन
तखत=ऐ. ऐ.
तवि=तैती
तत्क्षण् ( तत्क्षण )=उही बेला
तत्पर् ( तत्पर )=लागेको
तत्त्व=साचो कुरा
तत्त्वमसी (तत् त्वम् असि)=यो (ईश्वर) तँ होस् अर्थात् आत्मा परमात्मा हो
तथापि=तै पनी
तन् ( तन )=शरीर
तन्त्र=मन्त्र मुद्रा, मण्डल इत्यादि प्रधान भएको धार्मिक ग्रन्थ
तप् ( तप )=तपस्या
तपस्या=धर्म प्राप्त गर्न गरियेको गाह्रारो व्रत
तपस्वि ( तपस्वी )=तपस्या गर्ने मानीस
तम=अँध्यारो, सत्त्व, रज, तम नामक तीन गुण मध्ये एक जो काम, क्रोध, हिंसा इत्यादि तिर प्रवृत्त गराउँछ
तमाशा=रमिता ( न राम्रो अर्थमा )
तमास्=( तमाशा )
तयारी=जे परी आये पनी थेहोर्न सक्ने
तरफ् ( तरफ )=तिर
तरह=प्रकार
तरास् ( त्रास )=डर
तर्फ=तिर
तल=मुनी, भुँई
तलक् ( तलक )=सम्म
तस्मात्=यो कारण बाट
तात्पर्य=अर्थ
ताना=मनको लहड या तरङ्ग
ताप् ( ताप )=दुःख
ताल् ( ताल )=नाच्ने मान्छे, मदेसमा हुने एक प्रकारको रुख
ताले ( ताल )=ऐ०
तिलक् ( तिलक )=निधारमा लाउने टीका, राज्याभिषेक गर्दा लाउने टीका
तिलक=हेर्नु तिलक्
तिलाञ्जलि=पितृलाई तिल भएको पानी हाली चढायेको अञ्जुली भरी जल
तीर्थ=पवित्र ठाउँ
तुच्छ=सानु, छोटो, अधम
तुरन्तै ( तुरन्त )=उसनी गेर

तुलसिदल् ( तुलसीदल )=तुलसीको मञ्जरी तुलापुरुषदान्
(तुलापुरुष दान )=रत्न, सुन, चाँदी, अन्न इत्यादि आफु जती तौलेर गरेको दान
तुल्य=समान
तृण ( तृण )=घासको त्यानरो
तृष्णा=तिर्सा, इच्छा
तेजस्वि ( तेजस्वी )=तेजिलो
तैत्तिरीय=कृष्ण यजुर्वेदको यौटा शाखा
त्यजन्=त्याग गर्न
त्याग् ( त्याग )=छाड्नु
त्रिगुण=सत्त्व, रजस तथा तम नामक तीन गुण
त्रिभुवनपति=स्वर्ग, मर्त्य, पाताल नामक तीन लोकका मालीक
त्रिशूल् ( त्रिशूल )=टाउकोमा तीन चिरा परेको शिवको लामो हथियार
त्रेता=सत्य, त्रेता, द्वापर, कलि नामक चार युग मध्ये दोस्रो
त्रैलोक्य=तीन लोक, ती स्वर्ग, मर्त्य तथा पाताल हुन्
त्रैलोक्यपते=हे तीन लोकका प्रभु
त्व वर्धस्व=तिमी बढे

थ

थलिया=सानो थाल
थोडा=अलीकता

द

दक्षिण् ( दक्षिण )=दाहिने, पूर्व पट्टी फर्कँदा दाहिने हात तिरपर्ने दिशा, लोग्ने मान्छेको दाहिने तथा स्वास्नी मान्छेको देब्रे अङ्ग फर्फरायेको राम्रो हो भन्ने विश्वास छ।

दगा=दगी
दण्डक=उत्तर तथा दक्षिण भारतका सीमामा स्थित नर्मदाका किनार=मा भयेको वन
दण्डवत्=घोप्टो लम्पसार परेर लहुरो जस्तो तेर्सियेर ढोग दिनु
दबिया=हरायें
दयानिधान् ( दयानिधान )=करुणा का खानी
दयानिधान=हेर्नु दयानिधान्
दर्जा=मान
दर्द=दुःख, पीडा
दहन् ( दहन )=सल्काउनु
दाखिल् ( दाखिल )=उपस्थित, हाजिर
दाखिल ऐ०
दागा ( दगा )=दगी, रीस
दाता=दिने मान्छे
दानवादि=दनुका सन्तान राक्षसहरु
दार ( दारा )=स्वास्नी
दारिद्र्य=गरिबी
दारुण=डर लाग्यो
दावा=आफ्नो हक कायम गर्न खोज्नु
दाशरथि ( दाशरथी )=दशरथको छोरा
दास=कमारो, चाकर
दासी=कमारी, चाकर्नी
दाहा=पोल्नु
दिक्=दिशा
दिक्पाल् ( दिग्पाल )=दिशाहरुको रक्षा गर्ने देवता जसको सङ्ख्या दस छ
दिग्पाल् ( दिग्पाल )=ऐ०
दिल् ( दिल )=हृदय
दिव्य=स्वर्गीय

दिशा=तिर, पूर्व, पश्चिम, दक्षिण, उत्तर चार दिशा प्रसिद्धछन्। इनका कोण नैर्ऋत्य, इशान, वायव्य तथा आग्नेय हुन्, वहा पछी उर्ध्व ( माथी ) अध ( तल ) दुइ अरु भये। यो रीतले दस दिशा भन्ने चलन पनी छ।
दिशि=दिशामा
दीन् ( दीन )=दु खी, असहाय
दीर्घ=लामो
दु खसागर=दु खको समुद्र
दुत् ( दूत )=सवाद ल्याउने तथा लाने मानीस
दुते ( दूत ) ऐ०
दुनियाँ=संसार, मानीस
दुर् ( दूर )=पर, टाढा
दुराचार् ( दुराचार )=न राम्रो चलन
दुरुस्त=ठीक
दुर्मती ( दुमति )=न राम्रो बुद्धि भयेको
दुर्यश=अपकीर्ति
दुर्लभ् ( दुर्लभ )=सजिलै न पाइने
दुष्ट=खल
दुष्टात्म ( दुष्टात्मा )=न जाती मान्छे
दुष्टे=हे न राम्रो मति भयेकी स्त्री
दृष्टान्त=उदाहरण
देवगण=देवताको समुदाय
देवपीतृऋषिगण् ( देवपितृऋषिगण )= देवता, मरेका माता पीता तथा मुनिहरुको समुदाय
देवपुत्रि ( देवपुत्री )=देवताकी छोरी
देशि ( देशी )—अर्को देशको मानीस वा वस्तु
देह=शरीर
देहधारी—शरीर लियेको
दैव=ईश्वर, भाग्य
दोष् ( दोष )=अपराध
दौल्त् ( दौल्त )=धन
दौलत=ऐ०
द्रव्य=धन, पदार्थ
द्रोह=विरोध
द्वार् ( द्वार )=ढोका
द्वार ऐ०
द्वारा=बाट
द्विज=दुइ चोटी जन्मने, बाहुन, छेत्री तथा वैश्य लाइ द्विज भन्छन् किन भने एक चोटी ता इनको आमाका गर्भ बाट जन्म हुन्छ औ दोसरो जन्म उपनयन संस्कार भये पछी हुन्छ।
द्वीप् ( द्वीप )=टापु, चारै तिर पानीले घेरेका भूमि, पृथ्वीराइ
सात ठुला भाग=जम्बुद्वीप ( भारतवर्ष ), लक्षद्वीप, शाल्मलिद्वीप, कुश द्वीप, क्रौञ्चद्वीप, शाकद्वीप, पुष्करद्वीप
द्वेष् ( द्वेष )=घृणा, रीस

## ध

धनी=मालीक
धनुबाण=धनु तथा काँड
धनुष् ( धनु )=धनु
धरि ( धर )=सम्म, लाइ
धरी धरुन्=राखुन्
धर्ति ( धरती )=पृथ्वी
धर्मस्थापन=धर्मको रक्षा
धर्मात्मा=धर्म गर्ने मान्छे
धर्माधर्म=धर्म तथा पाप
धन्या—रास, समाते

धसि=गाडेर
ध्यान् ( ध्यान )=विचार
ध्वज ( ध्वजा )=निशान, झण्डा
ध्वनी ( ध्वनि )=स्वर
ध्वस्त=नाश
धाम् ( धाम )=पवित्र स्थान, स्वर्ग
धारी=धारण गरेर
धिग्=धिक्कार
धिक्कार् ( धिक्कार )=छी भन्नु, निन्दा बुझाउने पद
धीरा ( धीर )=धैर्य धारण गर्ने मान्छे
धेनूदान् ( धेनुदान )=गाई दान

न

नख् ( नख )=नङ
नखै ( नख )=ऐ०
नगरा=दयाङ दयाङ गरी ठटाउदाँ बज्ने बाजा
नगरि ( नगरी )=शहर
नजर् ( नजर )=दृष्टि, आँखा
नतर् ( नत्र )=होइन भने
नदि ( नदी )=ठूलो खोलो
नन्दी ( नान्दी )=महादेव चढ्ने साँढे
नमस्कार् ( नमस्कार )=प्रणाम, मुख, छाती वा निधार अधिलतिर आफ्ना दुई हात जोरी अकाँल्याई ढोगदिनु
नर=लोग्ने मान्छे
नररूपधारी=लोग्ने मान्छेको रूप लियेका
नरै ( नर )=हेर्नु नर
नष्ट=बिग्रेको मानीस, नाश
नाथ् ( नाथ )=मालीक
नाना=थरी थरी
नाभि=नाइटो
नाम=नाउँ
नामोच्चारण=नाम जप्नु
नारि ( नारी )=स्वास्नी मान्छे
नाश=नाक
नास्तिक् ( नास्तिक )=ईश्वर छन् भन्ने कुरो तथा वेदलाई अपौरुषेय न मान्ने व्यक्ति
नाहीत=नत्र
निच् ( नीच )=छोटो मान्छे
नित्य=सधैं
नित्यानन्द=सधैं आनन्दले युक्त ईश्वर
नित्यै ( नित्य ) हेर्नु नित्य
निधान् ( निधान )=खानी
निन्दा=बदखोई
निपुण् ( निपुण )=सिपालु
निमित्त=निम्ती, लागी
नियम् ( नियम )=ऐन, विधि
निरन्तर् ( निरन्तर )=सधैं
निरोध् ( निरोध )=थाम्नु
निर्गुण् ( निर्गुण )=इन्द्रिय द्वारा न जानिने वस्तु
निर्भय=अभय, डर देखी रहित गराउनु
निर्मल् ( निर्मल )=सफा, पापरहित स्वच्छ
निशाचर=राती राती हिंड्ने राक्षस
निश्चै ( निश्चय )=अवश्य
निष्फल् ( निष्फल )=अफल, व्यर्थ
निष्फलै ( निष्फल )
निहारि ( निहारी )=हेरी
नीयाँ=आफू निर्दोष प्रमाणित गर्न गरिये= को पण
नुर् ( नूर )=तेज, कान्ति
नृप=राजा, मान्छेको पालन गर्ने
नृसिंह ( नृसिंह )=मुख सिंहको तथा शरीर मानीसको भयेको ईश्वरको अवतार

नौका=नाउ, डुंगा

**प**

पक्का=थलियो
पक्कि=थलियो, सकली
पक्‌डन= समातुन्
पक्‌डुन=समातुन्
पक्‌ऱ्या=समाते
पञ्च=पाँच
पछि ( पछी )=चरा
पण्डित=ज्ञानी
पति=लोग्ने, मालीक
पतिव्रता=लोग्नेको सत्यमा बस्ने स्वास्नी मान्छे
पती ( पति )=हेर्नु पति
पत्थर् ( पत्थर )=ढुंगा
पताके ( पताका )=झंडा
पतित=खसेको
पत्नीदान=स्वास्नीको दान
पत्र=पात
पदवि ( पदवी )=दर्जा
परमधाम=अर्को लोक, स्वर्ग
परमधाम् ( परमधाम ) ऐ०
परस्त्रि ( परस्त्री )=अर्काको स्वास्नी
परस्पर् ( परस्पर )=आपस्त
पराक्रम् ( पराक्रम )=बहादुरी
परमात्म=परमात्मा
परात्मा=ईश्वर
परिक्रमा=मान गरेर कसैको चारै तिर आफ्नो दाहिने तिर पारेर घुम्नु
परिपूर्ण=भरिपूर, सबै थोक भयेको
परिवार=जाहान
पर्व=चाड
पर्वत=पहाड
पलङ् ( पलंग )=खाट
पहरा=पाले
पहिरेर=लायेर
पाउ=चरण, मान गरेर भन्दा गोडालाई भनिन्छ
पाठ् ( पाठ )=युक्ति, पढनु
पाताल् ( पाताल )=पृथ्वी मुनी भयेको लोक
पादस्पर्श=खुट्टाले छुनु
पान् (पान)=पानी वा तरल पदार्थ खानु
पापात्मा=पापी
पापी=अधर्म गर्ने व्यक्ति
पायस् ( पायस )=खीर
पालन् ( पालन )=रक्षा
पाल्ना ( पालन )=रक्षा
पाश् ( पाश )=पासो, बन्धन
पास=नजीक
पास् ( पास )=ऐ०
पिण्डदाने ( पिण्डदान )=पितृलाई भात, जौको पिठो आदि कुरा डल्लो पारी दियेको दान
पिता=बाबा
पिताम्बर् ( पीताम्बर )=पहेंलो रेशमी धोती
पितृतुल्य=बाबु समान
पितृ=पिता, मरेका नातागोता
पितृ ( पितृ )=ऐ०
पियास् ( प्यास )=तिर्खा
पीत=पहेंलो
पीताम्बर् ( पीताम्बर )=पहेंलो रेशमी धोती
पीतृ ( पितृ )=हेर्नु पितृ
पुकारा=प्रार्थना
पुत्र=छोरो, पुत् नामक नरक बाट पितालाई पिण्ड दिने तारने हुनाले पुत्र भनियेको हो

पुरवासि ( पुरवासी )=नगरका निवासी
पुरश्चरण् ( पुरश्चरण )=पटक पटक गरियेको धार्मिक कृत्य
पुरा=सबै थोक जान्ने, पूर्ण
पुराण् ( पुराण )=पुराना धर्मग्रन्थ, पुराण १८ छन् तथा तिनका नाम ई हुन् ब्रह्म, पद्म, विष्णु, शिव, भागवत, नारद, मार्कण्डेय, अग्नि, भविष्य, ब्रह्मवैवर्त, लिङ्ग, वाराह, स्कन्द, वामन, कूर्म, मत्स्य, गरुड, ब्रह्माण्ड
पुरि ( पुरी )=शहर, नगर
पुष्ट=मोटायेको
पुष्प=फुल
पुष्पक् ( पुष्पक )=विमानको नाम
पुष्पवृष्टि=फुलको वर्षा
पुष्पवृष्टी ( पुष्पवृष्टि )=हेर्नु पुष्पवृष्टि
पुस्तक=किताब
पूज्य=मान्य
पूजन=पूजा
पूरी ( पुरी )=हेर्नु पुरि
पूर्णानन्द=महान् सुख
पृथक्=बेग्लै
पृथ्वितल् ( पृथ्वीतल )=पृथ्वी
पृथिवितल ( पृथिवीतल )=पृथ्वी, भुँइ
पृथ्वीतले ( पृथ्वीतल )=हेर्नु पृथिवितल
पैदल् ( पैदल )=खुट्टाले हिड्ने
पौंची ( पहुँची )=धुगेर
पौरवासी=नगरमा बस्ने मानीस
प्यास=तिर्खा
प्रकार् ( प्रकार )=भाँती
प्रचण्ड=भयङ्कर
प्रजा=रैती
प्रणाम् ( प्रणाम )=नमस्कार
प्रत्यक्ष=आफ्ना आँखाले देख्नु
प्रश्न=सोधनी
प्रताप् ( प्रताप )=पराक्रम
प्रतिज्ञा=वाचा, कबुल
प्रदक्षिण् ( प्रदक्षिणा )=दाहिने तिर बाट मान गरेर धुम्नु
प्रपञ्च=व्यवहार
प्रभू=हे मालीक
प्रवाहा ( प्रवाह )=बगाइ
प्रवेश् ( प्रवेश )=पस्नु
प्रसन्न=खुशी
प्रसाद् ( प्रसाद )=कृपा
प्रस्थान् ( प्रस्थान )=यात्रा
प्राणदाता=जीवन दान दिने व्यक्ति
प्राणान्त=प्राण जानु
प्राणायाम् ( प्राणायाम )=श्वासको निरोध
प्राणी=जिउदो जीव, मान्छे
प्रात काल=बिहान
प्रारब्ध=भाग्य, पूर्व जन्मको सञ्चित कर्म
प्रारब्धे ( प्रारब्ध )=ऐ०
प्रिये=हे प्यारी
प्रीत् ( प्रीति )=प्रेम
प्रीती ( प्रीति )=माया
प्रेम=माया
प्रोहित् ( पुरोहित )=पुरेत

फ

फक्त् ( फक्त )=केवल
फजित् ( फजीहत् )=सास्ती
फजिति ( फजीहत )=दुःख
फजीती ( फजीहत )=हेर्नु फजिति
फन्दा=पासो
फरक् ( फर्क )=भेद
फल् ( फल )=परिणाम
फलाहारी=फल मात्र खाने मान्छे

फिंधा=खल्ती
फिराउ=फर्काउ
फिराद्=उजुर
फिरि ( फिर )=फेरी
फिर्या=डुल्ये
फिर्दा=फर्कंदा
फिर्ना ( फिरना )=फर्कनु
फिर्नु ( फिरना )=फर्कनु
फिर्यां ( फिरना )=फर्कने
फिर्या=फर्के
फुर्यो=फर्फरायो
फुर्सत=अवकाश
फेंक=फ्याँकन
फक्या=फ्याँके
फौज् ( फौज )=पल्टन

ब

बक्वात् ( बकवाद )=वाहियात कुरा
बक्सनु ( बख्श )=दिनु, मान्यलाई प्रयोग गरिने शब्द
बक्सिस ( बख्शिश )=इनाम
बखत् ( वक्त )=समय
बखत ( वक्त )=ऐ०
बखान्=वर्णन
बखान=वर्णन
बचाउ ( बचाओ )=रक्षा गर
बच्चा=बालक
बच्यौ=बाच्यौ
बढ्ति=वृद्धि
बताइ=भनी
बताउँ=भनु
बदर=स्वीकार न गरियेको
बद=थामिनु
बदर् ( बदर )=चाँदर
बन्दिजन=भाट, चारण
बन्दैन=सफल हुँदैन
बन्ध=बन्धन, पासो
बन्धन् ( बन्धन )=बाँधिनु
बन्धु=नाता, गोता, साथी
बन्धुत्व=साथी प्रति हुनु पर्ने धर्म
बन्ध्या=बाँझी, थारी, छोराछोरी न पायेकी
बमोजिम् ( बमोजिम )=अनुसार
बरदान=वर दिनु
बर्षाकाल=पानी पर्ने ऋतु
बलजकृत=बलेसित
बलवान्=बलियो
बस्तर् ( वस्त्र )=लुगा
बस्ति ( बस्ती )=मान्छे बस्ने ठाउँ
बहुत् ( बहुत )=धेरै
बहुत=धेरै
बाजुबन्ध=बाँहामा लाउने गहना
बात् ( बात )=कुरा
बात्चित् ( बातचीत )=कुरा कहानी
बात्चित् ( बातचीत )=ऐ०
बाधा=विघ्न, अडको, तकलीफ
बालक्काल् ( बालककाल )=केटाकेटी को अवस्था
बाल्लीला=साना नानीको क्रीडा
बाला=केटी
बाहुलि=हात, मान गर्दा भनिने शब्द
बाहू ( बाहु )=हात
बाकी=शेष
बिच ( बीच )=माझ
बिजवाफ् ( बेजवाब )=निरुत्तर
बिन ( विना )=बाहेक
बिनु ( बिना )=बाहेक
बिबुझ=मूर्ख
बिल्कुल ( बिलकुल )=जम्मै
बिलास्=ऐश्वर्य
बिहकै ( बेहक )=अन्याय

बीज् ( बीज )=निउ
बुँदे ( बूँद )=थोपा
वृन्द=समूह
वृष्टि=वर्षा
वेरवेरै=फेरीफेरी
वैकुण्ठ=विष्णुको लोक
वैतालिक=भाट, चारण
बोलाक्=बोलेल्या
ब्रह्म=ईश्वर
ब्रह्मघाती=ब्राह्मण लाई मार्ने मान्छे
ब्रह्मपाश् ( ब्रह्मपाश )=ब्रह्माको पासो वा बन्धन
ब्रह्मर्षी ( ब्रह्मर्षि )=ब्राह्मण जातका ऋषि
ब्रह्महत्या=ब्राह्मण मार्ने काम
ब्रह्मस्वै ( ब्रह्मस्व )=ब्राह्मणको धन
ब्रह्मा=सृष्टिकर्ता
ब्रह्माघाति ( ब्रह्मघाती )=बाहुन लाई मार्ने
ब्रह्माण्ड=ब्रह्माको फुल, विश्व
ब्रह्मादी ( ब्रह्मादि )=ब्रह्मा इत्यादि
ब्रह्मास्त्रै ( ब्रह्मास्त्र )=ब्रह्माको तारो न फिराउने हतियार

भ

भक्ति=प्रेम, भक्ति नौ प्रकारका छन् ती यस्तै हुन=श्रवण, कीर्तन, स्मरण, पादसेवन, अर्चन, वन्दन, दास्य, सख्य, आत्मनिवेदन
भक्तिमान्=भक्तिले युक्त
भक्तियोग् ( भक्तियोग )=भक्ति प्रधान भएको साधना
भक्तिहीन् ( भक्तिहीन )=भक्ति न भएको
भगवन्=हे ईश्वर
भगवान्=ईश्वर
भय=डर
भयङ्कर=डर लाग्यो
भर्ता=लोग्ने, पति
भरसक् ( भरसक )=सकेसम्म
भर्सक ( भरसक )=ऐ०
भवसमुद्र=संसाररूपी सागर
भवसागर=संसाररूपी समुद्र
भस=खरानी
भस्मै ( भस्म )=ऐ०
भाइवर्ग=भाईहरुको दल
भाग=अंश
भाग्योदय=प्रारब्ध राम्रो हुनु
भार् ( भार )=भारी
भारि ( भारी )=गह्रुँ, ठुलो
भारी=हैनु भारि
भार्या=स्वास्नी
भाव=विचार
भिक्षु=माग्ने मान्छे
भिड ( भीड )=धुइचो
भिल=वनमा बस्ने मानीस
भुकी=कुकुर हँ कराई
भुत् ( भूत )=तत्त्व
भुमी ( भूमि )=भुँई
भुलाउन=अल्मल्याउन
भुलाऊ=अल्मल्याउ
भुवन=लोक
भुवर्लोक् ( भुवर्लोक )=चौटा लोकको नाम
भूभार् ( भूभार )=पृथ्वीको भारी, पापी मान्छे
भूमी ( भूमि )=भुँई, पृथ्वी
भूलोक=पृथ्वी
भूषण् ( भूषण )=गहना
भूषणादि=गहना इत्यादि
भृङ्गी=महादेवको हजुरिया नोकर
भेद् ( भेद )=गुप्ती कुरो, रहस्य, विभिन्नता

भेदन् ( भेदन )=छेड्नु
भेरी=नगरा जस्तो बाजा, ठुलो नगरा
भेष=स्वरूप
भैय्या=भाई, प्यारो गरेर भन्दा प्रयोग गरिन्छ
भोग् ( भोग )=सुख, खानुलाउनु इत्यादि; पाप वा पुण्यको फल सह्नु
भोग=हेर्नु भोग्
भोगवती=पातालको यौटा नदीको नाम
भोजन् ( भोजन )=खाने कुरो
भ्रम् ( भ्रम )=भ्रान्ति, भान
भ्रष्ट=बिग्रेको, कर्तव्य बाट खसेको

म

मगाई=शिकाई
मग्न=डुबेको
मङ्गल् ( मङ्गल )=शुभ
मजा ( मजा )=मोज
मजबुति ( मजबुती )=बलियो
मजुर=स्वीकार
मणिमयी=रत्नले भरियेकी
मण्डप ( मण्डप )=पूजा वा अरु कुनै काम गर्न बनायेको ठाउँ
मढि ( मढी )=घाटका छेउको सानो कोठा जस्तो बस्ने ठाउँ, कुटी
मढुलि=सानो कुटी
मणी ( मणि )=रत्न
मण्डल=घेरा
मत् ( मत )=सम्मति
मत्त=मातेको
मतलव् ( मतलब )=अभिप्राय
मति=बुद्धि
मतिहिन् ( मतिहीन )=बुद्धि न भयेका
मती ( मति )=हेर्नु मति
मत्लव ( मतलब )=हेर्नु मतलव्
मत्स्य=माछा
मध्य=माझ
मध्याह्न=मध्य दिन
मधूरस् ( मधूरस )=फुलको रस
मन्त्र=शक्तियुक्त वाणी
मन्त्रणा=सल्लाह
मन्त्रिवर्ग=मन्त्रीहरुको समुदाय
मन्त्रीवर्ग=ऐ०
मन्थन=मथनु
मन्दर=यौटा पर्वतको नाउँ
मनसुब् ( मनसुबा )=अभिप्राय, इच्छा
मनसुब् ( मनसुबा )=ऐ०
मनसुव ( मनसुब )=ऐ०
मरण् ( मरण )=मृत्यु
मर्जी=आज्ञा, मान गर्दा प्रयोग गरिन्छ
मर्दन् ( मर्दन )=थलनु, फोर्नु
मर्म=जुन ठाउँमा चोट लागे पछी मृत्यु हुन्छ
मर्याद् ( मर्यादा )=मान, सीमा
मलयाचल्( मलयाचल )=मलय नामक पर्वत
मस्त=घोर
महतारि ( महतारी )=आमा
महर्षी ( महर्षि )=ठुला मुनि
महात्मा=ठुलो सामर्थ्य भयेको मान्छे
महात्म्य=गुणको वर्णन, तारीफ
महाभुतै ( महाभूत )=ठुला तत्व, पृथ्वी, अप्, तेज, वायु, आकाश ई पाँच महाभूत हुन् ।
महिमा=महात्म्य, यश
माइ ( माई )=आमा
मासपिण्ड=मासुको डल्लो
मातर्=हे आमा

मातृ=आमा
मातृवत्=आमा जस्तै
मानी=घमंडी
मानुष ( मनुष्य )=मान्छे
माफिक् ( मुवाफिक् )=अनुसार
माफिक ( माफीक )=हेर्नु माफिक्
माफीक=हेर्नु माफिक्
माया=छल, असत्य कुरो, ईश्वरको सृष्टि गर्ने शक्ति
मार्ग=बाटो
मालिक=स्वामी
मालुम ( मालूम )=थाहा
मालुम् ( मालूम )=ऐ०
मित्र=साथी
मित्रचार् ( मित्राचार )=मितेरी
मित्रपुत्र=साथीको छोरो=अग्निका साथी वायु हुन् औ हनुमान् वायुका छोरा हुन् । यो कारणले हनुमान् अग्निका मित्रपुत्र थिये।
मिल्यानन्=पाइयेनन्
मिल्ला=पाइयेला
मिष्ट=मिठा
मुकाम् ( मुकाम )=वास
मुकुट=सिरपेच
मुक्त=जन्म मरण देखी रहित भयेको
मुक्ती ( मुक्ति )=मोक्ष, मुक्ति चार प्रकारका छन्—सालोक्य ( सारूप्य ), सायुज्य, सामीप्य, कैवल्य
मुख्य=प्रधान
मुण्ड=टाउको, शिर
मुद्गर् ( मुद्गर )=मुङ्ग्रो जस्तो हतियार
मुनि=ऋषि
मुनी ( मुनि )=ऐ०
मुनीश्वर् ( मुनीश्वर )=मुनिहरू मध्ये ठुला
मुनीश्वर=हेर्नु मुनीश्वर्
मुलुक् ( मुल्क )=देश
मुसकिल् ( मुश्कील )=गाह्रारो
मुहाडा ( मोहोडा )=मुख
मुहुँडा ( मोहोडा )=ऐ०
मूढ=अज्ञानी
मूढो ( मूढ )=मूर्ख
मूर्खपना=मूर्खता
मूर्छित=चेतना हरायेको
मूर्ती ( मूर्ति )=प्रतिमा
मुहुर्त ( मुहूर्त )=वेला, ४८ मिनटको समय
मूल् ( मूल )=जरो
मृग=हरिण
मृगरूपधारी=हरिणको रूप लियेको
मृत्यू ( मृत्यु )=मरण
मृदङ्ग=मादल
मृदङ्गा ( मृदङ्ग )=हेर्नु मृदङ्ग
मेघ ( मेघ )=बादल
मेरू ( मेरु )=सुमद्रभीत्र भयेको पुराणहरूमा कल्पना गरियेको पर्वत, सुमेरु
मैत्री=मित्रता
मैदान् ( मैदान )=चउर
मैनाक् ( मैनाक )=पुराणहरूमा वर्णन गरियेको मोटा पर्वतको नाम
मोह=माया, अज्ञान, भ्रान्ति
मोहनमूर्ति=मनलाई लोभ्याउने रूप

य

यक् ( एक )=मोटा

यक्षी=धनका देवता कुबेरका परिचर्यामा रहने यक्ष जातकी स्त्री,
यज्ञस्थान् ( यज्ञस्थान )=यज्ञ गर्ने ठाउँ
यत्न=चेष्टा
यमराज=मृत्यु देवता
यमादि=निरोध वा संयम इत्यादि, विविध लेखकहरूले दश, आठ तथा पाँच प्रकारका यम मानेका छन् । अहिंसा, सत्य, ब्रह्मचर्य, पाप हीनता, अस्तेय ई पाँच यम हुन् । ब्रह्मचर्य, दया, क्षान्ति, दान, सत्य, पापहीनता, अहिंसा, अस्तेय, माधुर्य, दम ई दस यम हुन् ।
यमै ( यम )=मृत्यु देवता
यश् ( यश )=कीर्ति
याग् ( याग )=यज्ञ
याद् ( याद )=सम्झना
याहि=यो नै
युक्ति=उपाय, नियम
योग् ( योग )=मन चञ्चल हुन न दिने उपाय । योग तीन प्रकारका छन् ( १ ) नाना प्रकारका आसन द्वारा गरिने हठयोग, ( २ ) भक्ति द्वारा गरिने राजयोग, ( ३ ) निष्काम कर्म द्वारा गरिने कर्मयोग
योगि ( योगी )=तपस्या गर्ने मानीस
योगी=हेर्नु योगि
योग्य=सुहाउँदो, उचित
योग्यै ( योग्य )=ऐ०
योद्धा=लड़ाई गर्ने सिपाही
योनी ( योनि )=भग, जुनी, चौरासी लाख जुनी छन् भन्ने प्रसिद्ध छ
यौवन् ( यौवन )=बैंस, तन्देरी अवस्था
यौवन=हेर्नु यौवन्

र

रक्षण=रक्षा
रघुनाथ् ( रघुनाथ )=रघुकुलका मालीक रामचन्द्र
रघुपते=हे रघुवंशका मालीक
रघुपते=हे रघुकुलका मालीक
रङ् ( रङ )=धरी
रज ( रजस् )=रजोगुण, भोग विलास गर्ने तथा शक्ति देखाउने प्रवृत्ति भयेको गुण
रजस्=हेर्नु रज
रटना=ब्याउन्न
रत=लग्गु हुनु
रति=राती गेडी जती, अलीकता
रत्नै ( रत्न )=हीरा मोती आदि दामी टल्कने ढुगाहरु
रमणीय=रमाइलो
रमा=लक्ष्मी
रमानाथ् ( रमानाथ )=लक्ष्मीका पति विष्णु तर सीतालाई रामायणमा लक्ष्मी मानेको हुदा रामचन्द्र
रमापति=लक्ष्मीका पति विष्णु तर रामायणमा रामचन्द्र
रस् ( रस )=आनन्द
रसद् ( रसद )=खाने अन्न
रस्ता ( रास्ता )=बाटो
रस्ति ( रास्ता )=बाटो
रहस्य=गुप्ती कुरा
रही=भई
रहु ( रहो )=रस
राक्षसास्त्र=दानवको हतियार

राग् ( राग )=अनुरक्ति, प्रेम
राघव ( राघव )=रघुका वंशमा जन्मेका रामचन्द्र
राजधानी=राजा बस्ने नगर
राजन्=हे राजा
राजपत्नि ( राजपत्नी )=राजाकी स्वास्नी
राजर्षी ( राजर्षि )=क्षत्रिय जातका मुनि
राज्यअभिषेक् ( राज्याभिषेक )=राज तिलक गर्दा जल छर्की गर्ने विधि
रात्रि ( रात्री )=रात
राम्चरण ( रामचरण )=रामको पाउ
राम्नवमी ( रामनवमी )=चैतका शुक्ल पक्षको नवौं दिन जुन दिन रामचन्द्रको जन्म भयेको थियो ।
रामावतार् ( रामावतार )=ईश्वरले राम चन्द्रको रूप धारण गरेको
रिपु=शत्रु
रिपू ( रिपु )=हेर्नु रिपु
रीषी ( ऋषि )=हेर्नु ऋषि
रुद्र=महादेव, महादेवको डर लाग्दो रूप, रुद्र बारह छन्
रे=डाकुता आफु भन्दा सानोलाइ हेला या माया गरेर प्रयोग हुने पद
रेतै ( रेत )=शुक्र
रैयत=रैती
रैयति ( रैयत )=हेर्नु रैयत
रोक्या=( रोकना ) छेके
रोज् ( रोज )=दिनहुँ
रोम=रौं

ल

लक्षण् ( लक्षण )=छाँट, चिह्न, गुण
लक्षण=हेर्नु लक्षण्
लक्ष्मि ( लक्ष्मी )=धनकी देवी, धन
लगाई=लाई
लगायर=लायेर
लग्न=शुभ साइत
लच्क्या ( लचकना )=निहुरे
लडाकी=लडाई गर्ने सिपाही
लडिका ( लडका )=बालक
लस्कर=फौज
लायक=योग्य
लायेक् ( लायक )=ऐ०
लाल् ( लाल )=रातो
लाल=हेर्नु लाल्
लावा=भुटेको धान, यो शुभ अन्न ठानिन्छ औ मङ्गलका वेलामा छरिन्छ
लिङ्ग=शिश्नका आकारको महादेवको मूर्ति, पुरुष चिह्न
लीन् ( लीन )=लय
लीला=क्रीडा
लीलादि=क्रीडा इत्यादि
लुब्ध=लोभी
लेश=किञ्चित्
लैगि=लगी
लोक् ( लोक )=संसार, मानीस
लोककण्टक=संसारका काडा
लोकजननी=संसारकी आमा
लोक्पाल् ( लोकपाल )=दिग्पाल
लोकपाल् ( लोकपाल)=ऐ०
लोह ( लोह )=फलाम
लोहदण्ड=फलामको लहुरो
लोहस्तम्भ=फलामको खाँबो

व

वंश=कुल
वखत ( वख्त )=समय
वचन् ( वचन )=बोली
वज्र=इन्द्रको साह्रै ठूलो हतियार

वडवानल् ( वडवानल )=पानी भित्र बल्ने आगो
वत्स=हे नानी, हे बाबु, प्यारो गर्दा भनिने
वर् ( वर )=इच्छा पूर्ण होस् भन्ने वचन, मागेको कुरा दिएको
वर=हेर्नु वर्
वराह=बनेल
वर्ण=जात, वर्ण चार छन्, ब्राह्मण, क्षत्रिय, वैश्य, शूद्र
वर्णाश्रम् ( वर्णाश्रम )=चार जात तथा चार आश्रम
वर्त ( व्रत )=साधन
वर्ष=साल
बलात्कार=बलजफ्ती
वल्कलै ( वल्कल )=रुखका बोक्रा
वलि=लहरा
वल्ली ( वलि )=हेर्नु वलि
वश=अधीन
वस्त्र=लुगा
वस्त्राभूषण=लुगा तथा गहना
वाक्=बोली
वाक्य=कुरा
वाक्यार्थ=पद समूहको अर्थ
वाचक=पढ्ने मानिस,
वाजीसा=चौटा उपनिषद्को नाउँ
वाटिका=सानो फुलबारी
वाणि ( वाणी )=सरस्वती, बोली
वाणी=हे सरस्वती
वाम् ( वाम )=देब्रे
वामन् ( वामन )=बाउन्ने
वायव्यास्त्र=वायुरूपी हतियार
वायू ( वायु )=हावा, हावाका देवता
वार् ( वार )=फटक
वार्ता=कुरा
विकारी=परिवर्तन हुने
विघ्न=बाधा
विज्ञान् ( विज्ञान )
विदारि=चिरी, छेडी
विद्या=ज्ञान
विद्याधर् गण ( विद्याधरगण )=तल्लो श्रेणीका देवताहरूको समुदाय
विधान् ( विधान )=विधि
विधि=भाग्य, नियम, रीति
विनति=प्रार्थना
विनती ( विनति )=ऐ०
विन्ध्याचल् ( विन्ध्याचल )=विन्ध्य नामक पर्वत जो उत्तर तथा दक्षिण भारतका सीमामा छ
विनाश ( विनाश )=ध्वंस
विनाश्या=ध्वंस गरे
विप्र=बाहुन
विप्रपत्नि (विप्रपत्नी )=बाहुनकी स्वास्नी
विपत् ( विपत्ति )=दुःख
विपत्ति=दुःख
विपत्ती ( विपत्ति )=हेर्नु विपत्ति
विभूषण=गहना
विमान् ( विमान )=आकाशमा उड्ने यान
वियोग=बिछोड
विरक्त=वैराग्य
विरक्तै ( विरक्त )=वियोगी
विरह=वियोगको दुःख
विराज्मान् ( विराजमान )=राज गरेका
विराट्=ठूलो, विशाल
विलाप् ( विलाप )=विलौना
विवेक=सत् तथा असत् छुट्याउने बुद्धि
विरोध ( विरोध )=मनुवा, विरोध

विशाल=ठुलो
विश्वकर्मा=देवताहरूको घर बनाउने कमा
विश्वात्मा=ईश्वर
विश्वादि=ब्रह्माण्ड इत्यादि
विषय=इन्द्रियका भोगको कुरा
विषे=मा, कवितामा मात्र प्रयोग हुन्छ
विष्टा=गुहु
विष्णूद्वेषि ( विष्णुद्वेषी )=विष्णुको निन्दा गर्ने
विस्तार् ( विस्तार )=वर्णन
विहकै=अन्याय
विह्वल्=व्याकुल
विह्वल=ऐ०
वीर्य=शुक्र, वेत
वीर्य्यपात् ( वीर्यपात )=शुक्र खस्नु
वृक्षादि=रूख इत्यादि
वृत्तान्त=वर्णन
वृत्ति=पेशा, व्यवसाय
वृद्ध=बुढो
वृद्धा=बुढी
वृद्धि=उन्नति
वृषदान् ( वृषदान )=साँढको दान
वृष्टि=वर्षा
वृष्टी ( वृष्टि )=देर्नु वृष्टि
वेग् ( वेग )=छिटो गति
वेताल् ( वेताल )=भूत
वेद=हिन्दुहरूले अपौरुषेय मानेका चार ग्रन्थ, जिनका नाम इनै हुन् ऋक्, यजुर्, साम, अथर्व
वेदविधान=वैदिक नियम
वेदसोर्प=वेद टाउकामा राख्ने मानीस, ज्ञानी
वेदाङ्ग=वेदका अङ्ग रूप ■ शास्त्र, शिक्षा, कल्प, व्याकरण, निरुक्त, ज्योतिष तथा छन्दलाई वेदाङ्ग भन्छन्,
वेदान्ते ( वेदान्त )=षड् दर्शन अर्थात् साङ्ख्य, योग, न्याय, वैशेषिक, मीमांसा, वेदान्त मध्ये एक दर्शन। जस्मै सिर्जना मिथ्या हो तथा एक ईश्वर नै साँचा हुन् भन्ने यसको सिद्धान्त छ।
वेदार्थ=वेदको अर्थ
वेश्यै ( वेश्या )=रण्डी
वैतनि ( वैतरणी )=नरकको चौडा नदीको नाम
वैरि ( वैरी )=शत्रु
व्यतित् ( व्यतीत )=बित्नु
व्यर्थै=वृथा
व्यर्थ ( व्यर्थ )=ऐ०
व्याख्यान=बोलेर बुझाउनु
व्याध् ( व्याधि )=शारीरिक रोग
व्याधा ( व्याध )=पशुपक्षी मार्ने वृत्ति भयेको मान्छे
व्रतबन्ध=ब्राह्मन, क्षेत्री तथा वैश्यले जनै लाउने कर्म, उपनयन
व्रती=कुनै प्रण गरी त्यो प्रण पालन गरी बस्ने मानीस
व्रतै ( व्रत )=सङ्कल्प

श

शक्ति=एक प्रकारको मन्त्र द्वारा प्रयोग गरिने हतियार
शक्ती ( शक्ति )=ऐ०
शङ्कित् ( शङ्कित )=सन्देहले युक्त
शङ्कै ( शङ्का )=सन्देह
शत्रुदल् ( शत्रुदल )=शत्रुको पक्ष
शपथ् ( शपथ )=किरिया
शमन् ( शमन )=शान्त

शम्भो=हे महादेव
शयन् ( शयन )=ओछयान, खाट
शर् ( शर )=काँड
शर=काँड
शरण् ( शरण )=पीठ
शरद्काल् ( शरद्काल )=असोज तथा कार्तिक महिना
शरवृष्टि=वाणका वर्षा
शस्त्र=हतियार
शस्त्रास्त्र=हथियारहरु
शस्यादि=धान इत्यादि
श्याम् ( श्याम )=काला
शान् ( शान )=तुजुक
शान=मस्ती, गर्व
शान्ता मा=शान्त बुद्धि भएको मान्छ
शान्ती ( शान्ति )=शमन
शालग्राम् ( शालग्राम )=पश्चिम काली गण्डकी या शालिग्राममा पाइने एक प्रकारका ढुङ्गा जो चिल्ला ढुगा जसलाई विष्णु भनी पूजा गरिन्छ
शास्त्रै ( शास्त्र )=विद्या
शिशपा=सिसौको रुख
शिम्बा=जता
शिखर् ( शिखर )=टुप्पो
शिला=ढुंगा
शिष्य=चेला
शीतल् ( शीतल )=चिसो
शुद्ध=चोखो, पवित्र
शुद्धात्मा=पवित्र बुद्धि भयेका
शुभलोक=राम्रो लोक
शुभाशुभ=भल्लो जौ कुभलो
शूद्र=सेवा गर्न मान्छका जात
शून्य=रित्तो
शेष् ( शेष )=समुद्रमा विष्णु जुन नाग माथी सुत्छन् तिनका नाउ, बाकी
शोक् ( शोक )=सुता
शोभा=सुन्दरता
शोषण=सोस्नु, सुकाउनु
श्राद्ध=पितृलाई उनीहरु मरेका तिथिमा गरिने पिण्ड दिने क्रिया
श्राप् ( शाप )=अर्काको कुभल्लो होस् भन्ने वाणी
श्रिये=हे मङ्गल युक्त भयेकी
श्री=तेज, कान्ति, लक्ष्मी
श्रीपति=लक्ष्मीका पति विष्णु
श्रुति=वेद
श्रुती ( श्रुत )=ऐ०
श्रेय=कल्याण
श्लोक् ( श्लोक )=पद्य

## ष

षट्=छ

## स

सयोग् ( सयोग )=मौका
सवाद् ( सवाद )=समाचार, कुरा
सशय=शङ्का
ससारसागर=ससाररूपी समुद्र
ससारि ( ससारी )=ससारको मान्छे
सस्कार् ( सस्कार )=शुद्ध हुने काम
सहार् ( सहार )=नाश
सकल=सबै
सङ्कट=अप्ठ्यारा, दुःख
सक्रम=ऐ
सखेप् ( सखेप )=छोटकरी
सखा=साथी

सखे=हे साथी

सगुण् ( सगुण )=इन्द्रियले अनुभव गर्न सक्ने वस्तु

सङ्कल्प=दृढ निश्चय

सग्राम=लड्दाई

सच्चित्=सत्य तथा ज्ञानले युक्त भयेका

सच्चिदात्मा=सत्य तथा ज्ञानले युक्त ईश्वर

सज्जन् ( सज्जन )=भलो मान्छे

सत्=सज्जन

सत्कर्म=असल काम

सत्काम्=राम्रो काम

सत्कार्=मान मनितो

सत्य=साँचो

सत्लोक्=सत्यलोक

सत्व=राम्रो कुरा तिर प्रवृत्त गराउने गुण

सत्सङ्ग=भलो मान्छेको सगत

सदा=सधैं

सदाशिव ( सदाशिव )-महादेव

सधाद=धान्नु

सधेन=लागेन

सनक् ( सनक )=चौलढो

सन्त-सज्जन

सन्ताप् ( सन्ताप )=चिन्ता, फिक्री

सन्ताप=ऐ०

सन्देह=शङ्का

सन्निधि=नजीक

सन्यासि=ससार त्याग गरी हिंड्ने मानीस

सन्यासि ( सन्यासी )=जनै औ टुपी काटी चारौं आश्रममा प्रवेश गरेको मान्छे,

सपत्नि ( सपत्नी )=पत्नीसहित

सप्तर्षि=सात मुनि जसका नाम मरीचि, अत्रि, अङ्गिरस्, पुलस्त्य, पुलह, ऋतु तथा वशिष्ठ हुन्

सफल् ( सफल )=चितायेको कुरा पुग्नु

सभा=रेही कुरो विचार गर्न जम्मा भयेको मानीसहरुको समुदाय

सम=समान

समचार ( समाचार )=हाल खबर

समर्थ=वल, योग्य

समर्पण=चढाउनु, सुम्पनु

सम्पूर्ण=सब

समाधि=चारै तिर वाट मनको गति मोहोरी ईश्वरमा एक चित्त भै रहने अवस्था

समाधी ( समाधि )=ऐ०

सामप ( समीप )=नजीक

सयल् ( सैर )=साथी भाइ मिली कतै जानु, माज

सराप=रीसले भनेको साँचो हुने कुरो

सरूप ( स्वरूप )=आफ्नो रूप वा भेष

सरूपधारी ( स्वरूपधारी )=रूप लियेको

सवार् ( सवार )-हजुर

सर्वज्ञ=सबै थोक जान्ने ईश्वर

सर्वत्र=सबै ठाउँ

सर्वरूपी=सबैको रूप भयेका

सर्वव्यापी=सबै ठाउँ भयेका ईश्वर

सर्वस्व=सम्पूर्ण आफ्नो सम्पत्ति

सर्वाङ्ग=शरीरका सबै भाग

सर्वात्मा=सबैको आत्मा भयेका ईश्वर

सर्वान्तरात्मा=सबैको भीत्र आत्मा भयेर रहने ईश्वर

सर्वान्तयामि ( सर्वान्तर्यामी )=सबैका भीत्र विचरण गर्ने ईश्वर

सर्वास्त्र=सबै हतियार
सर्वेश्वर् ( सर्वेश्वर )=सर्व सामर्थ्य भयेका
सहज् ( सहज )=सजिलै
सहस्र=एक हजार
सहाय=सहायता, मदद
सहित् ( सहित )=समेत
साक्षात्=सशरीर, आफैं
साक्षि ( साक्षी )=साक्षी हैं आत्मा स्वरूपले मानीसमा बस्ने ईश्वर
साक्षी=ऐ०
सागर् ( सागर )=समुद्र
साधन् ( साधन )=क्रिया, उपाय
साधन=हेर्नु साधन्
साधना=क्रिया, उपाय
सान्तानिक=सन्तान हुने लोक
साफ् ( साफ )=चोखो पनी बाँकी न रहेको, सब
साफि ( साफी )=रुमाल
साभा ( सभा ) हेर्नु सभा
साम्ने ( सामने )=अघिल्तिर, अगाडी
सामान्य=साधारण
सायुज्ये ( सायुज्य )=जीव ईश्वरमा एक भयेर लीन हुने एक प्रकारको मुक्ति
सार=मूल तत्त्व
सारथी=रथ हिंडाउने मान्छे
साहाय ( सहाय ) हेर्नु सहाय
साहेब ( साहिब )=मालीक
सितारा (सितार)=एक प्रकारको बाजा
सिद्ध=विफल न हुने, पूर्ण
सिद्धगण=अष्ट सिद्धि प्राप्त भयेका स्वर्गीय जीवहरूको समुदाय
सिद्धि=पूर्णता, सफलता, अणिमा, लघिमा, प्राप्ति, प्राकाम्य, महिमा, ईशित्व, वशित्व, कामावसायिता नामक आठ सिद्धि छन्
सिन्धु=समुद्र
सीतानाथ् ( सीतानाथ )=सीताका पति रामचन्द्र
सीते=हे सीता
सुकुला=सुलुलु अर्थमा मान गर्दा यसै भनिन्छ
सुकुमार् ( सुकुमार )=कोमल
सुत् ( सूत )=सारथी
सुत=छोरा
सुन्दर् ( सुन्दर )=राम्रो
सुन्दरि ( सुन्दरी )=राम्री
सुमती ( सुमति )=राम्रो बुद्धि भयेको
सुमेरु=योटा पौराणिक पर्वतको नाउँ
सुवर्ण=सुन
सुषुप्ति=घोर निद्रामा सपना पनी न देखिने अवस्था
सूक्ष्म=अत्यन्त सानो
सूचन् ( सूचना )=सङ्केत
सूत् ( सूत )=सारथी
स्रुवो=होम गर्दा अग्निमा घिउ हाल्ने हातको आकारको काठको दाडु
सूर्यकिरणै ( सूर्यकिरण )=सूर्यको रश्मि
सृष्टि=सिर्जना
सृष्टी=( सृष्टि )
सेखी=घमण्ड
सेतु=साङु
सेतु ( सेतु )=हेर्नु सेतु
सेवा=चाकरी
सैन्य=सेना, फौज
सोख् ( शौक )=सुख, मोज

सौख्य=सुख
स्तन् ( स्तन )=दुद
स्तुति=प्रशंसा
स्तुती ( स्तुति )
स्त्रीघात् ( स्त्रीघात )=स्वास्नी मान्छेको हत्या
स्थल् ( स्थल ) ठाउँ
स्थल=हेर्नु स्थल्
स्थलै ( स्थल ) ऐ०
स्थापन् ( स्थापन )=थाप्नु
स्नान=नुहाउनु
स्थावर् ( स्थावर )=न हिंड्ने एक ठाउँमा नै बसी रहने जस्तै रूख
स्थूलोपाधि=शरीर
स्पर्श=छुनु
स्फटिक् ( स्फटिक )=एक प्रकारको सेतो टल्कने ढुंगा, फटिक
स्मरण् ( स्मरण )=सम्झना
स्मरण=हेर्नु स्मरण्
स्मृति=धर्मशास्त्र
स्वप्न=सुतेका बेलामा सपना देख्ने अवस्था, सपना
स्वयम्प्रभा=आफ्नै तेजले प्रकाशमान् भयेकी
स्वर् ( स्वर )=अवाज
स्वरूप् ( स्वरूप )=आफ्नो रूप
स्वर्ग ( स्वर्ग )=देवताहरू बस्ने लोक
स्वस्थ=निरोग अवस्था
स्वस्थै=( स्वस्थ ) ऐ०
स्वाभीष्ट=आफुले इच्छा गरेको

ह

हंस=हाँस
हजुर=त, तिमी तथा तपाईंका सट्टा मान्य लाई प्रयोग गरिने शब्द
हतांई=पछाई
हरफ् ( हरूफ )=चित्रकारी, अक्षर
हरीप् ( हरीफ )=दुष्ट
हर्षाश्रुधारा=खुशीका आँसुका बलिन्द्रा
हवाल् ( हवाला )=हाल, प्रमाण समेत वर्णन
हवी ( हवि )=यज्ञको चरु या पिठ
हवेलि ( हवेली )=पक्की ठुलो घर
हाजिर् ( हाजीर )=उपस्थित
हाजिर ( हाजीर )
हार=माला
हास्यरस=ख्यालठट्टा
हाहा=ठुलो दु:ख
हिंसा=काटमार
हिकमत् ( हिकमत )=साहस
हिकमति ( हिकमती )=साहसी
हित् ( हित )=भलो
हीत ( हित )=ऐ०
हीन् ( हीन )=नीच सानो
हीमाऽलै ( हिमालय )=हिउँले छोपियेको भारतका उत्तर सीमाको पर्वत
हुर्मत् ( हुरमत )=इज्जत
हुकुम् ( हुक्म )=आज्ञा
हृदयार्विन्द (हृदयारविंद)=कमलरूपी मुटु
हृदय=मुटु, छाती
हेतु=कारण
हेतु ( हेतु )=ऐ०
हे माइ=हे आमा
हेलन=हेला
होम् ( होम )=आगोमा अन्न हाली गरेको यज्ञ

# शुद्धिपत्र

| पृष्ठ | श्लोक | पङ्क्ति | अशुद्ध | शुद्ध |
|---|---|---|---|---|
| ९ | २४ | ३ | हनुमान् | हनुमन् |
| ११ | ४० | ४ | हनुमान् | हनुमन् |
| १४ | ५६ | ५ | भगवान् | भगवन् |
| १५ | ५८ | ६ | भगवान् | भगवन् |
| २४ | ९२ | ४ | रघुनाथ | रघुनाथ् |
| ऐ० | ९५ | ४ | श्रीरामचन्द्रजिले | श्रीराम्चन्द्रजिले |
| ३० | ११८ | ४ | सब | सब् |
| ३२ | १०० | ४ | जसको | जस्को |
| ऐ० | ऐ० | ऐ० | भगवान् | भगवन् |
| ३४ | १२५ | ४ | प्रभु | प्रभो |
| ३५ | १२७ | ४ | भोग | भोग् |
| ऐ० | ऐ० | ऐ० | रामले | राम्ले |
| ३६ | १ | ३ | आत्मामार्ग | आत्म्मार्ग |
| ३७ | ७ | ४ | काम | काम् |
| ४० | १६ | ० | नेम | नेम् |
| ४२ | २५ | २ | आवस | आवस् |
| ४८ | ४९ | ३ | तिर | तिर् |
| ४९ | ५३ | ४ | सेनर | सेनर् |
| ऐ० | ऐ० | ४ | वनमा | वन्मा |
| ५० | ५६ | ४ | सब | सब् |
| ५२ | ६५ | १ | जगन्नाथ | जगन्नाथ् |
| ५४ | ७२ | [illegible] | चिह्न | चिह्न |
| ५५ | ७७ | ६ | लक्ष्मण | लक्ष्मण् |
| ५६ | ८१ | १ | हुन | हुन् |

| पृष्ठ | श्लोक | पङ्क्ति | अशुद्ध | शुद्ध |
|---|---|---|---|---|
| १५७ | ९९ | २ | पाँच | पाँच् |
| १६३ | १२१ | २ | महागज् | महराज् |
| १७२ | २ | १ | श्रीरघुनाथ | श्रीरघुनाथ् |
| १८१ | ३८ | ३ | महाराज् | महराज् |
| १८२ | ४३ | १ | महाराज् | महराज् |
| ऐ० | ऐ० | ४ | शरण | शरण् |
| १९१ | ८१ | ३ | भन | भनी |
| १९४ | ९२ | १ | नाह्मण | ब्राह्मण् |
| २०३ | १२६ | ४ | हुकुम् | हुकुम |
| २०८ | १३२ | १ | महाराज् | महराज् |
| २१८ | १९० | ३ | रघुनाथ | रघुनाथ् |
| २३१ | २४० | २ | फिर | फिर् |
| २३९ | २७५ | ३ | जम्मा | जम्मा |
| २५२ | ३२४ | ४ | हनुमान् | हनुमन् |
| २६८ | ६ | ४ | कनक | कनक् |
| २७८ | ४५ | ४ | तर | तर् |
| २७९ | ५० | ४ | खुप | खुप् |
| २८१ | ६७ | ४ | खुर | खुप् |
| २८२ | ६४ | ४ | सुवर्णरहन | सुवर्णरहन |
| २६० | ११३ | २ | महाधन | महराज |
| ३०६ | १५८ | ४ | जम्मा | जम्मा |
| ३१२ | १८३ | २ | परिछिन् | पर्छिन् |
| ३१९ | २१३ | १ | चरणमा | चरण्मा |
| ३२२ | २२४ | ३ | भीम | भिम |
| ऐ० | ऐ० | ४ | भीम | भिम |
| ३२३ | २२६ | १ | इच्छाभोजनमा | इच्छा भोजनमा |
|  | २५२ | १ | भेत्र | भेत्र |